# कालिका

## मुखपत्र तेह्रौं अङ्क २०८०









**कालिका मानवज्ञान माध्यमिक विद्यालय**

बुटवल १०, रुपन्देही




# कालिका मुखपत्र तेह्रौं अङ्क-२०८०

**संरक्षक**
नित्यानन्द ज्ञवाली

**प्रमुख सल्लाहकार**
दिनेश थापा

**सल्लाहकार**
पिताम्बर बन्जाडे    लोकराज घिमिरे

**कालिका मुखपत्र प्रकाशन समिति-२०८०**

**संयोजक**
युवराज कंडेल

**सदस्यहरू**
सुदर्शन रेग्मी    ज्ञानेश्वर आचार्य



**कालिका मानवज्ञान माध्यमिक विद्यालय**
बुटवल १०, रुपन्देही
फोन नं. ०७१-४३७३९२, फ्याक्स: ०७१-४३७०७२, ५४४९०१
नोटिस बोर्ड नं १६१८००७१४३७३९२
E-mail: kalikass.butwal2018@gmail.com
Website: www.kalikaschoolbtl.edu.np



## राष्ट्रिय गान

सयौं थुङ्गा फूलका हामी एउटै माला नेपाली।
सार्वभौम भई फैलिएका मेची-महाकाली॥

प्रकृतिका कोटि-कोटि सम्पदाको आँचल।
वीरहरूको रगतले स्वतन्त्र र अटल॥

ज्ञानभूमि, शान्तिभूमि, तराई, पहाड, हिमाल।
अखण्ड यो प्यारो हाम्रो मातृभूमि नेपाल॥

बहुल जाति, भाषा, धर्म, संस्कृति छन् विशाल।
अग्रगामी राष्ट्र हाम्रो जय जय नेपाल॥



शुक्लां ब्रह्मविचारसारपरमामाद्यां जगद्व्यापिनीं
वीणापुस्तकधारिणीमभयदां जाड्यान्धकारापहाम् ।
हस्ते स्फाटिकमालिकां च दधतीं पद्मासने संस्थितां
वन्दे तां परमेश्वरीं भगवतीं बुद्धिप्रदां शारदाम् ॥



काठमाडौं, नेपाल

प्रधानमन्त्री

## शुभकामना

विक्रम संवत् २०१८ मा स्थापित श्री कालिका मानवज्ञान माध्यमिक विद्यालय, बुटवल-१०, रुपन्देहीले वार्षिकोत्सव तथा अभिभावक दिवस मनाउन लागेको र सो अवसरमा विद्यालयको इतिहास तथा गतिविधि समेटी मुखपत्र प्रकाशन गर्न लागेकोमा खुशी लागेको छ।

देशको सर्वाङ्गीण विकासको मूल आधार शिक्षा हो। व्यक्तिको सर्वाङ्गीण विकास गरी असल, योग्य, सक्षम, प्रतिस्पर्धी र उत्पादनमुखी जनशक्ति तयार गर्दै देशमा दिगो शान्ति, सुशासन, विकास र समृद्धि हासिल गर्न शिक्षाको अहम् भूमिका रहन्छ। सीपमूलक, वैज्ञानिक, व्यवहारिक एवम् गुणस्तरीय शिक्षा आजको आवश्यकता हो। शिक्षा प्राप्त गर्ने प्रत्येक व्यक्तिको आधारभूत मौलिक हकलाई व्यवहारमा कार्यान्वयन गर्न, सङ्घीय लोकतान्त्रिक गणतन्त्रको मान्यता अनुरुप शिक्षामा सबैको सरल, सहज र समतामूलक पहुँच सुनिश्चित गर्न एवम् शिक्षालाई सर्वव्यापी, जीवनोपयोगी, प्रतिस्पर्धी एवम् गुणस्तरीय बनाउन सरकार निरन्तर लागि परेको छ।

शिक्षा क्षेत्रमा गौरवपूर्ण शैक्षिक इतिहास बोकेको यस विद्यालयलाई अहिलेको अवस्थामा ल्याउन सहयोग पुऱ्याउनुहुने सबै शिक्षाप्रेमी, समाजसेवी, अभिभावक, शिक्षक तथा विद्यार्थीहरूप्रति धन्यवाद ज्ञापन गर्दछु। यस विद्यालयले गुणस्तरीय, व्यवहारिक र समयसापेक्ष शिक्षासहित शिक्षा क्षेत्रमा सबैको पहुँच पुऱ्याउन आगामी दिनमा अझै महत्वपूर्ण भूमिका खेल्ने विश्वास लिएको छु।

अन्त्यमा, विद्यालयले वार्षिकोत्सवको अवसरमा प्रकाशन गर्न लागेको "कालिका मुखपत्र -२०८०" सङ्ग्रहणीय, खोजमूलक र ज्ञानवर्धक दस्तावेज बन्न सकोस् भन्ने अपेक्षासहित विद्यालयको वार्षिक उत्सव र मुखपत्र प्रकाशनको पूर्ण सफलताको शुभकामना व्यक्त गर्दछु।

२६ मङ्सिर, २०८०

पुष्पकमल दाहाल 'प्रचण्ड'





श्री अशोक कुमार राई
माननीय मन्त्री
शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय
सिंहदरबार, काठमाडौं, नेपाल



Mr. Ashok Kumar Rai
Hon'ble Minister
Ministry of Education, Science and Technology
Singhadurbar, Kathmandu, Nepal



पत्र संख्या/Let.No.:
चलानी नं./Ref. No.:

## शुभकामना

कालिका मानवज्ञान माध्यमिक विद्यालय, बुटवल-१०, रुपन्देहीले ६३ औं वार्षिक उत्सव तथा अभिभावक दिवस २०८० को अवसरमा कालिका मुखपत्र १३ औं अङ्क प्रकाशन गर्न लागेको थाहा पाउँदा खुशी लागेको छ।

रुपन्देही जिल्लामा अवस्थित यस विद्यालयमा हाल देशमै सबैभन्दा धेरै ८,०५३ विद्यार्थी अध्ययनरत रहेको र नेपालकै सर्वोत्कृष्ट सामुदायिक विद्यालयको रुपमा आफ्नो पहिचान बनाउँदै २०७३ र २०७९/०८० सालमा नेपाल प्रथम भई लगातार राष्ट्रिय ध्वजासहित पुरस्कृत एवम् सम्मानित हुन सफल भएकोमा मलाई हर्षित बनाएको छ। यस विद्यालयले गुणस्तरीय शिक्षा प्रदान गर्न खेलेको भूमिकाको सराहना गर्दै आगामी दिनहरुमा पनि सामुदायिक विद्यालयहरु माथिको विश्वास र भरोसालाई अझ भरपर्दो बनाउन महत्वपूर्ण जिम्मेवारी पुरा गर्ने विश्वास लिएको छु।

अन्त्यमा, विद्यालयको शैक्षिक, भौतिक, आर्थिक पक्ष साथै विभिन्न शैक्षिक एवम् साहित्यिक लेख रचना र विविध गतिविधि सहित प्रकाशन हुन लागेको **"कालिका मुखपत्र"** प्रकाशन सफलताको हार्दिक शुभकामना व्यक्त गर्दछु।

धन्यवाद !

मिति: २०८० मंसिर २६ गते

मा. अशोक कुमार राई
मन्त्री

फोन नं.: ९७७-०१-४२००३५३ | फ्याक्स नं.: ९७७-०१-४२००३७३ | वेबसाइटः www.moest.gov.np
Tel No.: 977-01-4200353 | Fax No.: 977-01-4200373 | Website: www.moest.gov.np

विष्णुप्रसाद पौडेल
सदस्य, प्रतिनिधिसभा, रुपन्देही - २



Bishnu Prasad Paudel
Member, House of Representatives, Rupandehi – 2

## शुभकामना

वि.स.२०१८ सालमा विश्वशान्ति प्राथमिक विद्यालका नामबाट स्थापित कालिका मानवज्ञान माध्यमिक विद्यालय नेपाालकै सर्वोकृष्ट सामुदायिक विद्यालयको रुपमा आफ्नो पहिचान बनाउदै वि.स.२०७३ र २०७९/२०८० सालमा नेपाल प्रथम भई लगातार राष्ट्रिय ध्वजासहित पुरस्कृत एवं सम्मानित हुन सफल यस कालिका मानवज्ञान माध्यामिक विद्यालय बुटवले ६३ औं वार्षिक उत्सव तथा अभिभावक दिवस २०८० को अवसरमा कालिका मुखपत्र १३ औं अङ्क प्रकाशन गर्न लागेको जानकारी पाउँदा खुशी लागेको छ।

२०१८ सालमा प्राथमिक, २०२९ सालमा निम्न माध्यमिक र २०३२ सालमा माध्यमिक तहको स्वीकृत प्राप्त गरी २०६५ सालमा कक्षा ११ र १२ को सम्बन्धन प्राप्त गरी आफ्नो शैक्षिक यात्रा सुरु गरेको कालिका माध्यमिक विद्यालय र २०४१ सालमा स्थापना भई कक्षा नर्सरी देखि कक्षा १२ सम्म सञ्चालन भएको मानवज्ञान माध्यमिक विद्यालय २०७५ बैशाख १ गतेदेखि एब आपसमा मर्जर (समायोजन) भई हाल कालिका मानवज्ञान माध्यमिक विद्यालयको रुपमा नामाकरण भई साविकको कालिका माध्यमिक विद्यालय सेक्टर १ र साविकको मानवज्ञान माध्यमिक विद्यालय सेक्टर २ को रुपमा सञ्चालनमा भइरहेको यस सामुदायिक विद्यालयमा देशमै सबैभन्दा धेरै ८०५३ विद्यार्थी अध्ययनरत रहनु देशकै लागि अनुकरणीय शिक्षा हो। वार्षिक १८००० भन्दा वढी आगन्तुकहरुले यस विद्यालयको अवलोकन भ्रमण गर्नु भनेको यस विद्यालयले प्रदान गर्दै आएको गुणस्तरीय शिक्षाको पुष्टि हो।

गुणस्तरीय शिक्षा प्रदान गरी देशकालागि आवश्यक जनशक्ति उत्पादनमा महत्वपूर्ण भुमिका खेल्नमा योगदान गर्नुहुने सबैमा आभार प्रकट गर्दछु। समुदाय, अभिभावक, शिक्षक, विद्यार्थी र विद्यालय व्यवस्थापन समितिको सामुहिक प्रयासको प्रतिफल नै हालको कालिका मानवज्ञान माध्यमिक विद्यालयको आधार हो भन्ने मेरो ठम्याई रहेको छ। नागरीकको साझा संकल्प र कुशल नेतृत्वले मात्र सामुदायिक विद्यालयको गुणस्तर र स्तर उकास्न सकिन्छ भन्ने मान्यता स्थापित गर्न सफल यस विद्यालयले अपनाएका असल अभ्यासहरु देशका अन्य विद्यालयहरुका लागि अनुसरणीय विषय मात्र नभई नीति निर्माण तहमा समेत सकारात्मक प्रभावको रुपमा ग्रहण हुनु पर्छ भन्ने मेरो धारणा रहदै आएको छ।

विद्यालयमा अध्ययनरत विद्यार्थी, शिक्षक, अभिभावक, शिक्षाविद, पूर्व विद्यार्थीका विभिन्न शैक्षिक एवं साहित्यिक र अनुसन्धानमूलक लेख रचना, विभिन्न गतिविधि सहित विद्यालयको शैक्षिक, भौतिक, आर्थिक तथा आगामि योजना समेटी प्रकाशन भएको यस विद्यलयको कालिका मुखपत्रले एक स्तरीय अभिलेखको स्थान समेत लिनेछ भन्ने विश्वास समेत लिएको छु। अन्तमा कालिका मानवज्ञान माध्यमिक विद्यालय, यससंग सम्बन्धित विद्यार्थी, शिक्षक, कर्मचारी, समस्त अभिभावकहरु प्रति सम्मान प्रकट गर्दै विद्यालयको उत्तरोत्तर प्रगतिको शुभकामना व्यक्त गर्दछु।

विष्णुप्रसाद पौडेल
सदस्य, प्रतिनिधिसभा रुपन्देही २

मिति २०८० मंसिर २६





लुम्बिनी प्रदेश सरकार

**सामाजिक विकास मन्त्रालय**

राप्ती उपत्यका (देउखुरी), नेपाल

निजी सचिवालय
मा. चन्द्रकेश गुप्ता
मन्त्री

प.सं:
च.नं:

मितिः

## शुभकामना

रुपन्देही जिल्ला बुटवल उपमहानगरपालिका वार्ड न. १० स्थित नेपालकै उत्कृष्ट कालिका मानवज्ञान माध्यमिक विद्यालयले आफ्नो ६३औं वार्षिकोत्सवको अवसरमा **'कालिका मुखपत्र-१३ औं अंक'** प्रकाशन गर्न लागेको थाहा पाउँदा मलाई खुसी लागेको छ। यो मुखपत्रले विद्यालयका शिक्षक, विद्यार्थी तथा अभिभावकहरूका लागि एक सङ्ग्रहणीय शैक्षिक एवं सन्दर्भ सामग्री बन्नुका साथै यसले बालबालिकाहरूको बौद्धिक एवं सृजनात्मक प्रतिभा प्रस्फुटनमा महत्वपूर्ण योगदान पुऱ्याउने अपेक्षासहित प्रकाशन सफलताको कामना गर्दछु ।

यस विद्यालयले नेपालकै महत्वपूर्ण शैक्षिक केन्द्रको रूपमा बालबालिकाहरूलाई गुणस्तरीय शिक्षा प्रदान गर्दै राष्ट्रलाई आवश्यक चरित्रवान, इमान्दार, दक्ष र देशभक्त जनशक्ति विकासमा योगदान पुऱ्याउँदै आएकोमा सराहना गर्दछु। यसैगरी, वर्तमान समयको आवश्यकताअनुरुप विश्वव्यापी रूपमा प्रतिस्पर्धा गर्न सक्ने जनशक्ति उत्पादनका लागि यस विद्यालयलाई गुणस्तरीय शिक्षा प्रदान गर्न थप सफलता मिल्ने विश्वास व्यक्त गर्दछु।

संस्कायुक्त, सीपमूलक, वैज्ञानिक, व्यावहारिक एवं गुणस्तरीय शिक्षा समृद्ध नेपालको आधारशिला हो । मुलुकको सर्वाङ्गीण विकासको मूल आधार शिक्षा नै भएकाले गुणस्तरीय शिक्षामा सबै नागरिकको समतामूलक र न्यायोचित पहुंच स्थापित गर्नु आजको आवश्यकता पनि हो। बालबालिकाको ठूलो हिस्सालाई शिक्षा प्रदान गर्दै आएका सामुदायिक विद्यालयहरूको भोतिक एवम् शैक्षिक पूर्वाधार विकासका निम्ति संघीय तथा प्रदेश सरकार र स्थानीय तहका साथै समुदायले यथेष्ट ध्यान दिन आवश्यक छ। साथै, गुणस्तरीय शिक्षाको खोजीमा विदेशिने युवा शक्तिलाई देशभित्रै प्राविधिक एवं व्यावसायिक शिक्षा प्रदान गरी जनशक्ति र पूँजीलाई राष्ट्रको सेवामा लगाउन विद्यालयहरुले आधार तयार गरिदिनु पर्दछ। यो बाटोमा कालिका मानवज्ञान माबि अनवरत लागिरहेको छ। विभिन्न शैक्षिक सुचकहरुमा यो विद्यालय देशमै अब्बल बनेर लुम्बिनी प्रदेशको प्रतिष्ठा बृद्धि गरिरहेको छ, यसका लागि विद्यालयलाई धन्यवाद प्रकट गर्दछु ।

अन्तमा, स्थापनादेखि हालसम्म यस विद्यालयको शैक्षिक उन्नयन, भौतिक पूर्वाधार निर्माण एवं संस्थागत विकासका लागि विभिन्न ढङ्गले योगदान पुयाउने विद्यालय व्यवस्थापन समिति, शिक्षक, विद्यार्थी, अभिभावक, कर्मचारी एवं शिक्षाप्रेमी, समाजसेवी सबैलाई धन्यवाद दिदै विद्यालयको उत्तरोत्तर प्रगतिको लागि हार्दिक शुभकामना व्यक्त गर्दछु।

मितिः २०८० पुष ३ गते

माननीय चन्द्रकेश (सि.के.) गुप्ता
मन्त्री
सामाजिक विकास मन्त्रालय
लुम्बिनी प्रदेश

**मा.चन्द्रकेश गुप्ता**
मन्त्री, सामाजिक विकास मन्त्रालय
लुम्बिनी प्रदेश

www.mosd.lumbini.gov.np



प्रदेश सभा
लुम्बिनी प्रदेश, राप्ती उपत्यका (देउखुरी), नेपाल

मा. लिला गिरी
प्रदेश सभा सदस्य
रुपन्देही क्षेत्र नं. २(१) एवम्
नेता, संसदीय दल, नेकपा (एमाले)



# हार्दिक शुभकामना

मुलुककै सर्वोत्कृष्ट सामुदायिक विद्यालयको रुपमा आफ्नो पहिचान बनाउँदै आएको बुटवलस्थित कालिका मानव ज्ञान माविको ६३ औं वार्षिक उत्सव तथा अभिभावक दिवसका अवसरमा हार्दिक शुभकामना व्यक्त गर्दछु। विभिन्न शैक्षिक वर्षमा नेपाल प्रथम भई लगातार राष्ट्रिय ध्वजासहित पुरस्कृत एवम् सम्मानित हुन सफल यस कालिका मानवज्ञान माध्यमिक विद्यालयको अझ उत्तर उत्तर प्रगति र गुणस्तरीय शिक्षाको विकासमा गरिएका अभ्यासको पूर्ण सफलताको समेत कामना गर्दछु।

यसै अवसरमा ६३ औं वार्षिक उत्सव तथा अभिभावक दिवस २०८० को शन्दर्भ पारेर विद्यालयले कालिका मुखपत्रको १३ औं अंक प्रकाशन गर्न लागेको खबरले खुशी लागेको छ। यसप्रकारका अतिरिक्त रचना तथा क्रियाकलापको यो निरन्तरता आफैमा स्वागतयोग्य समेत छ। शिक्षक विद्यार्थी, अभिभावक सहित सरोकारवालाहरुका समेत शुभकामना, सन्देश, रचना र सामग्रीहरु समेटेर मुख पत्रको नियमित प्रकाशन गर्नु अरु संस्थाका लागि पनि प्रेरणा बन्नसक्छ। विद्यालय परिवार र यसमा प्रत्यक्ष, अप्रत्यक्ष रुपमा खटिनुहुने सबैलाई यसै अवसरमा बधाई तथा अझ सफलताको कामना।

२०१८ सालमा प्राथमिक, २०२९ सालमा निम्न माध्यमिक र २०३२ सालमा माध्यमिक तहको स्वीकृत प्राप्त गरी २०६५ सालमा कक्षा ११ र १२ को सम्बन्धन प्राप्त गरी आफ्नो शैक्षिक यात्रा सुरु गरेको कालिका माध्यमिक विद्यालय र २०४१ सालमा स्थापना भई कक्षा नर्सरी देखि कक्षा १२ सम्म सञ्चालन भएको मानवज्ञान माध्यमिक विद्यालय २०७५ बैशाख १ गतेदेखि एक आपसमा मर्जर (समायोजन) भई हाल कालिका मानवज्ञान माध्यमिक विद्यालयको रुपमा नामकरण भएको थियो। यो बुटवलको मात्र नभई मुलुककै नमुना र उदाहरणीय शैक्षिक संस्थाका रुपमा निरन्तर सञ्चालन भइरहोस्।

मोबाइलः ९८५७०२२७७२
ईमेलः lilagiri40@gmail.com



भोज प्रसाद श्रेष्ठ
प्रदेश सभा सदस्य
लुम्बिनी प्रदेश, नेपाल

Bhoj Prasad Shrestha
Member of State Assembly
Lumbini Province, Nepal



Ref. No.:

Date: २०८०/०८/२९



# शुभकामना

वि.सं. २०१८ सालदेखि प्राथमिक तहबाट आफ्नो यात्रा सुरु गरेको तत्कालिन कालिका मा.वि. र वि.सं. २०४१ सालमा स्थापना भई संचालनमा आएको मानवज्ञान मा.वि. बिच समायोजन भई वि.सं. २०७५ देखि हाल कालिका मानवज्ञान माध्यमिक विद्यालयको नामबाट नेपालकै सर्वोत्कृष्ट सामुदायिक विद्यालयको रुपमा आफ्नो छुट्टै पहिचान बनाउन सफल बुटवल उपमहानगरपालिका वड नं. १० मा अवस्थित यस विद्यालयले आफ्नो ६३औं वार्षिक उत्सव तथा अभिभावक दिवस २०८० को अवसरमा "कालिका मुखपत्र १३ औं अङ्क" प्रकाशन गर्न लागेको थाहा पाउँदा मलाई अत्यन्तै खुशी लागेको छ ।

यस विद्यालयमा विज्ञान, व्यवस्थापन, शिक्षा, कानून जस्ता समूहका विभिन्न विषयहरु पठन-पाठन हुने गरेको र यस बाट ८ हजार भन्दा बढी विद्यार्थीहरु प्रत्यक्ष रुपमा लाभान्वित भएको र ३ सय भन्दा बढी शिक्षक कर्मचारीहरु कार्यरत रहेको जानकारी पाउँदा मैले अत्यान्तै गौरवान्वित महमुस गरेको छु । विगतमा यस विद्यालयमा आईपरेका विभिन्न अरोह-अवरोह झेल्दै हालको सफल विन्दुमा ल्याईपुऱ्याउनका लागि योगदान पुऱ्याउनुहुने संस्थाका सम्पूर्ण अग्रज व्यवस्थापन समिति एवं गुरुवर्गहरु प्रति हार्दिक आभार व्यक्त गर्न चाहान्छु । सामुदायिक विद्यालयको रुपमा रुपन्देही क्षेत्रको मात्र नभई देशकै शैक्षिक विकासका निमित्त नमूना विद्यालयको रुपमा स्थापित भई गत आ.व.०७९/०८० मा नेपाल प्रथम हुन सफल यस विद्यालयले शैक्षिक क्षेत्रमा प्रदर्शन गरेको भुमिकाको उच्च प्रशंसा गर्दै आगामी दिनहरुमा पनि यस विद्यालयले अगाडी सारेका योजनाहरुलाई कार्यान्वयन गरी अगाडी बढ्नका लागि थप हौंसला मिलोस भन्ने शुभेच्छा सहित यस विद्यालयले शैक्षिक, भौतिक, आर्थिक एवं साहित्यिक लेख रचना र विभिन्न गतिविधि समेटेर प्रकाशन गर्न लागेको "कालिका मुखपत्र १३ औं अङ्क" को पूर्ण सफलताको हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछु ।

(मा. भोज प्रसाद श्रेष्ठ)
प्रदेशसभा सदस्य तथा पूर्व स्वास्थ्य मन्त्री
लुम्बिनी प्रदेश

Butwal Sub-metropolitan City-8, Rupandehi, Nepal
Tel.: +977-71-541060, Mobile : +977-9857032870 E-mail: bhojpd23@gmail.com



बुटवल उपमहानगरपालिका
BUTWAL SUB-METROPOLITAN CITY



नगर प्रमुख
MAYOR



## शुभकामना

बुटवल-१० मा रहेको देशकै उत्कृष्टमध्येको सामुदायिक विद्यालय कालिका मानवज्ञान माध्यमिक विद्यालयले शैक्षिकलगायतका विषयलाई प्राथमिकता दिएर कालिका मुखपत्रको १३औं अंक प्रकाशन गर्न लागेकोमा मलाई खुशी लागेको छ। यस प्रकाशनबाट विद्यालयका शिक्षक, विद्यार्थी, अभिभावकका साथै अध्येताहरुले लाभ लिनेछन् भन्ने विश्वास मैले लिएको छु।

उत्कृष्ट विद्यालयको रुपमा नाम कमाएको यस विद्यालयले शिक्षा क्षेत्रमा पुऱ्याएको योगदान प्रशंसायोग्य छ। २०७३ र २०७९/०८० मा नेपाल प्रथम भई पुरस्कृत र सम्मानित भएको यो विद्यालय बुटवलकै गौरव हो। आगामी दिनमा पनि थप गुणस्तरीय जनशक्ति उत्पादन गर्दै शैक्षिक उन्नयनमा महत्वपूर्ण भूमिका निर्वाह गर्न सकोस् भन्ने कामना गर्दछु। विद्यालय परिवारले समयानुकुल नयाँ-नयाँ कार्यक्रम र योजनाहरु ल्याई कार्यान्वयन गर्न सक्छ भन्नेमा म विश्वस्त छु। स्थानीय सरकारका रुपमा बुटवल उपमहानगरपालिकाले यहाँको भौतिक तथा शैक्षिक विकासमा सधै अभिभावकको भूमिका निर्वाह गरिरहेको छ।

अन्त्यमा, बुटवलललाई 'समानता, स्वाभिमान र अवसर-बस्नयोग्य बुटवल सहर' भन्ने मूलमर्मलाई सार्थक बनाउन मदत गर्दै विद्यार्थीहरुको सुनौलो भविष्य निर्माणमा यस विद्यालयले अग्रणी भूमिका निर्वाह गर्न सकोस् भन्ने कामनासहित यस अवसरमा पुनः शुभकामना व्यक्त गर्दछु।

धन्यवाद
जय नेपाल !
२०८० मंसिर २९

खेलराज पाण्डेय
नगर प्रमुख

बुटवल उपमहानगरपालिका, नगर कार्यपालिकाको कार्यालय, बुटवल, रूपन्देही, लुम्बिनी प्रदेश, नेपाल
फोनः ०७१-५४०११२, ५४००३५, फ्याक्सः ०७१-५४१२८३, इमेलः butwalmayor@gmail.com, khelrajpandey@gmail.com







नेपाल सरकार
शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय
# शिक्षा तथा मानव स्रोत विकास केन्द्र



सानोठिमी, भक्तपुर

प.सं. :
च.नं. :

मिति : २०८०-०८-२८



## शुभकामना

सफल सामुदायिक विद्यालयको रुपमा राष्ट्रिय स्तरमा परिचय बनाउन सफल कालिका मानवज्ञान माध्यमिक विद्यालय, बुटवलले स्थापनाको-६३ औं वार्षिक उत्सव तथा अभिभावक दिवस २०८० को अवसरमा कालिका मुखपत्रको १३ औं अंक प्रकाशन गर्न लागेको जानकारी पाउँदा मलाई अत्यन्त खुशी लागेको छ ।

विद्यालयका उपलब्धीहरु समेत दस्तावेजका रुपमा अंकित हुने गरी आफ्नो गतिविधि एवम् विविध क्रियाकलापहरुलाई सरोकारवालाहरु समक्ष सार्वजनिक गर्ने एवम् बालबालिकाहरुको व्यक्तित्व तथा क्षमताको समेत अभिवृद्धि गर्ने उद्देश्यले उनीहरुको रचनाहरुलाई समेत समेटी प्रकाशन गरिएको यस मुखपत्रले विद्यार्थीहरुको सिकाई क्रियाकलापका साथै उनीहरुको सर्वाङ्गीण विकासमा समेत योगदान दिन सक्ने अपेक्षा राखेको छु ।

अन्तमा विद्यालयको वार्षिक उत्सव तथा अभिभावक दिवसको पूर्ण सफलताको कामना सहित मुखपत्र प्रकाशनमा योगदान पुर्याउनु हुने सबैलाई धन्यवाद दिदै यो विद्यालय गुणस्तरीय शिक्षाको उद्देश्य हासिल गर्ने सन्दर्भमा एक अग्रणी विद्यालयको रुपमा पहिचान कायम राख्न सक्नेछ भन्ने अपेक्षा सहित विद्यालयको उत्तरोत्तर प्रगतिको कामना गर्दछु ।

.................................
दीपक शर्मा
महानिर्देशक

फोन : ६६३४१७८, ६६३४१७९, ६६३४१८०, ६६३१०७५, ६६३१९७१, ६६३१९७४, ६६३३६२५, ६६३३०२८, फ्याक्स : ६६३१९७२, ६६३१९७३, ६६३३६२५
Website: www.doe.gov.np, e-mail: doestat@mos.com.np, doedg@mos.com.np



लुम्बिनी प्रदेश सरकार
शिक्षा तथा खेलकुद मन्त्रालय
**शिक्षा तथा सामाजिक विकास निर्देशनालय**
(राप्ती उपत्यका) देउखुरी दाङ, नेपाल

प.सं.: २०८०/०८१
च.नं.:




मितिः २०८०/०८/२६

**विषय : शुभकामना ।**

देशकै सर्वोत्कृष्ट सामुदायिक विद्यालयको रुपमा आफ्नो पहिचान बनाएको र पटक पटक नेपाल प्रथम भई राष्ट्रिय ध्वजासहित पुरस्कृत एवम् सम्मानित हुन सफल रुपन्देही जिल्लाको बुटवल उपमहानगरपालिकामा अवस्थित श्री कालिका मानवज्ञान माध्यमिक विद्यालयले आफ्नो **"कालिका मुखपत्र १३ औं अङ्क"** प्रकाशन गर्न लागेकोमा उक्त विद्यालयका सम्पूर्ण विद्यार्थी, शिक्षक, अभिभावक, विद्यालय व्यवस्थापन समिति लगायत सम्पूर्णलाई हार्दिक बधाई तथा शुभकामना दिन चाहन्छु ।

उक्त विद्यालयले विद्यालयका विविध गतिविधिहरु समावेश गरी **"कालिका मुखपत्र १३ औं अङ्क"** प्रकाशन गर्न लागेकोमा खुसी लागेको छ । उक्त प्रकाशनले सरोकार राख्नेहरुलाई लाभान्वीत गर्ने छ भन्ने विश्वास लिएको छु ।

**"कालिका मुखपत्र १३ औं अङ्क"** को सफलताको हार्दिक शुभकामना व्यक्त गर्दछु ।

यमबहादुर के.सी.
नि. निर्देशक

provinceedd5@gmail.com http://eddmos.p5.gov.np



नेपाल सरकार
शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय
शिक्षा तथा मानव स्रोत विकास केन्द्र
**शिक्षा विकास तथा समन्वय इकाइ**
रुपन्देही



मितिः २०८०।०८।२८

शुभकामना

यस जिल्लाको बुटवल उपमहानगरपालिकामा अवस्थित श्री कालिका मानवज्ञान माध्यमिक विद्यालयले आफ्नो विद्यालयका शैक्षिक, भौतिक, आर्थिक पक्षका साथै विभिन्न साहित्यिक एवं अनुसन्धनात्मक लेख रचनाहरु समेटेर विद्यालयको मुखपत्र **'कालिका'** १३ औं अंक प्रकाशन गर्न लागेको थाहा पाउँदा मलाई अत्यन्त खुशी लागेको छ ।

यस स्मारिकाले विद्यालयको पृष्ठभूमी, परिवेश र आगामी कार्यदिशा समेटनुको साथै विभिन्न विधागत क्षेत्रमा विद्यालयमा अध्ययनरत छात्र/छात्राहरुको सिर्जनशिल प्रतिभाहरुको प्रस्फुटन हुने मौका प्रदान गर्न तथा सम्बद्ध स्थानीय बुद्धिजीवि र साहित्यिक प्रतिभाहरुलाई समेत उचित अवसर दिने कुरामा मैले विश्वास लिएको छु । आगामी दिनमा यस्तै रचनात्मक कार्यलाइ अगाडी बढाउदै यो विद्यालय समग्र प्रदेश र मुलुककै नमुना तथा उत्कृष्ट विद्यालयको रुपमा विकास हुदै जानेछ भन्ने शुभेच्छा र शुभकामना व्यक्त गर्दछु ।

माधव वन्जाडे
उपसचिव
(इकाइ प्रमुख)



नेपाल सरकार

# राष्ट्रिय परीक्षा बोर्ड

## प्रदेश परीक्षा व्यवस्थापन कार्यालय

लुम्बिनी प्रदेश

बुटवल, रुपन्देही





पत्र संख्या :- ०८०/०८१
च.नं. :-

मिति :- २०८०/०८/२८



## शुभकामना

रूपन्देही जिल्लाको बुटवल उप-महानगरपालिका-१०, रूपन्देहीमा अवस्थित नेपालकै सर्वोत्कृष्ट सामुदायिक विद्यालयको रूपमा आफ्नो पहिचान बनाएको कालिका मानवज्ञान माध्यमिक विद्यालयले ६३औं बार्षिकोत्सव तथा अभिभावक दिवसको अवसरमा विविध शैक्षिक गतिविधिहरु समेटेर **कालिका मुखपत्र १३औं अङ्क** प्रकाशन गर्न लागेको जानकारी पाँउदा म हर्षित भएको छु । उक्त मुखपत्रले विद्यालयको शैक्षिक प्रगतिबारे सरोकारवालाहरुलाई थप स्पष्ट पार्ने तथा त्यसमा समावेश हुने सन्देशमुलक लेख-रचनाहरुले विद्यार्थीहरुमा अन्तरनिहित प्रतिभा प्रस्फुटन हुनगई सिर्जनशिल कार्यमा अघि बढ्न प्रेरणा प्राप्त हुने विश्वास लिएको छु ।

वि.सं.२०१८ सालमा स्थापना भएको कालिका माध्यमिक विद्यालय र २०४१ सालमा स्थापित मानवज्ञान माध्यमिक विद्यालय एक-आपसमा समायोजन भई हाल कालिका मानवज्ञान माध्यमिक विद्यालयको नामबाट सुपरिचित, देशमै सबैभन्दा धेरै विद्यार्थी अध्ययनरत रहेको यो विद्यालयबाट उत्तीर्ण विद्यार्थीहरु राष्ट्रिय र अन्तर्राष्ट्रियरुपमा अब्बल ठहरिदैं आएको देखिन्छ । साधारण र प्राविधिक दुवै धारतर्फ उपयुक्त शैक्षिक वातावरणमा प्रभावकारी शिक्षण सिकाई गर्दै आइरहेको र सामुदायिक विद्यालयतर्फ अभिभावक र विद्यार्थीहरुको पहिलो रोजाइमा पर्न सफल यो विद्यालयका शैक्षिक उपलब्धीहरु प्रशंसनीय रहेका छन् । शिक्षा तथा मानवस्रोत विकास केन्द्रको २०७९/०८० को मूल्याङ्कनमा समेत प्रथम स्थान प्राप्त गरी निरन्तर उत्कृष्टता कायम गरिरहेको समाचारले थप खुसी थपेको छ ।

विभिन्न आरोहावरोह पार गर्दै हालको गौरवपूर्ण अवस्थासम्म आइपुग्नकालागि कुशलतापूर्वक आ-आफ्नो जिम्मेवारी तथा भूमिका निर्वाह गर्नुहुने विद्यालय व्यवस्थापन समिति, प्रधानाध्यापक, शिक्षक, कर्मचारी, अभिभावक तथा सम्बन्धित सबै धन्यवादका पात्र हुनुहुन्छ । सुनौलो शैक्षिक इतिहास निर्माण गर्दै गुणस्तरीय शिक्षा प्रदान गर्ने कार्यमा विद्यालय परिवारलाई सधै सफलता प्राप्तिहोस् भन्ने शुभेच्छाकासाथ विद्यालयको उत्तरोत्तर प्रगतिको कामना गर्दै **कालिका मुखपत्र १३औं अङ्क** प्रकाशन तथा ६३औं बार्षिकोत्सव तथा अभिभावक दिवसको पूर्ण सफलताको लागि शुभकामना व्यक्त गर्दछु ।

धन्यवाद ।

.............................
**रमाकान्त तिवारी**
**कार्यालय प्रमुख**

फोन : ०७१-५३३१९८/५३२२४१    ईमेल : hsebbutwal@gmail.com    वेबसाईट : www.neb.gov.np








# बुटवल उपमहानगरपालिका
## नगर कार्यपालिकाको कार्यालय
बुटवल, रुपन्देही
लुम्बिनी प्रदेश, नेपाल

फोन : ०७१-५४०११२, ५४००३५
फ्याक्स : ०७१-५४१२८३
E-mail: info@butwalmun.gov.np


प.सं.०८०/०८१
च.नं.

मिति : २०८०/०८/२९

## शुभकामना सन्देश

लुम्बिनी प्रदेश, बुटवल उपमहानगरपालिका वडा नं. १० मा अवस्थित कालिका मानवज्ञान माध्यमिक विद्यालय नेपालकै उत्कृष्ट मध्येको एक सामुदायिक विद्यालयको रुपमा रही समग्र शैक्षिक क्षेत्रमा महत्वपुर्ण योगदान पुर्याउदै आएको कुरा सर्वविदितै छ ।

वि.स. २०१८ सालमा प्राथमिक विद्यालयको रुपमा स्थापना भै सञ्चालन हुँदै आएको विद्यालय वि.स. २०२९ सालमा निम्न माध्यमिक विद्यालय हुँदै २०३२ सालमा माध्यमिक तहको स्वीकृति प्राप्त गरी २०६५ सालदेखि कक्षा ११ र १२ को सम्बन्धन प्राप्त गरी आफ्नो शैक्षिक यात्रा शुरु गरेको कालिका माध्यमिक विद्यालय र वि.स. २०४१ सालमा स्थापना भै कक्षा १२ सम्म सञ्चालनमा रहेको मानवज्ञान माध्यमिक विद्यालयबीच भएको समायोजनबाट कालिका मानवज्ञान माध्यमिक विद्यालयको नामबाट सञ्चालन भै विद्यालयले शैक्षिक रुपमा थप उचाई हासिल गरिरहेको र पटक पटक सामुदायिक विद्यालयको रुपमा नेपाल प्रथम भई राष्ट्रिय ध्वजासहित पुरस्कार र सम्मान प्राप्त गरेको हुदाँ आगामी दिनमा समेत यस क्षेत्रको शैक्षिक धरोधरको रुपमा महत्वपुर्ण योगदान पुर्याउने अपेक्षा सहित विद्यालयको शैक्षिक, भौतिक, आर्थिक पक्षका साथै बिभिन्न शैक्षिक एवम् साहित्यिक लेख रचना र विभिन्न गतिविधि समेटेर **कालिका मुखपत्र** प्रकाशन गर्न लागेको सु – अवसरमा यस क्षेत्रको शैक्षिक क्षेत्रमा पुर्याएको अतुलनीय योगदानको कदर गर्दै थप उत्तरोत्तर प्रगतिको शुभकामना व्यक्त गर्दछु ।

2080/08/29

मित्रमणी खनाल
निर्देशक
बुटवल उपमहानगरपालिका

**मित्रमणी खनाल**
**निर्देशक**



# शुभकामना



मिति २०८०।०८।२८

कालिका मानवज्ञान माध्यमिक विद्यालय बुटवल-१० रुपन्देहीले ६३औ बार्षिकोत्सव एवम अभिभावक दिवसको अवसरमा "कालिका मुखपत्र" प्रकाशन गर्न लागेको जानकारी पाउदाँ अत्यन्तै हर्षित भएको छु।२०७५ बैशाख ०१ गते देखि कालिका माध्यमिक बिद्यालय तथा मानवज्ञान माध्यमिक बिद्यालय बिच समायोजन भई पुर्ण "कालिका मानवज्ञान माध्यमिक बिद्यालय" को रुपमा नामाकरण भएपछी अझ अब्बल सामुदायीक बिद्यालयको रुपमा स्थापीत हुन गई खस्किदै गईरहेको सामुदायीक विद्यालयको शैक्षिक गुणस्तर लाई राष्ट्रिय रुपमै माथी उकास्न सफल यस बिद्यालयले आफुलाई अब्बल तथा सफल संस्थाका रुपमा स्थापित गरेको छ । बि.स. २०७३ सालदेखि २०७९/०८० सालसम्म लगातार प्राबिधिक र साधारणतर्फ नेपाल प्रथम भई राष्ट्रिय ध्वजा र नगद सहित सम्मानित हुनु समग्र यस क्षेत्रकै प्रतिष्ठाको विषय हो ।

अझै बुटवल उपमहानगरपालिका वडा न.१० मा अवस्थित यो विद्यालयले हामी तथा बुटवल वासीलाई उचो शिर बनाएको छ । नेपालमै सबैभन्दा बढी विद्यार्थी संख्या रहेको यो विद्यालयले भौतिक, शैक्षिक र अतिरिक्त कियाकलापमा समेत छुट्टै पहिचान बनाएको छ । शैक्षिक खोज, अनुसन्धान र शिक्षा संग आवद्ध बिद्धान वर्ग, विद्यार्थी भाईबहिनीका लेखरचना समाबेश गरी प्रकाशन हुन लागेको "कालिका मुखपत्र" को १३औं अङ्क समग्र विद्धत वर्गका लागी समेत बौद्धिक खुराक बन्ने अपेक्षा गर्दछु । ६३ औं बार्षिकोत्सव एवं अभिभावक दिवस सभ्य र भव्य रुपमा सम्पन्न होओस् यहि शुभकामना व्यक्त गर्दै संस्थाको उत्तरोत्तर प्रगतिको कामना गर्दछु ।

*वडाध्यक्ष*
*श्री बल बहादुर पुन*
*बुटवल उप महानगरपालिका*
*१० न वडा कार्यालय*



# अध्यक्षको कलम

विश्वशान्ति नेपाल राष्ट्रिय प्राथमिक विद्यालयको नामबाट योगीकुटीमा स्थापित यो कालिका मानवज्ञान मा.वि.ले विभिन्न आरोह र अवरोह पार गर्दै ६३ औं वसन्तमा प्रवेश गर्दै छ। यस अवसरमा शिक्षाको महत्त्व र आवश्यकतालाई गम्भीर मनन गरी विद्यालयको विकास र विस्तारमा स्थापनाकाल वि.स. २०१८ सालदेखि हालसम्म उल्लेखनीय योगदान पुऱ्याउनु भएका विद्यालय संस्थापकज्यूहरु सञ्चालकज्यूहरु, गुरुवर्गहरु तथा शुभचिन्तकहरु प्रति हार्दिक सम्मान व्यक्त गर्न चाहान्छु। साथै यस क्षेत्रका शिक्षाप्रेमी, बुद्धिजीवी समाजसेवीहरुको योगदान, त्याग र वलिदानबाट विद्यालय यो अवस्थामा आएको सर्वविदितै छ।

२०१८ सालदेखि खुला चौरमा आरम्भ भएको विद्यालय विभिन्न आरोह अवरोह पार गर्दै स्थानीय बासिन्दाहरुको अथक प्रयास एवं शिक्षाप्रेमी, बुद्धिजीवी समाजसेवीहरुको योगदानबाट प्रा.वि., नि.मा.वि, मा.वि. हुँदै कक्षा ११/१२ सम्म सञ्चालन भैसकेको छ भने प्राविधिक शिक्षा अन्तर्गत कक्षा ९-१२ सम्म कम्प्युटर इन्जिनियरिङ्गको कक्षा पनि सञ्चालन भइरहेको छ। यो वर्ष देखि पर्यटन र पर्वतारोहण विषयमा कक्षा ११ मा पढाई शुरु गरिएको छ। राष्ट्रिय परीक्षा बोर्डले लिएका एसइई र एसएलसी परीक्षामा पनि यस विद्यालयका विद्यार्थीले उत्कृष्टता हासिल गरिरहेका छन्। कालिका मानवज्ञानका विद्यार्थीहरुले देशविदेशमा कानून, व्यवस्थापन, मेडिकल साइन्स, इन्जिनियरिङ्ग अध्ययन, कृषि विज्ञान तथा अन्य रोजगारमूलक अध्ययनहरुमा सफलता हासिल गरेका छन्। विगतमा भौतिक र आर्थिक अवस्थाबाट नाजुक रहेको विद्यालय आज धेरै हदसम्म भौतिक विकासमा फड्को मार्दै गुणस्तरीय शिक्षा प्रदान गर्ने देशकै अब्वल शैक्षिक केन्द्रको रुपमा स्थापित भैसकेको छ।

विद्यालयले गर्ने असल अभ्यासहरुमा कालिका मानवज्ञान देशभरिमै उत्कृष्ट ठहरिएको छ। भर्खर मात्र नेपाल सरकारको शिक्षा तथा मानव श्रोत विकास केन्द्रले सार्वजनिक गरेको देशभरका विद्यालयहरुको मूल्यांकनमा हाम्रो विद्यालय देशभरमा प्रथम ठहरिएको छ। यो सफलताको लागि विद्यालय व्यवस्थापन समितिका सम्पूर्ण सदस्यहरु, शिक्षक अविभावक संघका सदस्यहरु, सम्पूर्ण शिक्षक, अभिभावक तथा विद्यार्थीहरुलाई धन्यवाद र बधाई दिन चाहन्छु। समुदायको समर्थन, अभिभावकको सचेतता, विद्यार्थीको लगनशीलता र शिक्षकहरुको मेहनतले गर्दा कालिका मानवज्ञान माविले गुणस्तरीय शिक्षा प्रदान गरेर सबैको मन जित्न सफल भएको छ। अझै राम्रो विद्या प्रदान गर्न विद्यालय, यहाँका शिक्षक शिक्षिका सफल बनून्, यही हार्दिक शुभेच्छा र शुभ कामना छ।

**नित्यानन्द ज्ञवाली**
अध्यक्ष
विद्यालय व्यवस्थापन समिति

# अब्बल अनि सफल

## सम्पादकीय

नेपालमा सरकारी विद्यालयको शिक्षाको उपलब्धिस्तर खस्कदै गएको आरोप जताततैबाट र चिन्ता कतैकतैबाट हुन थालेको धेरै भैसकेको छ । सरकारी विद्यालयहरु असफल भए भन्ने राग निरन्तर अलाप्ने जमातको पनि कमि छैन । पेशागत ईमान्दारिता नभएका शिक्षक, कमजोर भौतिक संरचना, राजनीतिकरण र राज्यको वेवास्ताको कारणले सरकारी विद्यालय र त्यहाँबाट प्राप्त हुने शिक्षाको गुणस्तर खस्किरहेको अवस्थामा शिक्षामा कालिका मानवज्ञानको उत्कृष्टताको सूचकांक आफैमा अपत्यारिलो लाग्छ धेरैलाई ।

विगतमा पटक पटक प्राविधिक र साधारण शिक्षातर्फ नेपाल प्रथम बनेर शिक्षामा आफूलाई अब्बल साबित गरेको कालिका मानवज्ञान माविले यसपटक पनि देशभरमा आफ्नो उत्कृष्टता साबित गर्न सकेको छ । विद्यालयहरुले गर्ने असल अभ्यासहरूमा नेपाल प्रथम भएको खुशियाली ताजै रहेको समयमै शिक्षा तथा मानवश्रोत विकास केन्द्रले गरेको मूल्यांकनमा एक सय पुर्णाङ्कमा ८३.५ अंक प्राप्त गरेर नेपालका २७ हजार ३४३ सामुदायिक विद्यालयहरूमा प्रथम बन्न सफल भएको छ । यो ह्याट्रिकले सीमित साधनश्रोतबाटै सामुदायिक विद्यालयले पनि राम्रो गर्न सक्छन् भन्ने विस्वास जगाएको छ । चुस्त विद्यालय प्रशासन, समर्पित शिक्षक, जिम्मेवार अविभावक, प्रविधि मैत्री तथा सहभागितामूलक शिक्षण अनि मेहनती र सहभागी विद्यार्थी भएको कारणले कालिकाले शिक्षामा गुणात्मक र परिमाणात्मक फड्को मारेको छ । आठहजार बढी विद्यार्थीहरू र उनीहरूका हजारौं अभिभावकहरूको विस्वास र माया पाउनु चानचुने कुरा हैन ।

कालिका मानवज्ञान प्रथम बन्ने दौडमा मात्र पक्कै पनि लागेको होइन । साक्षरतासँगै सिप। सहभागिता र संस्कार हाम्रा लक्ष्यहरू हुन् । यिनै उद्देश्यले सञ्चालित छन् विद्यालयका कार्यक्रमहरू, यिनै उद्देश्यले खटिएको छ विद्यालयको नेतृत्व र यसैलाई सफल पार्ने शिक्षणमा स्वचालित छन् यहाँका शिक्षकहरू, अनि स्व. निर्देशित छन् विद्यार्थीहरू । यस्ता, सबै तत्वहरूले कालिकालाई सिक्ने सिकाउने थलो बनाएको छ, गर्ने गराउने कार्यशाला बनाएको छ । गुणस्तरीय शिक्षा प्रदान गर्ने र योग्य नागरिक तयार गर्ने यात्रा चलिरहनेछ निरन्तर ।

विद्यालयको यहि सफलता यात्राको ऐनाको रूपमा कालिका मुखपत्रको १३ औं अंक प्रकाशन भएको छ. सबैका रचनाहरू यसमा समेट्न सकिएको छैन । यसमा नभएका सिर्जनाहरू पनि हामी विद्यालयमा, समुदायमा सुन्नेछौ र यसबाट सिक्नेछौं । मुखपत्र प्रकाशनमा सल्लाह सुझाव दिनुहुने, शुभकामना तथा विज्ञापन दिनुहुने र अन्य तबरले सहयोग गर्नुहुने सबैप्रति आभारी छौं । कालिकाको सफलताको यात्रामा यहाँहरू सधैं साथमै रहेको देखिरहन, महसुस गरिरहन पाईयोस् ।

–सम्पादक मण्डल

# विषय सूची

# विषय सूची

# विषय सूची

## विद्यालय व्यवस्थापन समिति



## शिक्षक अभिभावक संघ



## कालिका मुखपत्र प्रकाशन समिति-२०८०



युवराज कँडेल



सुदर्शन रेग्मी



ज्ञानेश्वर आचार्य

# हार्दिक बधाई तथा शुभकामना

शैक्षिक वर्ष २०८० मा कक्षा १२ उत्तीर्ण गरी शिक्षा मन्त्रालय, नेपाल सरकारद्वारा संचालिक MBBS, BAMS, Pharmacy, Forestry, Agriculture र Engineering को स्नातक तह अन्तर्गत प्रवेश परीक्षामा उत्तीर्ण भई पूर्ण छात्रवृत्तिमा नाम निकाल्न सफल यस विद्यालयका रत्नहरुलाई **हार्दिक बधाई तथा शुभकामना** व्यक्ति गर्दछौं ।


Aakash Poudel
MBBS


Kailash Dawadi
MBBS, TU


Shriya Gyawali
MBBS


Suraj K. Agrahari
MBBS


Sushant Regmi
MBBS


Swastika Gyawali
MBBS


Sishir Subedi
MBBS


Siddhartha Poudel
MBBS, Rank 229


Sarvesh Yadav
MBBS


Abishek Khadka
B.E., PU


Anurodh Yadav
B.E.


Ashika Aryal
B.Sc.Nursing


Avinash Yadav
Engineering


Ayushma Ghimire
B.E.


Bikram Khanal
BPH, PU


Ganga Khanal
AFU AG


Indira Gharti
Engineering


Isha Pun
Engineering


Lablesh Bhurtel
Engineering


Pawan Panthi
Engineering, PU


Pratibha Bhandari
B.Sc.Nursing


Prithak Raj Kandel
B.Sc.MLT


Roshan Acharya
B.E.


Samir Khanal
Engineering


Sandip Thapa
B.E.


Saroj Poudel
B.E.


Siddhartha Paudel
BAMS, NSU, Dang


Sindhu Gyawali
Engineering, PU


Suraj Bhandari
B.E.


Suraj K. Sahani
B.Optho


Sushil Giri
IOE, Pulchowk


Ujjawal Ghimire
B.E.


Umesh Gupta
B.E., Indian Embassy


Utsab Bhattarai
B.E.


Sandhya Gautam
B.Sc.Nursing


Lovely Bishwakarma
BPH, PU

नित्यानन्द ज्ञवाली
अध्यक्ष (वि.व्य.स.)

दिनेश थापा
प्रधानाध्यापक

एवं

**कालिका मानवज्ञान माध्यमिक विद्यालय परिवार**
बुटवल-१०, रुपन्देही, नेपाल

# वार्षिक प्रतिवेदन २०८०



● **दिनेश थापा**, प्रधानाध्यापक

**साराँश (Executive summary)**

२०१८ सालमा यस क्षेत्रमा शिक्षाको ज्योति फैलाउने पवित्र उद्देश्यका साथ स्थापना भएको यस विद्यालयले हालसम्म यस क्षेत्र मात्र नभइ सिङ्गो नेपालकै शिक्षा क्षेत्रमा महत्वपूर्ण टेवा पुऱ्याएको छ। आज यो विद्यालय नेपालमै सबैभन्दा ठूलो विद्यालय र उत्कृष्ट सामुदायिक विद्यालयको रुपमा स्थापित हुन सफल भएको छ। हाल यस विद्यालयमा ८०५३ विद्यार्थीहरु अध्ययनरत छन् भने ३४० जना शिक्षक कर्मचारीहरु कार्यरत छन्। बालकक्षादेखि कक्षा १२ सम्म आधुनिक कक्षाकोठा, फर्निचरसहित स्मार्ट बोर्डको व्यवस्थापनसहित दैनिक पठनपाठन कार्यहरु सञ्चालन भइरहेको छ। वि.स. २०७३ सालमा राष्ट्रिय प्रथम २०७४ सालमा राष्ट्रिय तृतीय साधारण शिक्षातर्फ र प्राविधिकतर्फ २०७२ देखि लगातार हालसम्म राष्ट्रिय प्रथम भइ हाल २०७९/८० को शिक्षा तथा मानव स्रोत विकास केन्द्र, शिक्षा मन्त्रालयबाट भएको मूल्याङ्कनबाट पुनः नेपाल प्रथम एवम् अधिराज्यभरका ४२२ वटा नमुना विद्यालयहरुमा उत्कृष्ट भएको छ। वि.सं. २०७५ मा तत्कालिन शिक्षा विभागको नमुना विद्यालय कार्यक्रम अन्तर्गत छनौट भइ नमुना विद्यालय विकास तथा सञ्चालन निर्देशिका २०७४ अनुसार कार्यक्रमहरु सञ्चालन भइरहेका छन्। साहित्य, संगित, खेल तथा अन्य शैक्षिक विधाहरुमा विद्यार्थी तथा शिक्षकहरुले उल्लेखनीय योगदान गरी विद्यालयलाई अब्बल सावित गर्न सफल भएका छौं। कक्षा १२ उत्तीर्ण भइसकेपछि मेडिकल, इन्जिनियरिङ्ग, लोकसेवा, बैकिङ्ग तथा वित्तीय सेवामा जाने विद्यार्थीहरु अधिकतम रहेको छ। खेल विधामा राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरसम्म यस विद्यालयका विद्यार्थीहरुले सहभागिता जनाइ मेडल प्राप्त गरेका छन्। सम्पूर्ण शिक्षकहरु तालिम प्राप्त योग्य र अनुभवि छन्।

**ऐतिहासिक पृष्ठभूमि (Background)**

वि.सं. २०१८ साल पुष ७ गते बुटवलको योगिकुटीमा यहाँका स्थानियहरुको अग्रसरतामा विश्व शान्ति नेपाल राष्ट्रिय प्रा.वि. को रुपमा यो विद्यालयको स्थापना भएको हो। त्यस पश्चात हालको कालिकानगरमा स्थानान्तरण भएको हो। कालिका नामाकरण सहित वि.सं. २०२९ सालमा नि.मा.वि. र २०३२ सालमा माध्यमिक तहको स्वीकृत भइ २०६५ सालमा उच्च माध्यमिक शिक्षा परिषदबाट कक्षा ११/१२ को कक्षा सञ्चालन गरिएको हो। विज्ञान विषय अध्ययन गर्ने विद्यार्थीहरुको उच्च मागलाई मध्येनजर गरी बि.सं. २०६७ सालमा कक्षा ११/१२ मा विज्ञान विषय थप, २०७० मा प्राविधिक विषय कम्प्युटर इन्जिनियरिङ्ग विषय थप र २०७३ सालमा कानुन विषय थप गरिएको हो।

यस विद्यालयले वि.सं. २०७३ र २०७९ सालमा नेपाल प्रथम, २०७४ सालमा नेपाल तृतीय भइ विभिन्न पुरस्कारहरु प्राप्त गरिसकेको छ। त्यस्तै प्राविधिकतर्फ २०७१ देखि हालसम्म नेपाल प्रथम भइ पुरस्कृत हुँदै आइरहेको छ। त्यसतै उत्कृष्ट परीक्षा केन्द्रको रुपमा समेत पुरस्कृत भएको छ।

वि.सं. २०७५ सालमा बुटवल उपमहानगरपालिका वडा नं. १० मा रहेका २ विद्यालय कालिका मा.वि. र मानवज्ञान मा.वि. एक आपसमा गाभिइ कालिका मानवज्ञानको नामबाट विद्यालय सञ्चालन भइरहेको छ।

स्थापना गर्न योगदान पुऱ्याउनु हुने विद्यालयका संस्थापकज्यूहरु, अमूल्य जीवनका महत्वपूर्ण क्षणहरु व्यतीत गर्दै विद्यालयमा योगदान गर्नुहुने भू.पू.विव्यस र शि.अ.सं.का अध्यक्ष, सबै सदस्यज्यूहरु, भू.पू. प्रधानाध्यापक तथा शिक्षकज्यूहरु र अभिभावकज्यूहरुलाई हार्दिक नमन गर्दै उहाँहरुप्रति उच्च सम्मान व्यक्त गर्दछौं। विद्यालयको यशोबृद्धिका लागि दैनिक व्यवस्थापकीय कार्यमा खट्ने विद्यालय व्यवस्थापन समिति, अभिभावक संघ, नगर शिक्षा समिति, बुटवल उपमहानगरपालिका कार्यालय, वडा नं. १० कार्यालय लगायत सम्पूर्ण सरोकारवालाहरु, भूपू प्र.अ., शिक्षक, कर्मचारी, अभिभावकहरुको अहम् योगदानले आज विद्यालय राष्ट्रिय प्रथम भइ उत्कृष्ट सार्वजनिक विद्यालय बनेको छ। शैक्षिक, भौतिक र व्यवस्थापकीय पक्षमा अब्बल बन्न पुगेको छ। आफ्ना छोरा छोरीको भविष्य यसै विद्यालयमा सुनिश्चित देखेर हामीलाई विश्वास गर्ने अभिभावकहरुको समग्र योगदानले आज यो विद्यालय राष्ट्रिय र अन्तर्राष्ट्रिय रुपमा आफ्नो पहिचान गराउन सफल भएको छ।

**शैक्षिक प्रगति (Academic Progress)**

विद्यालयको शैक्षिक पक्ष शिक्षाको मुख्य खण्ड हो जसलाई नियमित बृद्धि गरी गुणस्तर कायम गर्नु चुनौती र अवसरको कार्य हो। विद्यालयको सर्वाङ्गीण विकास गरी विद्यार्थीहरुको चाहनाअनुसारको सिकाइलाई अगाडि बढाउने कार्य सहज वातावरण निर्माण गरी योजना कार्यान्वयन गर्न एक सिंगो कालिका मानवज्ञान परिवार लागेको छ। यस परिवारलाई सही मार्गदर्शन गरी सही नेतृत्व गर्ने जिम्मेवारी सहित शैक्षिक गुणस्तर अभिबृद्धिका कार्यहरु कार्यान्वयन भइरहेका छन्।

सम्पूर्ण कक्षा कोठाहरु पूर्ण प्रविधियुक्त भएका छन्। प्रयाप्त मात्रामा प्रयोगशालाहरु, कम्प्युटर, प्रोजेक्टर, सभा हल, यातायातको साधन, जेनेरेटर, इन्टरनेट, अन्डर ग्राउन्ड पार्किङ सहितको छात्रावास, आधुनिक डेक्स बेञ्च सहितको कक्षा व्यवस्थापन, अत्याधुनिक मन्टेश्वरी कक्षाहरु, व्यवस्थित पिउने पानीको व्यवस्था, वातानुकुलित कम्प्युटर ल्याब (प्रयोगशाला) को व्यवस्थापन सहित कक्षा सञ्चालन भइरहेको छ। सामाजिक जीवनको मूल आधार भनेको शिक्षा हो। शिक्षामा विकास र विस्तार गर्न सकेमा सामाजिक जीवन सरल हुन्छ। शिक्षालाई छोटो समयमा परिवर्तन गर्न कठिन हुन्छ। समाजका नागरिक, स्थानीय तह, शिक्षाकर्मी लगायत अभिभावकहरुको सहकार्य र बराबर चासो भएमा शिक्षा क्षेत्रलाई क्रमशः सुधार गर्दै लैजान सकिन्छ। धेरै शिक्षाकर्मी, शिक्षाविद्, स्थानीय समुदायहरुको महत्वपूर्ण योगदान रहेको छ। उक्त योगदान यस विद्यालयको इतिहासमा सुरक्षित राख्दै सदा स्मरण गरी नयाँ जोस र उमङ्गका साथ शैक्षिक योजना निर्माण र कार्यान्वयन गर्न हामी सदा तत्पर छौं। यस वर्ष उत्कृष्ट शैक्षिक व्यवस्थान, उत्कृष्ट असल अभ्यास, उत्कृष्ट नमुना विद्यालय, शिक्षा तथा मानव स्रोत विकास केन्द्र शिक्षा मञ्त्रालयको मूल्याङ्कनबाट विद्यालय नेपाल प्रथम भएको छ।

वि.स. २०७१ सालदेखि नै विभिन्न पुरस्कारबाट यो विद्यालय सम्मानित हुदै आएको कुरा जगजाहेर छ। विद्यालय अन्तर्राष्ट्रिय रुपमा पनि परिचित भइसकेको छ। विश्वका हरेक राष्ट्रमा गएर हाम्रा विद्यार्थीहरुले उत्कृष्टता हासिल गरी राखेका छन् यो हाम्रो सबैभन्दा ठूलो सफलता हो। हरेक कक्षाको औषत उपलब्धि स्तर ७०% भन्दा माथि उठेको छ। स्तरीय शिक्षाबाट अब्बल विद्यार्थी उत्पादनमा हाम्रो सदा प्रयास रही आएको छ।

**कक्षागत विद्यार्थी विवरण (२०८०)**

| कक्षा | छात्र | छात्रा | जम्मा |
|---|---|---|---|
| ECD | 124 | 157 | 281 |
| 1 | 73 | 78 | 151 |
| 2 | 81 | 80 | 161 |
| 3 | 91 | 93 | 184 |
| 4 | 122 | 157 | 279 |
| 5 | 164 | 205 | 369 |

| | | | |
|---|---|---|---|
| 6 | 288 | 285 | 573 |
| 7 | 255 | 308 | 563 |
| 8 | 267 | 335 | 602 |
| 9 | 314 | 340 | 654 |
| 10 | 325 | 370 | 695 |
| 11 | 875 | 974 | 1849 |
| 12 | 803 | 889 | 1692 |
| **Total** | **3782** | **4271** | **8053** |

यस वर्ष कक्षा ११ र १२ मा अध्ययन गर्ने विद्यार्थीहरुका लागि प्रथम त्रैमासिक परीक्षामा उत्कृष्ट अंक हासिल गरे बापत रु १० लाख छात्रवृत्ति वितरण गरीएको छ भने विभिन्न शीर्षकहरुमा २०० जना विद्यार्थीहरुले पूर्ण छात्रवृत्ति प्राप्त गरी अध्ययनरत छन् । अन्य खेलकुद, साहित्य जस्ता विधामा उत्कृष्ट हुने विद्यार्थीहरुले समेत पूर्ण छात्रवृत्ति प्राप्त गरेका छन् । ३५ जना अनाथ तथा गरिब र खेलाडीहरु छात्रावासमा निःशुल्क रुपमा बसी अध्ययन गरिरहेका छन् ।अन्य सरकारी छात्रवृत्तिका कार्यक्रमहरु यथावत् राखि नियमानुसार वितरण गरिएको छ ।

**एस.एल.सी.तथा एस.इ.इ. (कक्षा १०) को हालसम्मको नतिजाः**

| साल | जम्मा विद्यार्थी | उत्तीर्ण संख्या | उत्तीर्ण प्रतिशत | साल | जम्मा विद्यार्थी | उत्तीर्ण संख्या | उत्तीर्ण प्रतिशत |
|---|---|---|---|---|---|---|---|
| २०३५ | २५ | १३ | ५२ | २०५७ | ७१ | १२ | १६।९ |
| २०३६ | १३ | १० | ७६।९२ | २०५८ | ५६ | २४ | ४२।८६ |
| २०३७ | ३७ | १३ | ३५।१४ | २०५९ | ६२ | ३७ | ५९।६८ |
| २०३८ | ४४ | १ | २।२७ | २०६० | ७७ | ६० | ७७।९२ |
| २०३९ | १५ | १ | ६।६७ | २०६१ | ८७ | ४० | ४५।९८ |
| २०४० | ४१ | २ | ४।८८ | २०६२ | ८७ | ५५ | ६३।२२ |
| २०४१ | २३ | ३ | १३।०४ | २०६३ | १०२ | ६३ | ६१।७६ |
| २०४२ | १९ | ६ | ३१।५८ | २०६४ | १२१ | ७२ | ५९।५ |
| २०४३ | २१ | ९ | ४२।८६ | २०६५ | १२० | ९७ | ८०।८३ |
| २०४४ | ४२ | १२ | २८।५७ | २०६६ | १०० | ८४ | ८४ |
| २०४५ | १६ | ११ | ६८।७५ | २०६७ | १२० | ६३ | ५२।५ |
| २०४६ | ४६ | ३२ | ६९।५७ | २०६८ | ९० | ७४ | ८२।२२ |
| २०४७ | ४४ | ३६ | ८१।८२ | २०६९ | १०९ | ७८ | ७१।५६ |
| २०४८ | ९७ | १० | १०।३१ | २०७० | ११९ | १०२ | ८५।७१ |
| २०४९ | ६२ | २३ | ३७।१ | २०७१ | १२९ | ११७ | ९०।७ |
| २०५० | ७८ | २५ | ३२।०५ | २०७२ | २२८ | २२८ | १०० |
| २०५१ | ४० | १७ | ४२।५ | २०७३ | ३२५ | ३२५ | १०० |
| २०५२ | ६२ | २३ | ३७।१ | २०७४ | ३२५ | ३२५ | १०० |
| २०५३ | ६० | २६ | ४३।३३ | २०७५ | ३७१ | ३७१ | १०० |
| २०५४ | ५१ | २२ | ४३।१४ | २०७६ | ४९८ | ४९८ | १०० |
| २०५५ | १०१ | २२ | २१।७८ | २०७७ | ५१५ | ५१५ | १०० |
| २०५६ | ६१ | २५ | ४०।९८ | २०७८ | ६१० | ६१० | १०० |
| | | | | २०७९ | ६७१ | ६७१ | १०० |

**प्राविधिकतर्फ शैक्षिक वर्ष २०७१ देखि हालसम्म लगातार नेपाल प्रथम, २०७३ मा साधारणतर्फ नेपाल प्रथम, २०७४ मा नेपाल तृतीय, २०७९ मा नेपाल प्रथम**

**कक्षा १२ को हालसम्मको नतिजा विवरण**

| वर्ष | कक्षा | जम्मा उत्तीर्ण विद्याथी संख्या | जम्मा विद्यार्थी संख्या | उत्तीर्ण प्रतिशत |
|---|---|---|---|---|
| २०६७ | १२ | ६४ | १०९ | ५८.७२ |
| २०६८ | १२ | ६४ | ११५ | ५५.६५ |
| २०६९ | १२ | ११२ | २०१ | ५५.७२ |
| २०७० | १२ | १११ | १९४ | ५७.२२ |
| २०७१ | १२ | ३६३ | २१९ | ६०।३३ |
| २०७२ | १२ | ३८७ | २५० | ६४।६ |
| २०७३ | १२ | ४६५ | ३५४ | ७६।१३ |
| २०७४ | १२ | ६७८ | ५३३ | ७८।७१ |
| २०७५ | १२ | ८१५ | ६३७ | ७८।१६ |
| २०७६ | १२ | ९०५ | ७५४ | ८३।३१ |
| २०७७ | १२ | १०८२ | १०७४ | ९९।२६ |
| २०७८ | १२ | १४३६ | ११६९ | ८१।४१ |
| २०७९ | १२ | १५३६ | १३७७ | ८९।६५ |
| २०८० | १२ | १५४७ | १४५५ | ९४।०५ |

विद्यालयको शैक्षिक प्रगति तथा व्यवस्थापन र शैक्षिक असल अभ्यास सिक्न र आदान प्रदान गर्न अधिराज्य भरिका विद्यालयबाट आउने शैक्षिक पर्यटकहरुको प्रमुख थलो विद्यालय बनेको छ। आफू मात्र विकास हुने नभइ अन्य सामुदायिक विद्यालयको समेत बृत्ति विकास गर्ने कार्यमा यसले थप टेवा पुगेको छ।

**शिक्षक कर्मचारी विवरण २०८०**

| तह | स्वीकृत दरवन्दी | राहत कोटा | प्राविधिक | जम्मा | विद्यालय श्रोत | कूल जम्मा |
|---|---|---|---|---|---|---|
| बालविकास | ४ | | | ४ | १३ | १७ |
| प्राथमिक | १५ | | | १५ | ५६ | ७१ |
| निम्न माध्यमिक | ९ | २ | २ | १३ | १६ | २९ |
| माध्यमिक(९/१०) | ८ | ६ | २ | १६ | १९ | ३५ |
| माध्यमिक(११/१२) | ६ | | ४ | १० | १३३ | १४३ |
| विद्यालय कर्मचारी | ४ | | | ४ | ३८ | ४२ |
| होस्टल कर्मचारी | | | | ० | ३ | ३ |
| **जम्मा** | ४६ | ८ | ८ | ६२ | २७८ | ३४० |

अवको शिक्षण सिकाइ समय सान्दर्भिक र आउने समयको माग पूरा गर्ने खालको हुन आवश्यक छ। कक्षा कोठामा प्रवेश गर्ने शिक्षकपूर्णरुपमा तयारी भइ सकारात्मक सोंचकासाथ शिक्षण सिकाइ कार्यमा खट्नु जरुरी छ। जसको निम्ति शिक्षक प्रोत्साहन, तालिम तथा उत्प्रेरणाका उपायहरु अबलम्बन गरिएको छ। शिक्षक खुशी भए विद्यार्थी खुशी हुन्छन् भन्ने मन्त्र धारण गरिएको छ। असल संस्कार र सभ्यता, बोली, भाषा, व्यवहार सामाजिकीकरण, आफूभन्दा ठुलालाई सम्मान र आदर गर्ने र आफूभन्दा सानालाई माया गर्ने, आफ्ना बाबुआमालाई सम्मान गर्ने, आफ्नो संस्कृतिको, देशको माया गर्ने योग्य नागरिक उत्पादन गर्ने विद्यालयको मूल मन्त्र हो। जसलाई साकार रुप दिनको लागि हाम्रा शिक्षक कर्मचारीहरु दिनरात खटिरहनुभएको छ। अभिभावक अभिमुखीकरण कार्यक्रम, अन्तरक्रिया कार्यक्रमहरुले विद्यार्थीहरुलाई

अनुशासित बनाउने, संस्कारयुक्त नागरिक बनाउने कार्यमा थप योगदान दिएको छ। योग्य नागरिक बनाइ देशलाई आवश्यक पर्ने जनशक्ति तयार गर्ने विद्यालयको उद्देश्य हो। शिक्षक तथा कर्मचारीहरुको कार्यक्षमता, व्यैयक्तिक क्षमता जस्ता तत्वहरुलाई आधार मानी प्रोत्साहन पुरस्कारको व्यवस्था गरिएको छ।

**सञ्चालित कार्यक्रमहरु (Academic Program)**

- ***साधारण शिक्षा :*** बालविकास देखि कक्षा १२ सम्म साधारण शिक्षा सञ्चालन भइरहेको छ। जसमा जम्मा ८०५३ छात्रा छात्रहरु अध्ययनरत छन्। कक्षा ११/१२ मा विज्ञान, व्यवस्थापन, शिक्षा, मानविकी, कानुन विषयहरु सञ्चालन भइरहको छ। विज्ञान, व्यवस्थापन, कानुनमा पटक पटक नेपाल मै उत्कृष्ट नतीजा हासिल गरिसकेको छ। शैक्षिक वर्ष २०७९/८० को एस.एल.सी. नतीजामा ९४.०४% विद्यार्थी उत्तीर्ण भएका छन्।
- ***प्राविधिक शिक्षा :*** प्राविधिक शिक्षा अन्तर्गत कक्षा ९-१२ कम्प्युटर इन्जिनियरिङ्ग सञ्चालन छ। जसमा जम्मा १९२ छात्रछात्राहरु अध्ययनरत छन्। २०७१ सालदेखि हालसम्म प्राविधिक शिक्षामा नेपाल प्रथम भइ पटक पटक पुरस्कृत भइसकेको छ।

**शैक्षणिक विधि (Educational Pedagogy)**

बालविकास कक्षामा मन्टेश्वरी विधि अवलम्बन गरि शिक्षण सिकाइ कार्य भइरहेको छ। हरेकवर्ग कक्षामा ३५ जना बालबालिकाको व्यवस्थापन गरि खेल्दै सिक्ने प्रणालीको विकास गरिएको छ। हरेक वर्षको सरस्वती पूजाको दिनमा मात्र बालबालिकाहरुको भर्ना गर्ने व्यवस्था मिलाइएको छ। हरेक कक्षामा २ जना शिक्षक र १ जना आयाको व्यवस्था गरिएको छ।

कक्षा १ देखि ३ सम्म एकिकृत पाठ्यक्रम लागू भएपछि सोहिअनुसारको मुल्याङ्कन प्रणालीको व्यवस्थापन गर्नको लागि कक्षा शिक्षण विधि अबलम्वन गरिएको छ। हाल कक्षा १ देखि कक्षा ३ सम्म एकीकृत पाठ्यक्रम मूल्याङ्कन विधि अबलम्बन गरी कक्षा सञ्चालन गरिएको छ। जसका लागि हरेक वर्ष शिक्षकहरुलाई तालिमको व्यवस्था मिलाइएको छ।

कक्षा ४ र ५ मा निरन्तर मूल्याङ्कन विधि अवलम्बन गरी विद्यार्थी स्तर मापन गर्ने कार्य गरिएको छ। कक्षा ६र ७ मा विषयगत मुल्याङ्कन विधि र निरन्तर मुल्याङ्कन दुबै विधिलाई अवलम्बन गरिएको छ। कक्षा ८ नगरस्तरीय मुल्याङ्कन प्रणाली भएकाले सोही अनुसार र कक्षा ९ को आन्तरीक विषयगत मुल्यांकन, कक्षा १० को माध्यमिक शिक्षा मुल्यांकन पद्दतीको अवलम्बन गरिएको छ।

कक्षा ११ र १२ मा बोर्ड परीक्षा लाई मध्येनजर गरी शिक्षण सिकाइलाई प्रभावकारी गरिएको छ। व्यवहारिक सिकाइलाई जोड दिइएको छ। विद्यार्थी आफैलाई कार्यक्रम, सेमिनार तथा कार्यशाला गर्नको लागि प्रोत्साहन गरिएको छ, भने प्राविधिक शिक्षामा बढि भन्दा बढि समय प्रयोगशालामा बिताउनुपर्ने व्यवस्था मिलाई शिक्षण सिकाइका विधिहरु अबलम्बन गरिएको छ। ओजेटीलाई प्रभावकारी गराउनका लागि स्थानीय संघ संस्था, स्थानीय निकाय, राष्ट्रिय परीक्षा बोर्डसंग सहकार्य गरि सहज व्यवस्थापन गरिएको छ।

**असल अभ्यासहरुः**

- शिक्षण विधि अभिमुखीकरण तथा अभिबृद्धि कार्यक्रम
- प्रश्नपत्र निर्माण कार्यशाला
- विद्यार्थीहरुकै सहभागिता र नेतृत्वमा विद्यार्थी आचारसंहिता निर्माण र सफल कार्यान्वयन,
- शिक्षक कर्मचारीकै सहभागितामा शिक्षक कर्मचारी आचारसंहिता निर्माण र कार्यान्वयन,
- कक्षा कोठालाई प्रभावकारी बनाउन आइसिटीको प्रयोग बिना शैक्षिक सामग्री शिक्षकलाई कक्षा कोठामा प्रवेश नगर्ने प्रतिबद्धता, कक्षा कोठामा पुग्दा शिक्षक मुस्कान सहित प्रस्तुत हुने,
- नैतिक शिक्षा र व्यवहारिक अभ्यासलाई जोड,

- Responsibility and accountability को सिद्धान्तलाई व्यवहारिक रुपमा प्रयोग,
- अभिभावकहरुलाई प्रशिक्षण,
- कक्षा मनिटरलाई प्रशिक्षण, र पूर्ण जिम्मेवारी हस्तान्तरण,
- हरेक दिनको प्रार्थना समयमा महत्वपूर्ण घटना र विषयमा विचार राख्ने अवसर र आकर्षक साङ्गीतिक पिटीको व्यवस्था,
- विद्यार्थीहरुको सहज र पहुँचमा उजुरी पेटीका राख्ने र इन्चार्जद्वारा त्यसको उचित ढंगले सुनुवाई गर्ने व्यवस्था गरिएको,
- वार्षिक शैक्षणिक योजना, शिक्षक तालिम, शैक्षिक सामग्रीहरुको निर्माण तथा खरिद सहित शैक्षिक वर्षको सुरुवातमै सबै शिक्षकले आ-आफ्नो तयारी पूरा गरेको हुनुपर्ने व्यवस्था गरिएको,
- प्रत्येक विद्यार्थीहरुको प्रोफाइल तयार गरी विद्यार्थी मूल्याङ्कनको व्यवस्था,
- Soft Skill लाई पूर्ण रुपमा लागु गरी कक्षालाई प्रभावकारी बनाउँदै सिकाइ उपलब्धिलाई मापनयोग्य गरिएको,
- विद्यार्थीहरुलाई पूर्ण सफल हुने पद्दतिको अबलम्बन,
- नियमित रुपमा मूल्याङ्कन, मासिक, २ वटा त्रैमासिक, १ वार्षिक र २ वटा त्रैमासिक मौका परीक्षा सञ्चालन र कुनै विषयमा असफल भए मौका परीक्षाको अवसर,
- बालविकास कक्षादेखि कक्षा ३ सम्म एकिकृत पाठ्यक्रम मुल्यांकन विधि अबलम्बन,
- कक्षा ११ र १२ का हरेक आन्तरिक त्रैमासिक परीक्षामा 3.61 GPA भन्दा माथि नतीजा प्राप्त गर्ने विद्यार्थीहरुलाई निःशुल्क छात्रवृत्ति र बोर्ड परीक्षामा उत्कृष्ट जिपिए प्राप्त गर्ने विद्यार्थीहरुलाई नगद पुरस्कारको व्यवस्था गरिएको, जम्मा भर्नाको ५ प्रतिशत विद्यार्थीहरुले पूर्ण छात्रबृत्ति प्रदान,
- नियमित रुपमा प्रतिस्पर्धात्मक अतिरिक्त क्रियाकलाप (हरेक शुक्रबार ५औं घण्टी पश्चात) सञ्चालन,
- अभिभावक विद्यार्थी र शिक्षकहरुबीच अन्तर्क्रिया कार्यक्रम सञ्चालन,
- बालविकासको निम्ति १, २-५, ६-७ , ८ ,९ र १० कक्षाको लागि १/१ जना र विज्ञान समूहको लागि २, कानुन, शिक्षा र मानविकी समूहको लागि १, व्यवस्थापन समूहको लागि २जना इन्चार्जको व्यवस्था,
- बालविकास कक्षामा प्रवेश गर्ने बालबालिकालाई विद्यालय पोसाक निःशुल्क वितरण,
- अंग्रेजी र नेपाली दुवै माध्यमलाई अवलम्बन गरिएको,
- दण्डहीन (बालमैत्री) शिक्षण सिकाइ अभ्यास,
- औसत सिकाइ उपलब्धिका आधारमा शिक्षकहरुको बीच प्रतिस्पर्धात्मक वातावरण तयार गरी प्रत्येक वर्षको लागि उत्कृष्ट शिक्षकहरुको घोषणासहित पुरस्कृत गर्ने व्यवस्था,
- किसानसँग विद्यार्थी कार्यक्रम सञ्चालन

**सह-क्रियाकलाप :**

यस विद्यालयका तर्फबाट स्थानीय, जिल्ला र राष्ट्रिय तथा अन्तर्राष्ट्रिस्तरमा सहभागी भई हासिल गरेका यस वर्षका उपलब्धिहरु निम्न छन् :

- लायन्स इन्टरनेसनलद्धारा आयोजित पिस पोस्टरमा युजिना बुढाथोकी प्रथम
- प्रथम बटौली ५००० मिटर दौड प्रतियोगितामा लेखबहादुर भेंडी र रक्षा श्रीस प्रथम
- होराईजन जि.वि.एस. द्वारा आयोजित जिल्ला स्तरीय हाजिरीजवाफ प्रथम
- राष्ट्रिय स्तरको Hackthon प्रतियोगीतामा प्राविधिक धारका विद्यार्थी नेपाल प्रथम
- अख्तियार दुरुपयोग अनुसन्धान आयोगद्वारा आयोजित प्रदेश स्तरीय निबन्धमा मनिषा पराजुली तृतीय

- न्यु होराईजन स्कुलद्वारा आयोजित बुद्धिचाल (चेस) प्रतियोगितामा प्रथम, द्वितीय र तृतीय सहित रनिङ्ग सिल्ड
- दोस्रो कालिका रनिङ्ग सिल्ड प्रतियोगिता द्वितीय स्थान
- जिल्ला स्तरीय शेरबहादुर गुरुङ्ग कविता प्रतियोगिता प्रशंसा भट्टराई प्रथम
- दीप बोर्डिङ हाई स्कुलद्वारा आयोजित जिल्ला स्तरीय दीप गायन तारा (प्रथम) विवेक पंगेनी
- उद्योग वाणिज्य संघद्वारा आयोजित बुटवल मेलामा प्रदर्शनी सिङ्गिङ आइडल रुपा रौतार
- बुटवल उ.मन.पा. द्वारा आयोजित राष्ट्रिपति रनिङ्ग शिल्ड प्रतियागितामा २९ स्वर्ण सहित प्रथम स्थान
- UNDP द्वारा आयोजित राष्ट्रव्यापी कविता प्रतियोतामा प्रशंसा भट्टराई प्रथम
- UNDP द्वारा आयोजित लुम्बिनी प्रदेश स्तरीय अन्तर मा.वि. कविता प्रतियोतामा प्रशंसा भट्टराई प्रथम
- जिवराज आश्रित स्मृति प्रतिष्ठानद्वारा आयोजित जिल्ला स्तरीय वक्तृत्वकला करिना खनाल प्रथम
- वागेश्वरी सङ्गीतालयद्वारा आयोजित बागेश्वरी सिङ्गिङ आइडल कक्षा १२ का विद्यार्थी कुशल अविरल
- ज्ञानज्योति पुस्तकालय बुटवलद्वारा आयोजित रामायण वाचन प्रतियोगितामा विवेक खराल र सोनिया बराल प्रथम
- न्यु होराइजन ICT क्लवद्वारा आयोजित IT QUIZ मा प्रथम र द्वितीय स्थान प्राप्त
- करिना खनाल प्रथम वक्तृत्वकला प्रतियोगिता नेपाल रेडक्रस सोसाइटी बुटवल
- दिपेश भट्टराई, दिपिका भट्टराइले नगर स्तरीय छात्रवृति अक्षयकोषद्वारा आयोजित कविता प्रतियोगितामा द्वितीय र तृतीय
- दिपेश भट्टराईले लायन्स क्लव अफ बुटवलद्वारा आयोजित पिस पोस्टर प्रतियोगितामा प्रथम
- न्यू होराइजन आवासीय मा.वि. द्वारा आयोजित Grand District Level STEM TREK-2080 मा प्रथम र तृतीय
- एभरेष्ट आवासीय मा.वि.द्वारा आयोजित जिल्ला स्तरीय वादविवाद प्रतियोगितामा करिना खनाल, कक्षा १०-प्रथम

**भौतिक प्रगति (Physical Development)**

***भौतिक पूर्वाधार विकास (Infrastructure Development)***

- ***क्षेत्रफल :*** विद्यालयको कूल जग्गाको क्षेत्रफल ५ विघा ८ कट्ठा छ जुन कालिकानगर र रामनगर गरी २ स्थानमा फैलिएको छ।
- ***भवन संख्या :*** विद्यालयको जम्मा भवन ब्लक १६ वटा रहेको छ। जसमा २ वटा ब्लक छात्रावास तथा प्रशासनिक कार्यका लागि प्रयोग भएको छ, भने २ वटा व्यवसायिक कार्यका लागि र पुस्तकालय, संग्राहलय, संगित कक्ष लगायत वाचनालयका लागि प्रयोग भएको छ र अन्य ब्लकहरु शैक्षिक कार्यका लागि प्रयोग भएका छन् । एउटा अभिभावक प्रतिक्षलयको व्यवस्थापन गरिएको छ। गार्ड रुम २ वटा व्यवस्थापन गरिएको छ। सेक्टर २ रामनगरमा १६कोठे भवन निर्माणाधीन रहेको छ।
- ***खेलमैदान :*** विद्यार्थीहरुका निम्ति २ वटा खेल मैदानहरु छन् जहाँ विभिन्न खेलहरु र दैनिक रुपमा प्राथना गर्ने गरिएको छ । एक बाल उद्यानको व्यवस्थापन गरिएको छ।
- ***कम्पाउण्ड वाल :*** दुबै खेलमैदानहरु पूर्णरुपमा घेराबार लगाइ सुरक्षित बनाइएको छ।
- ***प्रयोगशाला :*** दैनिक पठनपाठनका लागि आवश्यक पर्ने विज्ञान प्रयोगशाला ७ वटा, कम्प्युटर प्रयोगशाला ५ वटा, डिजिटल प्रयोगशाला १, इलेक्ट्रोनिक

प्रयोगशाला १, डिजिटल कार्यशाला १ रहेको छ। यस वर्ष एक कम्प्युटर प्रयोगशाला थप गरि प्रयोगात्मक अभ्यासलाई थप सहज बनाइएको छ ।

- ***कक्षा कोठा :*** जम्मा कक्षा कोठामध्ये १२८ वटामा अध्यापन कार्य भइरहेको छ।अन्य कोठाहरुमा ७ वटा शिक्षक कक्ष, १ वटा प्र.अ. कक्ष, ३ वटा लेखा प्रशासन कक्ष, २ वटा परीक्षा व्यवस्थापन कक्ष, १२ वटा प्रयोगशाला, १ म्यूजियम, १ संगित, २ पुस्तकालय, १ वाचनालय, १ प्राथमिक उपचार केन्द्र, ३० वटा छात्रावास कोठा, २ वटा होस्टल वार्डन कक्ष, ३ वटा क्यान्टीन, १ वटा स्टोर कक्ष, १ वटा कर्मचारी कक्ष, छ भने २ वटा कार्यक्रम तथा सभा हल, १ वटा व्यवस्थापन समिति र अध्यक्ष कार्यकक्षको व्यवस्थापन गरिएको छ।
- ***शौचालय :*** विद्यार्थीहरु तथा शिक्षक कर्मचारीका निम्ति जम्मा २३ वटा शौचालयहरु छन् जसमा छात्रा छात्रको छुट्टाछुट्टै व्यवस्था र २८ वटा यूरिनलको व्यवस्थापन गरिएको छ।
- ***पुस्तकालय :*** २ वटा पुस्तकालयको व्यवस्थापन गरिएको छ भने एउटा वाचनालयको व्यवस्था छ।
- ***छात्रावास :***

छात्रावासमा ३० जना अनाथ तथा गरिब विद्यार्थीहरु बसी पठनपाठन गरिरहेका छन् । सञ्चालन व्यवस्थापनमा लुम्बिनी प्रदेश सरकार र स्थानिय सरकारको सहयोग रही आएको छ । कक्षा १२ सम्म निशुल्क अध्ययन गर्ने र विद्यार्थीहरुको सम्पूर्ण भरणपोषण कार्यसमेत विद्यालयले व्यवस्थापन गर्ने गरि सञ्चालित यो छात्रावास नेपालमै पहिलो हो। हाल निम्न विद्यार्थीहरु यस छात्रावासमा बस्दै आइरहेका छन्।

| क्र.स. | नाम | कक्षा | कैफियत |
|---|---|---|---|
| १ | अनुजा श्रेष्ठ | ८ | डोल्पा |
| २ | सिमा पुन मगर | ८ | रोल्पा |
| ३ | अनिल बोहरा | ८ | डोल्पा |
| ४ | विशाल पुन मगर | ९ | रोल्पा |
| ५ | शक्तिज्यू दमाई | ९ | रुकुम पूर्व |
| ६ | सुनिता भण्डारी | १० | रोल्पा |
| ७ | विष्णु भण्डारी | ११ | रोल्पा |
| ८ | हुकुम प्रसाद डाँगी | ११ | रोल्पा |
| ९ | सुस्मिन बस्याल | ६ | रुपन्देही |
| १० | सामना शर्मा | ८ | रुपन्देही |
| ११ | टिकेश कार्की | ७ | पाल्पा |
| १२ | विप्लव काउचा | ८ | बाग्लुङ्ग |
| १३ | अनुषा शाही | ५ | कालिकोट |
| १४ | किरन थापा | ५ | गूल्मी |
| १५ | एन्जीला हिताङ | ५ | रुपन्देही |
| १६ | भक्तिज्यू दमाइ | ६ | रुकूम पूर्व |
| १७ | विशाल थापा | ७ | गुल्मी |
| १८ | श्रृजन टण्डन | ७ | पाल्पा |
| १९ | सन्दीप आचार्य | ६ | अर्घाखाँची |
| २० | कौशिला गाहा | ७ | पाल्पा |
| २१ | प्रतिमा सर्तुङ्गे | ७ | पाल्पा |
| २२ | ललिता घर्ती मगर | ६ | रोल्पा |
| २३ | विपना घर्ती मगर | ६ | रोल्पा |
| २४ | घनश्याम खनाल | ५ | अर्घाखाँची |
| २५ | एकता थापा | ६ | गुल्मी |
| २६ | एलिना थापा | ६ | गुल्मी |
| २७ | विशाल थापा | ५ | गुल्मी |
| २८ | सुमन बलावली सोनाम | ४ | रोल्पा |
| २९ | दिप्सन राना | ४ | अर्घाखाँची |
| ३० | अन्जना थारु | ८ | कपिलवस्तु |

**शैक्षिक सामग्रीहरु (Educational Aids)**

दैनिक पठनपाठन कार्यका लागि आवश्यक पर्ने दैनिक शैक्षिक सामग्री लगायत ४४ वटा प्रोजेक्टर, ३४ वटा स्मार्ट वोर्ड , २० वटा स्मार्ट टेलिभिजन, शिक्षक निर्देशिका, विज्ञान तथा गणित शिक्षण सामग्रीहरुका साथै अन्य विषयका विषयगत शिक्षण सामग्रीहरु व्यवस्थापन गरिएको छ।

बालबालिका र उसमा आश्रित परिवारको आर्थिकस्तर उकास्न सहयोग नगर्दा बालबालिकाहरु सडकमा आएर माग्नु वा गलत कार्यमा संलग्न हुनुको बिकल्प रहदैन ।

धेरैजसोले बालश्रमलाई बालबालिका हित बिरुद्धको कार्यको रूपमा हेर्ने गर्छन् । तर यसलाई निरपक्ष रूपमा हेर्नु राम्रो होइन । अहिले आधुनिकताको नाममा बालबालिकाहरुलाई श्रमदेखि टाढा लगिदै छ । बालबालिकाहरुले श्रम गर्नेहरुलाई हेयको दृष्टिले हेर्न थालेका छन् । बालबालिकाहरुले गर्ने हरेक कार्यलाई बालश्रमको रूपमा ब्याख्या गरिदिदा उनीहरुमा अहिले श्रम गर्ने बानी नबस्ने र भविष्यमा देशमा काम गर्ने मानिसकै अभाव हुने सम्भावना रहन्छ । बालबालिकामा श्रम प्रति सम्मान गर्ने बानीको विकास गर्न पनि उनीहरुलाई शारीरिक,बौद्धिक र मानसिक असर नपुग्ने गरि कुनै न कुनै खालको श्रममा संलग्न गराउनु राम्रो हुन्छ ।

जोखिमपूर्ण बालश्रमबाट बालबालिकालाई दिर्घकालिन असर पुग्ने भएकोले बालबालिकाहरुलाई यस्तो श्रम गर्नुपर्ने बाध्यताको अन्त्य गर्नु राज्यको दायित्व हो । राज्यले बालश्रम निषेध गर्नु भन्दा पनि बालश्रमिक बन्न आउने परिवारको आर्थिक र सामाजिक अवस्था सुधार गर्ने तर्फ ध्यान दिनु पर्छ । अन्य पक्षहरुले पनि बालश्रमको बिरोध गर्दा बालश्रमले सिर्जना गरेका उपयोगी पक्ष वा फाईदाहरुलाई कदापी भुल्नु हुँदैन ।

---

# स्वच्छ वातावरण



**नवयुग कंडेल**
कक्षा ५, एफ

चारैतिर हरियाली हाम्रो वातावरण ।
बिहानैको ६ बजे घामको किरण ॥

यताउता हेर्ने गर्छु कतै फोहोर छैन ।
वातावरण स्वच्छ राख्ने तिमी मात्र होइन ॥

कहिल्यै पनि भन्नुहुन्न उसले आफैं गर्छ ।
हामी सबै मिलीजुली स्वच्छ राख्नु पर्छ ॥

वनजङ्गल, जीवजन्तु, धर्ती हाम्रो धन ।
राम्रो ठाउँ देखेपछि छुन्छ हाम्रो मन ॥

हाम्रो वातावरण कति राम्रो हुन्छ ।
सरसफाइ अभियानमा सबै जुट्नुपर्छ ॥

# गजल



**आशिष कुवँर**
कक्षा : १२, मानविकी

छ्न त धारिलो खुकुरी दापमा छ ।
तैपनि लाग्छ जिन्दगी धरापमा छ ।

हिजो लुट्यो आज पनि लुट्दैछ मेरो ।
कि यो समय पनि कसैको चापमा छ ॥

दीप झैं रहेछ सम्बन्ध जल्यो निभ्यो ।
यो हृदय हो कि अझैसम्म रापमा छ ॥

सृष्टि गर्नू पहिले सोंच्ने खै के कारण !
मान्छे छैन उस्तै, ईश्वर विलापमा छ ॥

धर्मको 'उपदेश' भो नदिनुस् मलाई ।
देखेको छु, जे छ मुनाफा पापमा छ ॥

# Pragmatic Theory In School



● **Lokraj Ghimire,** Vice-principal

It was popular in the first -quarter of 21st century in America. Charles Sanders Pierce is the father of pragmatic theory who is an American scientist, logician, mathematician and philosopher. There are four elements in pragmatism - unity, interest, experience and integration. Simple example in action in education - children can learn very easily and clearly by doing themselves rather than by listening to others. They can sow their minds by reading theory themselves which is the process of being active. But listening is being passive. So, pragmatic theory is a theory that can make the learners or readers active. It has four keys in education. Pragmatism is an approach if learning and teaching focuses on keeping things practically. Its four elements are also known as the principles. Major concepts are usefulness, workability, practicability, ideas, policies and proposals. Pragmatism means thinking or dealing with problems in a practical way, rather than in a theoretical or abstract way. There are many branches of pragmatism. One of them is in the linguistic field. It is also known as the study of language. It focuses on conversational implication which is a process in which the speaker implies and the listener infers in school, this theory is very popular in practical classes unless and until teachers make such a practical learning environment. Method of teaching, according to pragmatism is experimental rather than explanatory. Even the creative writing teachers can encourage his/her students to write themselves even by using ideas. Experimental learning is very important aspect of pragmatism than we can apply in language lab. Practical learning focuses on authentic application of education and experimental learning focuses on how to measure the task. In every classroom, it can be popular or useful by making every learning item practical so far it is concerned. Since 1870s, it has been practiced effectively in the form of objectivity.

Pragmatism is also known as a philosophy of practicality that has been applied in education. According to the philosophy, education should be focused on real life as application and human growth. Education should be focused on life and growth. Topic should be on current affairs or about future careers or situation of the pupils. Mathematics, sciences and any language can help them in day to day situation. Learning also should social, emotional, informational of these subjects so that pupils can relate learning in their everyday life. The concerning department should pay attention to the curriculum this way so that unemployment of the developing nations can be reduced by producing self employees.

Thank you.

# सदावहार बनोस् कालिका



● **घनश्याम पाठक**, पूर्व प्र.अ.,कालिका मानवज्ञान मा.वि., क्याम्पस प्रमुख, बुटवल कालिका क्याम्पस

मेरो सेवानिवृत्त पश्चातको आफ्नै नेतृत्वमा राष्ट्रिय पहिचान बनाएको कालिका मानवज्ञान मा.वि. को भविष्यको विषयमा धेरै सरोकारवालाहरुले आशङ्का व्यक्त गर्नु भएको यथार्थतालाई नजरअन्दाज गर्नु हुँदैन नजरअन्दाज गर्नु अन्याय हुन्छ। तर आफ्नो कार्यकालमै बनाइएको दीर्घकालीन योजना र जिम्मेवार नेतृत्वले आफ्नो उत्तराधिकारी नेतृत्व तयार पार्नु त्यो पनि आफ्नो सफलता सम्झने कारणले पनि म भने ढुक्क थिएँ। शिक्षामा नेतृत्व गर्नु भएका तत्कालीन सचिव, सदस्य सचिव, शिक्षा अधिकारी र शिक्षा मान्त्रीहरुले पनि धेरै प्रश्न उठाउनु भएको थियो तर मेरो सरल जवाफ हुने गरेको थियो ***"कालिकाले तयार पारेको स्वचालित प्रणाली (System) र आवधिक योजनाहरु छन्  जसले गर्दा कुनै शङ्का गर्नुपर्ने ठाउँ छैन जसरी अगाडि बढ्दै आएको छ, त्यसरी नै अगाडि बढ्दै जान्छ।"*** मेरो अवकास (सेवानिवृत्त) पश्चात केही नमिठा अनुभूति भएको भएतापनि कालिका मानवज्ञानले आफ्नो गति पकड्दै गएको छ जसको लागि इमान्दारहरुकै हातमा रहेको नेतृत्व हो भन्ने मान्नु पर्दछ।

अवश्य पनि हरेक सफलताहरु जन्मने भनेको, आइपरेका चुनौतीहरुको सफलतापूर्वक सामना गरेर मात्रै हो। चुनौतीहरुको सामना गर्न नसक्ने, मनगढन्ते, स्वार्थ प्रेरित व्यक्तिको हातमा जतिसुकै प्रतिष्ठित र सफल संस्थाहरु परुन् त्यसको विघटन स्वभाविक बन्न पुग्दछ। वस्तुलाई हेर्ने, त्यसलाई बुझ्ने र विश्लेषण गर्ने दृष्टिकोण नहुने हो भने घरपरिवार पनि चल्न नसक्ने आजको युगमा समाज र सामाजिक संघ संस्था चल्ने कुरै आउदैन भन्ने कुरालाई आत्मसाथ गरेर शिक्षाको मन्दिर, सम्पूर्ण अभिभावकहरुले भरोसा गरेको विद्यालय, विद्यार्थीहरुले आफ्नो भाग्य र भविष्य देखेको संस्था हो। सरोकारवालाहरुले विश्वास गरेको विद्यालयलाई समय सापेक्ष नीति निमार्ण गरी व्यवहारिक योजना निर्माण गरेर सबै सामाजिक संघ संस्था, सामाजिक व्यक्तित्वहरु र शिक्षाको जिम्मेवार निकायसँग निरन्तर अन्तरसम्वाद गर्ने, योजनाहरुको व्याख्या गर्ने र पारदर्शितालाई पहिलो प्राथमिकतामा राखेर अगाडि जान सक्ने हो भने सबैका आशङ्काहरुलाई आरामले निराकरण गर्न सकिन्छ। कालिका मानवज्ञान मा.वि.ले आफ्नो ६३औँ वार्षिकोत्सव मनाइ रहेको सन्दर्भमा अब केवल कक्षा नर्सरीदेखि कक्षा १२ सम्मको योजना र कार्यक्रमले पुग्दैन। कालिकाको ब्रान्डमा वा यसैको ख्यातीबाट सञ्चालित बुटवल कालिका क्याम्पसको भविष्य र यसको प्रभावकारिताबारे पनि सोच्नु पर्दछ। कालिका मानवज्ञान मा.वि.मा अध्ययनरत विद्यार्थीहरु, अभिभावक, व्यवस्थापन समिति, शिक्षक अभिभावक संघ र यहाँ अध्यापनरत शिक्षकहरुले समेत बुटवल कालिका क्याम्पसको बारे गम्भीर रुपमा सोच्नु पर्दछ। २०७० सालमा ३४ जना विद्यार्थीहरु BBS मा भर्ना गरेर तत्कालीन कालिका मा.वि. मै सञ्चालन गरिएको बुटवल कालिका क्याम्पसले आज त्रिभुवन विश्वविद्यालयबाट सम्बन्धन प्राप्त गरेको सामुदायिक क्याम्पसहरुमध्ये चर्चित क्याम्पसको रुपमा पहिचान कायम गरेको छ। ३२०० भन्दा बढी विद्यार्थीहरु अध्ययनरत रहेको यो क्याम्पस BBS, B.Ed, BCA, BSW स्नातक तहमा र English, RD (Rural Development) विषयमा स्नात्तकोतर (Master) सम्म पढाइ हुने क्याम्पसको रुपमा आफूलाई उभ्याउन सकेको छ। यसको लागि सबैभन्दा ठूलो भूमिका कालिका मानवज्ञान मा.वि. कै रहेको छ। यो

भूमिकालाई निरन्तरता दिने कुरा फेरि पनि चुनौतीको रुपमा देखा पर्न सक्दछ।

बुटवल कालिका क्याम्पसको स्थापनाकालदेखि त्यसलाई सञ्चालन गर्ने र नेतृत्व गर्ने श्री दिनेश थापा नै हाल कालिका मानवज्ञान मा.वि. को प्रधानाध्यापकको जिम्मेवारीमा हुनुहुन्छ। आफ्नै प्रयासमा स्थापित संस्थाप्रतिको माया, ममता र जिम्मेवारी उहाँमा प्रबल रुपमा हुने नै भयो त्यो छ पनि। जसरी कालिकाबाट म निवृत्त भएर जाँदा आशङ्का थिए ती आशङ्का दिनेश थापा, होमबहादुर गलामी र नित्यानन्द ज्ञवालीको नेतृत्वले निराकरण गर्न सफल भएको छ। त्यसै गरी अब फेरि क्याम्पसको नेतृत्वको विषयमा पनि आशङ्का उठ्न सक्छन् तर हामी सबैको योजना र जिम्मेवारी बोधले सबै आशङ्का र चुनौतीहरुलाई सामना गर्नु पर्दछ। फेरि पनि मैले भनेको छु एउटै मात्र विकल्प छ, त्यो हो कालिका, कालिका फेरि पनि कालिका।

समय र नदीको वेग निरन्तर अगाडि बढ्दै जान्छ। समय र परिस्थितिमा आउने परिवर्तनसँगै सधैं हामीले निर्माण गर्ने नीति, कानुन र योजनाहरु पनि परिवर्तन गर्दै जानु पर्दछ। एउटै समयभित्र पनि धेरै पक्षहरु हुन्छन् जस्तैः भौतिक, शैक्षिक, आर्थिक र सामाजिक आदि। नेतृत्व गर्नेहरुले ख्याल गर्नु पर्ने विषय के हो भने यी पक्षहरुमध्ये शिक्षण संस्थाले शैक्षिक पक्षलाई नै केन्दूबिन्दुमा राखेर प्राथमिकताको आधारमा ध्यान दिने र जोड दिनुपर्ने पक्ष भनेर प्राथमिकता तोक्नु पर्दछ।

वर्तमान र भावी नेतृत्वले ख्याल गर्नुपर्ने विषय हो कि बुटवल कालिका क्याम्पसको कालिका मानवज्ञान मा.वि. नै प्रमुख आधार हो। जसले गर्दा कालिका मानवज्ञान मा.वि. मा नर्सरी कक्षामा प्रवेश गरी कालिकाबाटै स्नातकोत्तरतह पार गरेर निस्किने अवसर प्रदान गरेको छ। म आफूले कालिका मा.वि. २०७५ पश्चात कालिका मानवज्ञान मा.वि. र हाल बुटवल कालिका क्याम्पसको प्रमुख भएर आफ्नो जिम्मेवारी बहन गरी रहँदा आफूलाई सफल भएको अनुभूति गरिरहेको छु त्यो सफलताको मुख्य कारण कालिका नै हो। नेपालको समसामायिक शैक्षिक व्यवस्थापनलाई तुलना गरी हेर्दा शिक्षामा नवीनतम् कार्य कालिकाले नै गरेको छ। पछिल्लो पटक करिब-करिब समाप्त हुन लागेको मानवज्ञान मा.वि.सँग समायोजन गरी कालिका र मानवज्ञान मा.वि. दुवैलाई समानान्तर ढङ्गले सञ्चालन गरी सामुदायिक विद्यालय व्यवस्थापन पक्ष राम्रो गर्दा सबै विद्यालय राम्रा हुन सक्छन् भन्ने उदाहरण पेस गरेको छ। सेवा, सुविधा र अवसर जुटाएर सरकारी लगानी गर र ठुला विद्यालय (Big School) बनाउ भन्ने उदाहरण सरकारलाई पेस गरेको छ। ८०५३ विद्यार्थी संख्यालाई व्यवस्थित गरेर सञ्चालन गरी गुणस्तरमा पनि नेपाल प्रथम बन्न सक्छ भन्ने उदाहरण कालिकाले पेस गरेको छ। यता उच्च शिक्षातर्फ बुटवल कालिका क्याम्पसले पनि छोटो समयमा भौतिक, शैक्षिक, आर्थिक र सामाजिक रुपमा आफ्नो बेग्लै पहिचान बनाएको छ, निजी क्षेत्रको बु.उ.म.न.पा. ६ मा सञ्चालित अन्नपूर्ण मोडेल कलेजलाई सामुदायिक बुटवल कालिका क्याम्पसमा समायोजन गरी नेपालमा नयाँ उदाहरण पेस गरेको छ। BBS र BCA कार्यक्रममा नेपालमा उत्कृष्ठ परिणाम देखाउँदै अबका दिनमा यस क्याम्पसले BBS, BCA, B.Ed, BSW, MA तर्फ RD (Rural Development) र English अध्ययन गर्न पाउने क्याम्पसको रुपमा अगाडि बढी रहेको छ। आउँदो केही महिनाभित्र UGC बाट QAA प्राप्त क्याम्पस हुनेछ भन्ने आशाका साथ BIT र MBS को कक्षा सञ्चालनको लागि पनि तयारी गरिरहेका छौं।

यसरी कालिकाको Team Work बाट सबैले सिक्न जरुरी छ। सामाजिक संस्था सञ्चालन गर्दा धेरै चुनौती आउन सक्छन् तर कालिका जस्तै भइरहनको लागि कुशल नेतृत्व, जसले आफ्ना सबै योजना, नीति र कार्यक्रम समय सापेक्ष निमार्ण, परिमार्जन र प्रयोग गर्दै जान सक्नु पर्दछ।

अन्त्यमा कालिका मानवज्ञान मा.वि.को ६३औँ वार्षिकोत्सव तथा अभिभावक दिवसको अवसरमा शिक्षक, अभिभावक, विद्यार्थी र विद्यालय व्यवस्थापन समिति, शिक्षक अभिभावक संघ र सम्पूर्ण सरोकारवालाहरुले हाम्रो धरोहरले सदासर्वदा यही उचाइ कायम गर्दै जाओस् र भावी सन्ततिलाई समेत गर्व गर्न लायक बनिरहोस् भनौं र त्यसैअनुसार समर्पित बनौं। शुभकामना छ।

जय कालिका !!!

# सुविधाजनक जीवन र आर्थिक विकासमा विज्ञान प्रविधिको भूमिका



● ई. नारायण बहादुर गुरुङ

रुपन्देही बुटवल वरिपरि ईलाकाका अहिलेका धेरै युवायुवतीहरूलाई आजभन्दा ५०/६० बर्ष अघि अथवा उनीहरूका आमा बाबुहरूले भोग्नु परेको जीवनका असुविधाबारे जानाकारी नहुन सक्छ। त्यतिबेला धनसम्पति भएका धनी मानिसहरू पनि अहिलेको जस्तो धेरै सुबिधाबाट बन्चित थिए। अहिलेको दृष्टिकोणबाट हेर्दा जीवन कष्टपूर्ण थियो। शुद्ध खानेपानीको अभाव थियो। बुटवल खस्यौली बजारका मानिसहरूले पनि जुनसुकै मौसममा पनि तिनाउ खोलाको पानी खान बाध्य थिए। बत्तीको लागि मट्टितेलले बल्ने लाल्टिन, ढिब्रीमा भर पर्नु पर्थ्यो। खाना पकाउन अत्याधिक धुँवा आउने दाउरामा भर पर्नु पर्थ्यो। जसकाकारण हाम्रा आमा दिदी बहिनीहरूको आँखा, फोक्सोदेखि अरू स्वास्थ्यका समस्याबाट ग्रसित हुन पुग्थे। स्वास्थ्योपचारको लागि राम्रो स्वास्थ्य केन्द्रहरू अस्पताल र औषधीहरू थिएनन्। टाढा भएका आफन्तहरू साथी भाईहरूसंग सम्पर्क गर्न टेलिफोन सुविधा समेत थिएन। बाटाघाटा, यातायात जतातत्तै असुविधै असुविधा थियो। यहाँ उल्लेख गरेको अवस्था करिब करिब नेपालको अधिकाश ठाउँसंग मिल्दोजुल्दो हुन सक्छ।

त्यतिबेलाका आवासहरू हेर्दा पनि आधुनिक निर्माण सामग्रीहरूको अभाव र सीमित निर्माण ज्ञानका कारण सामान्य थिए। तिनमा दिसा पिसाब गर्न, नुहाउन सुविधाहरु थिएनन्। गतिलो चुलोसमेत थिएन। अत्यधिक गर्मीको बेला शितल पार्न अहिले जस्तो वातानुकूलित यन्त्रहरु थिएनन्। बहुसंख्यक घरहरू खर, काठ, माटो र ढुँगाले बनेका छाप्रा जस्ताहरू थिए। अहिले त बुटवल उपमहानगर वरिपरि र तिलोत्तमा नगरपालिका भित्र त्यस्ता छाप्राहरू भेटाउन पनि सायद खोज्दै हिंडनु पर्ला।

आज ती असुविधाहरू दन्त्यकथाजस्ता लाग्न सक्छन्। आखिर के कारणले यत्रो परिवर्तन भयो ? के दैवी चमत्कार अथवा आफसेआफ् यी सुविधाहरू हामी मानवजातिलाई उपलब्ध भएको हो त ? वास्तवमा त्यस्तो कारणले होइन भन्ने कुरा विगतमा ती असुविधाहरू भोग्दै आउनु भएको व्यक्तिका व्यक्तिगत अनुभवहरूबाट प्रष्ट हुन आउँछ। यी परिवर्तनको मूल सम्बाहक विज्ञान प्रविधिका कारण भएका हुन् भनेर बुझ्न सकिन्छ। अरूले विकशित गरिदिएका प्रविधिहरूलाई भित्राएर एकैपटक निकै फडको मारेका छौं उपभोक्ताको रूपमा। यी प्रविधीहरूको अनुसन्धान र विकासमा हाम्रो योगदान भने न्युन छ।

आजका उपलब्धिहरू वैज्ञानिकहरू, प्राविधिकहरूले प्रकृतिको रहस्यहरूको सत्यतथ्य बुझेर, प्रकृतिमा पाईने बस्तुहरू भित्र रहेको विशिष्ट गुणहरू माथि लामो अनुसन्धान, दृढ विश्वास, अथक लगन तथा परिश्रम गरि ती गुणहरूबाट मानव कल्याणका लागि लिन सक्ने फाईदाहरूबारे नयाँ नयाँ आविष्कार गरिएका र तिनीहरूले प्रतिप्रादित गरेका सिद्धान्तहरूको फलस्वरूप हो भन्न सकिन्छ। यी उपलब्धिहरूले हाम्रो जीवन दिनप्रतिदिन सुविधाजनक, कम समयमा बढी उत्पादनमूलक बनाउन सहयोग गरेको छ। केही चिज बनाउन वा उत्पादन गर्न लाग्ने समय छोटिएको छ भने पहिलाभन्दा धेरै कम मेहनतमा त्यतिकै उपलब्धी हुँदा हाम्रो आय बढेको छ, आर्थिकरूपमा सम्पन्न हुन सकेका छौं।

संसारमा भएका असंख्य प्राणीहरूमा मानव जाति नै यस्तो प्राणी हो जसले जन्मेदेखि मृत्युसम्म गास बास कपासदेखि सबैखाले सुविधाको निमित्त प्रयास गर्दछ र केही न केही सिर्जना गरिरहेको हुन्छ । त्यसमध्ये वैज्ञानिक प्रविधिकहरूको विशेष बौद्धिक, शारीरिक मेहनतले संसारभरिका हामीजस्तो अधिकाश सामान्य मानिसहरू पनि सुविधाभोगी हुने सौभाग्य पाएका छौं । तर अरू प्राणीहरूले जन्मँदा उनीहरूको प्रजाति अनुसार प्रकृतिले निर्धारण गरेको गुणअनुसार जीवन गुजार्छन् । बासगासको लागि आफै केही गर्न सक्दैनन् र पूर्णरूपले प्रकृतिमा यात मानव सहयोगमा निर्भर रहन्छन् ।

पृथ्वीमा मानव जातिको उत्पति पछि ढुङ्गे युगमा ढुङ्गा, फलामे युगदेखि फलामबाट आवश्यक उपकरणहरू बनाए । कृषि युगमा आएर खेतिपाती गर्ने, शरीरलाई जाडो गर्मीबाट जोगाउन कपडा बनाउने प्रविधिको विकास गरे । कपासबाट धागो बनाउने चर्खा, बगिरहेको पानीको शक्तिबाट अन्न पिस्ने घट्ट, धान कुटने ढिकी, जाँतो, खेत जोत्ने खन्ने हलो, कोदालो आदि सबै प्रविधिकै अङ्ग हुन् । तर हाम्रो दक्षिण एशियामा यी प्रविधि विकास गर्नेहरू जहिले पनि अपहेलित रहे । यी प्रविधिहरू जहाँका त्यही रहे । कुनै किसिमको विकास हुन सकेन । फलस्वरूप हामी पिछडियौं । उत्पादकत्व बढाउने काम नहुँदा आयश्रोत बढेन र निर्धनतामा बाँच्न बाध्य रह्यौं ।

वेलायतमा बाफ ईन्जिनको आविस्कार भएपछि यान्त्रिक युगमा प्रवेश गऱ्यो । मानवजातिले उत्पादकत्व बढाउन यो बेलादेखि फड्को माऱ्यो । यो आविष्कारले बेलायत शक्तिशाली र समृद्ध भयो धेरै देशलाई आफ्नो अधीनमा राखेर उपनिवेश बनायो । यसको अविस्कार पछि धेरै प्राविधिक आविष्कारहरू भए बिज्ञानमा नयाँ नयाँ सिध्दान्तले प्रविधीको विकासको ढोका झन झन फराकिलो बनाई दियो । अहिले डीजिटल युगमा आईपुगेका छौं । हाम्रो हातहातमा भएको मोवाईल फोन आकारमा शुरूवाती कालका कम्प्युटरभन्दा कैयन गुणाले सानो भए पनि त्यो भन्दा कैयन गुणा शक्तिशाली छ । यसबाट सामान्य टेलिफोनले काम गर्नेदेखि कम्पुटर, टीभी भिडियोको काम लिन सकिन्छ । पहिला धेरै मान्छेहरूमार्फत धेरै समय लगाएर गरिने काम मोवाईलको कारण क्षण भरमै गर्न सकिन्छ । यो एउटा उदाहरणले विज्ञान प्रविधिको महत्व हाम्रो जीवनमा कतिको रहेछ भनेर बुझ्न सकिन्छ ।

थर्मोडाईनमिक्सको सिध्दान्तमा आधारित डिजेल पेट्रोलबाट चल्ने गाडीहरू प्रदूषण रहित नयाँ उर्जाबाट चल्ने ब्याटरी गाडीबाट विस्तापित हुने क्रम शुरू भएको छ । थर्मोडाईनमिक्सको सिध्दान्तअनुसार वायुको तापक्रम बढाउँदै जाँदा त्यसको आयतन बड्दै जाँदा अतिरिक्त स्थानको आवश्यकता पर्छ वरिपरि चाप बढाउँदै जान्छ । गाडीको ईन्जिनको सिलिन्डर भित्र भएको ग्याँस, पेट्रोल वा डिजेलको झिल्काको कारणले आयतन बढे पछि पिस्टनमा दबाब दिन थाल्दछ र न्यूटनको पहिलो ल अफ मोसनको सिद्धान्तअनुसार गति शुरु हुन्छ । त्यही गतिलाई बेल्ट, गियरहरूबाट पाङ्गामा पुराएपछि गाडी चल्न थाल्छ । यसरी गतिलाई एक ठाउँबाट अर्को ठाउँमा सार्ने प्रविधिलाई ट्रान्समिसन अफ मोसन भनिन्छ । उहिलेको टुकटुके धान कुटने मिलमा डीजेल ईन्जिनबाट उत्पादित गतिलाई लामो च्याप्टो बेल्टबाट धान कुटने मसिनमा जोडेर धान कुटने गरिन्थ्यो । त्यो प्रविधि खतरायुक्त र गति ट्रान्समिसिन एफिसेन्सी कम हुने गरेकोले त्यो प्रविधिलाई नयाँ नयाँ सुरक्षित र एफिसेएन्ट ट्रान्समिसन प्रणालीले विस्तापित गरिसकेको छ । त्यो टुकटुके मिलले धेरै मान्छेलाई अपाङ्ग पनि बनाउँथ्यो ।

नयाँ उर्जाबाट चल्ने गाडी बनाउन सेमिकन्डकटरबाट बन्ने चिपको आवश्यकता पर्छ । यो चिप हाम्रो मोबाईलदेखि कम्प्युटर, टीवी, लुगा धुने मसिन आदिमा नभै नहुने भैसकेको छ । अहिले विकसित देशहरू कसरी शक्तिशाली चिपहरूको निर्माण गरेर प्राविधिक, सामरिक, आर्थिक रूपमा अघि बढ्ने होडमा छन् । अहिलेसम्म अमेरिका चिप डिजाईन अग्रस्थानमा छ । हामी जस्तै पछि परेको देश चीन विज्ञान प्रविधिमा अत्याधिक लगानी गरेर आर्थिक प्राविधिक रूपमा अमेरिकाको हाराहारीमा आउन थालेकोले यी उच्च प्रविधिमा नाकाबन्दी लगाउँदै छ । जसलाई प्राविधिक युद्धको नामले चिनिन्छ ।

सेमिकण्डकटर ईलेक्ट्रोनिकबाट चल्ने सबै उपकरणहरूलाई नभै नहुने एउटा कम्पोनेन्ट हो। दुरसंचार, कम्प्युटिङ्ग, स्वास्थ्य, सैनिक हात हितयर प्रणाली, यातायात, स्वच्छ उर्जा साथै अनगिन्ती उपकरणहरूमा प्रयोग भैरहेको छ। सेमीकण्डकटरले ईलेक्ट्रोनिक उपकरणहरूमा विद्युतीय प्रवाह प्रसारण गर्न र व्यवस्थापन गर्न काम गर्छ। यस्तो अति उपयोगी सेमिकण्डर बालुवामा पाईने सिलिकन तत्व क्वार्जबाट बन्छ।

अहिलेसम्म विज्ञान प्रविधिबाट पाइने सुविधाहरू र उदाहरणको रूपमा केही प्रविधिको बारेमा जानकारी गराएँ। के ती प्रविधि आफै उत्पन्न भएका हुन ? के ती स्वचालित छन् ? तिनको अनुसन्धान, विकासमा हामी मानिसको के महत्व छ त्यतातर्फ लागौं।

विज्ञान प्रविधिमा नयाँ नयाँ कुराहरू अनुसन्धान गर्न र विकास गर्नका लागि विज्ञान, प्रविधि, इन्जिनियरिङ्ग र म्याथमेटिकमा उच्च शिक्षा प्राप्त गरेका प्रतिभाहरूको आवश्यकता पर्छ। यस्ता प्रातिभाहरूलाई विकसित देशहरूमा सम्मानित गरिन्छ र उनीहरूलाई आकर्षण गर्न विभिन्न योजनाहरू अघि सार्छन्।

आजकाल कुन कुन देशका विश्वविद्यालयले STEM (Science, Technology, Engineering, Mathematics ) विषयमा विद्यार्थीहरू वर्षेनी कति उत्पादन गर्छन भन्ने कुराले निकै महत्व राख्ने गरेको छ। पहिला पहिला यस्ता प्रतिभाहरू सबैखाले सुविधाहरू र उनीहरूको प्रतिभाको कदर भएकाले सँयुक्त राज्य अमेरिका धेरैको रोजाईमा पर्थ्यो। धेरै लगानी गरेर उत्पादित त्यस्ता विदेशी प्रतिभाहरूले अमेरिकालाई निकै फाईदा पुगेको थियो र विज्ञान प्रविधिको अनुसन्धान र आविष्कारमा अग्रस्थानमा राख्न सफल भएको थियो। विदेशीहरू भएकाले तुलनात्मक रूपमा सस्तो तलब सुविधा दिन्थे भने त्यहाँका रैथाने गोरा र काला जातिहरू यी विषयहरूले तुलनात्मक रूपमा कम संख्यामा पढने गर्छन्। अमेरिकामा त्यस्ता प्रतिभाहरूमा चिनियाँहरू र भारतीयहरूको बाहुल्य छ। नेपाली प्रतिभाहरू पनि त्यसमध्ये पर्छन्।

चिनियाँ सरकारले STEM प्रतिभा उत्पादनमा निकै जोड दिने गरेका छन्। उनीहरूको विश्वविद्यालयबाट यो विषय लिएर उच्चशिक्षामा उतीर्ण भएकाहरूले ४० प्रतिशत ओगट्छ। विदेशी विश्वविद्यालयमा पढन जानेहरू पनि यहि विषय बढी पढने गर्छन्। चीनले गरेको प्रविधिक आर्थिक विकासबाट आत्तिएको अमेरिकाले ट्रम्पको पालादेखि चिनियाँ विद्यार्थीहरूलाई त्यहाँका विश्वविद्यालयहरूमा यी विषयहरू पढन अनुसन्धान गर्न, बन्देज गर्न थालेको छ र विद्यार्थी भिषामा कसिकसाउ गर्न थालेको छ। कुनैबेला दुवै हात फैलाएर स्वागत गरिने चिनिया विद्यार्थीहरूलाई आफूले मात्र होईन उसको सहयोगी राष्ट्रहरूलाई पनि दवाब दिंदै आएको छ। रूस, जर्मनी, भारतले उत्पादन गरेका विद्यार्थीहरू मध्ये ३० प्रतिशन ओगट्छ भने अमेरिकाको भने जम्मा १८ प्रतिशत छ। त्यसकारण राष्ट्रपति ओबामाको पालादेखि सानै कक्षा देखि यी विषयमा बढी ध्यान दिनु पर्ने निति बनाउँदै आएको छ। सबै माथिका तथ्यको आधारमा के भन्न सकिन्छ भने देशको सर्वाङ्गिण विकास र समृद्धिमा क्त्भ: प्रतिभा जस्ता जनशक्तिको निकै ठूलो भूमिका छ, र खाँचो छ। यी प्रतिभाहरू अमेरिका बाहेक चीन र अन्य राष्ट्रले आफ्नो देशमा आकर्षण गर्ने होड चलेको छ।

आजकाल मेरा सहपाठी तथा घनिष्ट साथी महावीर पुन आफूले सुरू गरेको अविष्कार केन्द्र र ३० बर्षदेखि बन्द रहेको कृषि औजार कारखानालाई पुनसञ्चालन गर्नको लागि चाहिने अर्थ संकलनका लागि बाटो बाटोमा आफ्नो आत्मकथाको किताब वेच्दै हिंडेका छन्। उनी नेपाली प्रतिभाहरूलाई देशभित्र अनुसन्धान गर्ने, नेपाललाई चाहिने आवश्यक वस्तुहरूको आविष्कार गराउने वातावरण सिर्जना गर्न मरिमेटी लागेका छन्। सरकारले आफैले गर्नु पर्ने यति महत्वपूर्ण काम महावीर पुनको प्रयासलाई कुनै सहयोग नगरि उदासिन रहेको दुखद स्थिति छ। हामीकहाँ भएको जलश्रोत र जनशक्तिको सहि ढङ्गबाट परिचालित नहुँदा हामी कतै असफल राष्ट्रमा परिणत हुन गैरहेका त छैनौं भन्ने आशंका उठन थालेको छ। उच्च प्रतिभाहरू र दक्ष जनशक्ती एउटा महत्वपूर्ण श्रोत हुन्। यिनीहरूको उचित व्यवस्थापन विना देश उँघो लाग्न सम्भव छैन।

जोगीकुटी, बुटवल, २०८० मङ्सिर २३

# To My Corrupt Politician



Eebaraj Tiwari, Teacher

In the realm of Nepal, where dreams should soar,
Lies a tale of despair, a land stripped to the core.
Corrupt politicians, architects of woe,
Reduced a nation proud to the world's poorest show.

Oh, politicians of greed, your actions so vile,
You've left our people burdened, facing hardship and trial.
With pockets lined with gold, you've siphoned away,
The wealth meant for progress, leading us astray.

Nepal, a jewel of potential untold,
Now languishes in poverty, a story to be told.
Your insatiable appetite for personal gain,
Has left our country destitute, crying out in pain.

While you bask in opulence, the masses despair,
Struggling for survival, in a state of deep despair.
Education is neglected, infrastructure crumbling,
As you revel in corruption, our future is tumbling.

Oh, corrupt politicians, your legacy is clear,
A shattered economy, a nation steeped in fear.
You've plundered resources, sold our heritage for naught,
Leaving the hopes of millions to be trampled and forgotten.

But hear our voices, rising from the ashes,
We refuse to be silenced, we'll shatter your facades.
The spirit of Nepal is resilient, bold, and true,
Together we'll rise, and expose your deceitful crew.

We yearn for leaders who'll serve with honor and might,
Guided by integrity, striving for what's right.
For Nepal's people, we'll reclaim our worth,
Rebuild our nation's pride, a renaissance to birth.

The road will be arduous, the journey long,
But united we'll stand, undeterred and strong.
No longer shall corruption hold us in its grip,
We'll forge a brighter future, from this darkness we'll slip.

In the land of Nepal, where hope still thrives,
We'll restore our nation's glory, with determined strides.
Farewell, corrupt politicians, your time shall cease,
Nepal will rise again, a beacon of peace.

# Incorporating Second Language Acquisition to Teacher Education and its Reflection in ELT Classes in Nepal



● **Krishna Prasad Gautam,** Incharge Sector 2

**Abstract**

*This paper reports the reflection of second language acquisition (SLA) and teacher education in ELT classes in Nepal. SLA plays a vital role in teacher education programs as it provides valuable insights to how learners acquire a new language, the factors that influence their learning process, and the challenges they might face. As it is a short reflective paper, qualitative interpretive design is used. A few documents, journal articles and previous studies carried out in the field of SLA and teacher education were reviewed and analyzed to develop the themes and discussion. It was found that SLA and teacher education are interrelated each other since they provide some insights to the teacher educators and teachers to adopt the learner-centered techniques and activities in their language classes to make their classes interactive, collaborative and effective in Nepali context. The study suggests that language teachers need to be updated with the concepts, aspects, approaches, theories and principles of SLA to reflect them in their English language teaching in the context of Nepal.*

**Key Words:** *Conceptualizing, ELT Classroom, Incorporating, SLA, Teacher Education*

**Introduction**

Second Language Acquisition (SLA) refers to the process of learning a language other than the learners' first language. In this process, the learners learn the second language either in formal educational contexts or in informal natural context. Second language acquisition aims to explain the process of how learners acquire a second language where second language means any language other than the learners' first language, encompassing foreign as well as third or fourth language (Burns & Richards, 2009). In other words, SLA refers to the process through which learners learn and acquire a language other than their native language. It emphasizes how learners acquire proficiency in a second language either in an educational formal setting or in a naturalistic informal setting. In the beginning, SLA was closely connected with language pedagogy as language teachers or teacher educators were involved in the research of SLA. Later, SLA became an independent area of study incorporating the other disciplines - linguistics, psychology, sociology as well as education. SLA has become a well-established field, with dedicated programs carrying its name and integrated with

applied linguistics, TESOL, and foreign language education programs(Ellis, 2010b).In recent times, distinct branches of SLA have been emerged. Among them, instructed SLA is quite relevant one which focuses on the connection between instruction and L2 acquisition. Instructed SLA deals with the process of learning a second language in a formal or instructional setting that involves the L2 teaching by teachers or L2 instructors, typically in a classroom setting (Burns & Richards, 2009). SLA plays a vital role in teacher education programs as it provides valuable insights to how learners acquire a new language, the factors that influence their learning process, and the challenges they might face. By drawing the insights from linguistics, psychology, education, sociolinguistics, and other disciplines, educators can develop a holistic understanding of SLA and effective language teaching practices.

**Conceptualizing the Strategy, Technique and Approach of SLA in Teacher Education**

We can conceptualize the strategy, technique, and approach for teaching second language acquisition and teacher educations considering various principles and practices that can effectively facilitate the learning process and promote professional growth among educators. Teachers use a combination of teaching approaches, strategies and techniques in L2 classes to facilitate the second language acquisition process of L2 learners that they learn in teacher education programs(Burns & Richards, 2009). Understanding the principles and theories of SLA enables the educators to become more effective language teachers and address the diverse needs of their students. Being familiarize with theories like behaviorism, cognitivism, constructivism, and sociocultural theory will guide us to use the approach, method and technique to teaching second language. Teacher educators can take on the role of information conveyors connecting SLA, operating an applied science theory to practice approach in education (Ellis, 2010a). They can serve as awareness-raisers; prompting instructors to reflect on their own teaching practices in the manner of a reflective model of education. Similarly, the concept of language input and output help learners to practice producing the language actively and correct their errors constructively. SLA happens when a student comprehends the linguistic input in a low-anxiety, high-motivation condition, and it is argued that the duty of the instructor is to establish such a learning environment (Moeller & Catalano, 2015). Additionally the study of SLA helps teachers understand the potential errors and difficulties learners may encounter in their learning. Educators can better address these challenges and provide targeted support to their students. As a language teacher, I use different learning theories, SLA principles and practices in my second language teaching class to make my teaching more effective and productive.

Incorporating SLA into teacher education promotes reflective teaching, collaborative learning and teacher professional development practices. A language teacher needs to know the basic concept of SLA, approaches and perspectives of SLA, different linguistic and sociocultural theories, instructed SLA and so on to shape the learning environment to enhance language learning (Burns & Richards, 2009). Teachers can critically evaluate their own language teaching methods and make decisions about the instructional choices based on evidence and research for reflective teaching. Similarly, teachers can engage the learners in collaboration to enhance their language skills. Group activities, task based learning, and project based learning can provide the valuable opportunities for peer learning in different cultural context. In foreign language classrooms, pair work, group work, cooperative/collaborative learning settings, genuine resources, culturally integrated lesson content, and interactive exercises centered on the cognitive and emotional domains are implemented (Moeller & Catalano, 2015). Moreover, incorporating SLA in teacher education promotes teachers professional development to keep the teachers updated with the latest SLA theories, principles, teaching techniques which are reflected in their teaching English. Incorporating SLA to teacher education is resulted in teacher professional development that provides educators with valuable tools and knowledge to optimize their teaching practices, better support their students, and ultimately create a more effective learning environment (Farrell, 2019). Overall, SLA is an essential component of teacher education that helps teachers improve their teaching with the help of SLA theories, principles and practices which have been emerging day by day in the field of English language teaching. As a language teacher, I recognize the importance of understanding SLA to enhance my teaching practice. For example, the concept of L1 transfer, stage development, role of instruction and interaction help me to create more effective learning environment.

**Implementing the Approaches of SLA in Nepali ELT Classrooms**

We can implement the approaches of Second Language Acquisition (SLA) in English language classrooms in Nepal. We language teachers can adopt the methodologies that facilitate the natural process of language teaching. SLA addresses a wide range of topics including L1 transfer, staged development, systematicity in growth, variability in learner, order and sequence of acquisition, input and interaction, linguistic aspects of L2 learning, cognitive aspects of L2 learning and so on (Burns & Richards, 2009). For language teachers, understanding these descriptive facts of L2 acquisition is essential as they shape the learning environment to maximize language learning in ELT classes in Nepal.The use of proper English language

teaching methods and strategies is important for successful and effective teaching and learning (Bhandari, 2020). Input and interaction provide ample opportunities for students to achieve current level of proficiency. A language teacher encourages the interaction in target language through group discussion, debate, and pair works where English language is used as much as possible during the classroom activities.Communicative approach of language learning focuses on the communication over rote memorization in ELT. Language teachers can design student-teacher interaction in their English language classroomswhich plays a vital role in developing a positive impact on students' academic progress and communicative competence (Tiwari, 2021). As a language teacher, I have the experience of role of interaction in my English language classroom. Communicative language teaching is a new trend in ELT which can be used in the ELT classrooms in Nepal.

In the same way, task-based learning and the sociocultural approach of language learning plays a vital role in ELT in Nepal. Language teachers design their class with meaningful task that reflect real-life situation. Present day SLA theories and approaches like sociocultural theory, interactional perspective, Long's interactional hypothesis, and Swain's Output hypothesis emphasize the significance of interaction and communication in the process of acquiring a second language (Adhikari, 2010). In the context of Nepal, teachers can involve the students in speaking considering the individual differences to make the language learning interactive. Learners with different cultural and social background will take part in the interaction and develop their self-respect and autonomy of learning. Moreover, L2 learners have been shown to learn the grammatical features of an L2 in fairly standard order at a gradual rate during development stages which represent largely well-defined sequences of acquisition(Burns & Richards, 2009).The term interlanguage is used to refer to the L2 systems the learner constructs during the course of learning. It is the unique linguistic state that learners create as they attempt to bridge the gap between their native language and the target language they are learning. In Nepal, It is found that language teachers do not use the student-centered interactive techniques considering their individual differences(Bhandari, 2020). Language teachers in Nepal need to make their lesson plans considering the different theories and perspectives of L2 learning to make learning more interactive and meaningful.

Implementing the cognitive aspect of learning and the linguistic aspect of learning in the Nepali ELT classroom provides some insights to the English language teachers about second language teaching. Cognitive aspect of L2 learning is related to role of human brain in the processing of L2 information (Burns &

Richards, 2009). Cognitive theories regard second language acquisition as a gradual and implicit process of skill development that needs a lot of exposure to the target language. Therefore language teachers need to use student-centered techniques providing too much exposure to the learners to expose their cognitive aspect of learning. Similarly, the linguistic aspect of L2 learning focuses on the role of universal grammar (UG) in L2 acquisition (Burns & Richards, 2009). According to this theory of UG, the learners are equipped with innate capacity of learning linguistic principles which help learners to acquire the rules of L2 grammar. Though the input provided to them is very poor, they learn the language. A language teacher, need to consider this aspect while planning his/her ELT class.

To sum up, incorporating SLA into language teacher education is a crucial step toward enhancing language teaching practices. Understanding different approaches and theoretical aspects of L2 acquisition equips language teachers with valuable insights to support their students' language learning. As a language teacher, I will explore the various approaches to incorporate SLA and evaluate their effectiveness in my specific educational context. By fostering my knowledge of SLA, I aim to create a more engaging and effective language learning environment for my students.

**Conclusion**

Second Language Acquisition (SLA) refers to the process through which learners learn and acquire a language other than their native language either in educational formal setting or in natural informal setting. SLA plays a vital role in teacher education programs as it provides valuable insights to how learners acquire a new language, the factors that influence their learning process, and the challenges they might face.Incorporating SLA in teacher education promotes teachers professional development to keep the teachers updated with the latest SLA theories, principles, and teaching techniques which are reflected in their teaching English. SLA theories, principles and approaches help teachers to design interactive learner-centered ELT classes to develop the communicative competence to the learners. A language teacher encourages the interaction in target language through group discussion, debate, and pair works where English language is used as much as possible during the classroom activities.Present day SLA theories and approaches like sociocultural theory, interactional perspective, Long's interactional hypothesis, and Swain's Output hypothesis emphasize the significance of interaction and communication in the process of acquiring a second language.Understanding different approaches and theoretical aspects of L2 acquisition equips language teachers with valuable insights to support their students' language learning. We language teachers need to be updated with the concepts, aspects, approaches, theories and

principles of SLA to reflect them in our English language teaching in Nepal.

**References**

Adhikari, B. R. (2010). Teaching speaking in the Nepalese context: Problems and ways of overcoming them. *Journal of NELTA, 15* (1-2), 1-9.

Bhandari, B. L. (2020). Methods and techniques used by English teacher educators in Nepal. *Journal La Edusci,* 1(4), 9-15.

Burns, A., & Richards, J.C. (2009). *Cambridge guide to second language teacher education.* Cambridge University Press.

Ellis, R. (2010a). A principled approach to incorporating second language acquisition research into a teacher education programme. Reflections on English Language Teaching, 9(1), 1-17.

Ellis, R. (2010b). Second language acquisition, teacher education and language pedagogy. *Language teaching, 43* (2), 182-201.

Farrell, T. S. (2019). Reflective practice in L2 teacher education. *The Routledge handbook of English language teacher education,* 38-51.

Moeller, A. K., & Catalano, T. (2015). Foreign language teaching and learning.

Tiwari, T. D. (2021). Classroom Interaction in Communicative Language Teaching of Public Secondary Schools in Nepal. *Indonesian Journal of English Language Teaching and Applied Linguistics, 5*(2), 373-386.

# म हुँ शिक्षक



**जमुना श्रेष्ठ**
शिक्षक

अन्धकार हटाइ सबमा छर्ने प्रकाश
गराउने आफुभित्रै संतुष्टिको आभाष
पेशालाई पुज्ने एक नमूना बनेर
चिनिन्छु लोकमा हुँ म शिक्षक भनेर

मेरो दायित्व सदा शिक्षार्थीको उन्नति
मेरो उद्देश्य सदा देशको प्रगति
न छ म मा स्वार्थको क्लेश रति
न छ म मा तृप्त हुने अभिलाषा अति

जो कमाउछु म त्यसैमा खुबै रमाउँछु
आफ्ना आचारणले सखी र मित्र बनाउँछु
गर्न म मा छैन, फट्याइ र भ्रष्टाचार
म भित्र सदभावको प्रेम गंगा अपार

म चढ्न नसकुँला, सगर चढ्न सिकाउँछु
जीवन सफल पार्न मिहिनेतले पढ्न सिकाउछु
नहोला वैभव ठुलो धन दौलतले पूर्णता
अरुको हाँसोमा हुन सकूँ, सन्तुष्ट सधै म त

मलाई जन्माइ राष्ट्रले नगरोस् कहिल्यै खेद
अरु पेशा र म बिचमा नहोस् कहिल्यै भेद
बरु आदर्शको घटा भर्न सकूँ चुलिने गरी
नमूना अमर बनूँ बिलाइ नजाऊ भुलिने गरी

# Difficulties and Challenges of investors in share market of Nepal



● **Mr. Shyam Shrestha,** Teacher

The stock market is very difficult and challenging to make profit. It is said only 10% people make profit and 90% people make loss in stock market. Nepalese stock market is more difficult to predict because it is small and highly fluctuating. Profit and loss are two sides of investment. High risk does not result only high profit, it also results high loss. Currently we can see many people are in loss of 30 to 80% who just started investment in share market of nepal last 3 years when Nepal stock Exchange (NEPSE) was at 3200 point. The basic difficulties and challenges of investors in share market of nepal are highlighted below:

**1. Lack of Analysis knowledge:** There is a lack of good analysis knowledge in nepalese stock market investors. There are many learning institutes in nepal but people are not getting benefits from it. Investors are armless without knowledge of stock market analysis tools. Basically two types of analysis method are useful for investors.



**A) Fundamental Analysis:** It is a method of determining the actual and fair value of stock by using various economic and financial factors. Some tools such as Earning Per Share (EPS), Net worth per share, Price earning (PE) ratio, Book Value per share (BVPS) etc are key factor for fundamental analysis. It can help investors to make comparative decision about buying and selling of share . But Fundamental analysis may require a good knowledge of financial statements such as Balance Sheet, Income Statement, Cash low statements, statement of Retained earning, Financial analysis tools, annual reports, macro economic indicators etc to determine fair value of share. Fundamental analysis is most useful for long term investment. It is also suggested by warren buffet 'the king of stock market'.



**B) Technical Analysis:** It is one of the most useful tool in the world. It can predict the direction of trend on the basis of price and volume. Technical analysis uses different indicators such as RSI (Relative Strength Index), MACD (Moving Average Convergence Divergence), Bollinger bands, Stochastic RSI etc for prediction of future price. It is very difficult to understand because it requires good experience and detail knowledge of indicators. Technical analysis is mostly using for short term investment in stock market.




**2) Gambling Psychology:** There still confusion in new investors in nepal about share market. Most people think share market is like gambling. So they invest thinking about their luck rather than the financial condition of firm. They have gambling psychology for share market. The do not study and analyse it properly. Most politicians also state that share market is CASINO and unproductive sector. Investors should be clear about how share market works.



**3) Tips/Advice Dependency:** There is a high number of investors who make buy and sell decision through tips and advice. They have no idea what to do. So they follow some share guru and leaders in social media to get some tips and advice. There are a lot investment consultancy in nepal which provides good investment suggestions at minimum fee but most people trust theire senior relatives, friends, Share guru etc to buy and sell decision in nepal.




**4) Easy to Buy but difficult to Sell:** Yes, it feels easy to buy shares in share market but difficult to make sell decision. If current price is lower than buying price, then people do not sell shares because they do not want to make loss. If current price is higher than buying price, then people have greed of more profit. It is difficult to predict what would be the maximum and minimum price of share. It makes people very confusing about when should we sell. Most leading investors only suggest to buy but never suggest to sell in stock market.

It is far more difficult...
to know when to sell a
stock than when to buy.

Bernard Baruch

PICTUREQUOTES.com

**5) Fake people and Fake news:** There is a large number of social media pages and online media which spread fake news and information. It misleads investors to buy and sell in nepalese stock market. Most investors trust them easily because they provide some real information also. So it is very difficult to determine fake and real news. Some reputed investors are also involve in misleading investor through fake news and fake analysis for their own benefits. They are operating many messenger group, club house, telegram group etc where some real and fake information are given time to time. Investor cannot determine fake or real easily in short time.




**6) Fear of Bull and Bear Trend:** The bull trend represents the increase trend in price but bear trend represents down fall trend in price of share in stock market. There are make fake bull and bear conditions in nepalese stock market. It misleads new investors to bull trap and bear trap. Most people lost their money when NEPSE was on 2800 to 3200 point because of a high bull trap. There was more than Rs 2000 crore turnover at that time. So investor should be carefull to determine bull and bear trend.




**Conclusion:** Making money is not easy in stock market. Each investor is facing more than 1500000 investors in stock market where each are trying to win over each. Investors have to be skillful and knowledgeful because they are armless without it. Change in government policies, Lack of emotional Discipline, lack of patience etc are also difficulties and challenges of investors in nepalese stock market. Share market is not gambling but it is analysis based strategical investing. Investors have to keep patience in stock market because it is a market where money transfers from impatient to patient.




मान्छे होस या शेयर बजार, जाने एक दिन माथी नै हो।
Happy investing.....




**References:**

www.arthsarokar.com
www.nepalstock.com.np
www.nrb.org.np
www.sharesansar.com
www.merolagani.com
www.investopedia.com

# कानून विद्यार्थीको नेतृत्व गर्दा कालिकामा दुई वर्ष



● **आशिष पाण्डे**, पूर्व अध्यक्ष, कानुन विद्यार्थी समाज कालिका

कक्षा १० को नतिजा भर्खर भर्खर प्रकाशित भएपछि विधार्थीहरुमा थप अन्योलता र विचलितपन देखिनु स्वाभाविक नै हो। कुनै बेला यस्तै जटिल अवस्थामा म पनि थिए। कक्षा १० सकिएपछि विद्यार्थीले आगामी अध्ययनका लागि लिने निर्णय पनि अत्यन्तै महत्त्वपूर्ण हुने गर्छ। अझ यस्तो महत्वपूर्ण निर्णय लिने बेला दिमागमा आउने हजारौँ थरी विकल्पहरुका बारे वर्णन गरिसक्नु पनि छैन। मेरो विद्यालय तहमा गणित र विज्ञानको अब्बलता र रुचि देखेर कोही मलाई विज्ञानबाटै अध्ययन अघि बढाउन सुझाव दिन्थे, कोही मेरो साहित्यिक लेखरचनाहरु पढेर मैले भाषा,साहित्य तथा कलाबाटै अध्ययन गर्नु पर्ने सुझाव दिन्थे, कोही मैले काम गरेका विद्यार्थीमैत्री संस्थामा मेरो विद्यार्थी नेतृत्वको शैली देखेर राजनीतिशास्त्र नै पढे पनि उज्ज्वल भविष्य भएको भन्दै मख्ख बनाउथे तर मेरो रुचि अनुरुपको विषय मलाई सुझाव गर्ने कम नै थिए। कतिलाई ११ र १२ मा पनि त्यो विषयको पढाई हुन्छ भन्दा आश्चर्य  पनि हुन्थेँ। कक्षा ४ मा ग्रामीण क्षेत्रको एक विद्यालयको रेडक्रर्स सर्कलको सचिव हुदैं बाल अधिकारको क्षेत्रमा निरन्तर पैरवी गर्दै नेपालकै पहिलो बालमैत्री नगरको नगर बाल सञ्जाल सचिव हुदैं लुम्बिनी प्रदेश किशोर सञ्जालमा आबद्ध रही राष्ट्रिय बाल अधिकार परिषद्को बाल अधिकार संवाहककर्मी हुदैं कक्षा १२ मा देशकै नमुना विद्यालयको उत्कृष्ट समूहको विद्यार्थी समाजको अध्यक्ष पदसम्म आइपुग्दाका मेरा आरोहअवरोह र मैले भोगेका भोगाईहरु त्यति सामान्य र सरल पनि थिएनन्। मेरा कयौँ पटकका भोगाईहरुले र मैले देखेका तमाम बेथितिहरुले पनि मलाई कानुन पढ्न प्रेरित गरिरहन्थे। जहिलेबाट म विद्यार्थी नेतृत्वमा होमिए त्यसै बखतदेखि ममा कानुन पढ्ने हुटहुटी दिनप्रति दिन झन् भन्दा झन् बढ्दै आयो। तपाईँहरुलाई सुन्दा पनि अचम्म लाग्न सक्छ। मैले विज्ञान नपढेर कानुन पढेकै कारण मसँग केही शिक्षकहरु र केही आफ्नतजनहरु लामो समयसम्मै रुष्ट हुनुभएको थियो। तर आखिर इच्छाशक्ति भन्दा बलवान् के नै हुने रहेछ ? अतः मैले आफ्नै इच्छाशक्तिलाई जिताउँदै कानुन पढ्ने निर्णयगरेँ। मेरो कानुन पढ्ने इच्छा यति प्रगाढ थियो कि कक्षा १० परीक्षाको तयारीमा व्यस्त हुनु पर्ने म पुस्तकालयबाट र कानुन पढिरहेका अग्रजहरुबाट नेपालको संविधान २०७२, मुलुकी संहिता २०७४, कार्यविधि कानुन, संवैधानिक कानुन, विधिशास्त्र, देवानी तथा फौजदारी कानुन एवम् न्याय र कानुनी मस्यौदा जस्ता किताबहरु मगाएर तिनै पढ्नमा मन्त्रमुग्ध रहन्थेँ। यहाँसम्म कि एक पटक अङ्ग्रेजी पढाउने गुरुले अंग्रेजी पढाइ रहेका बेला मलाई कार्यविधि कानुनको किताब सहित भेटाएर गाली गरेर त्यो किताब लगिदिनुभएको थियो। सरले रात भरि त्यो किताब पढ्नु भएछ संयोग भनौँ त्यो किताब पढेपछि सरमा पनि कानुन पढ्ने रुचि जागेर सर त्यही वर्षमा भर्ना हुनुभयो। छोरा फेल हुने भयो भन्ने डरले केही महिना मम्मीले कानुन र साहित्यका दर्जनौँ किताबहरु साँचो लगाएर दराजमा थन्काइदिनु भयो। साँच्चै भनौँ किताब त किताब भइहाल्यो त्यसमा पनि पूरा रुचिका साथ कानुनका किताब पढ्ने बानी बस्यो भने त्यो पनि कुनै कुलत भन्दा कम नहुँदो रहेछ।

कालिका आफैँमा प्रख्यात शैक्षिक संस्था थियो नै । मेरो सुरुवाती अध्ययन पनि बुटवलमै भएको थियो । त्यही भएर पनि कालिकाको बारेमा मेरो परिवारमा सबै जानकार नै हुनुहुन्थ्यो । कोरोनाको माहामारीका बेला नतिजाको पर्खाई गरिरहेकै बेला मैले कालिका कानुन संकायका तत्कालिन इन्चार्ज युवराज कडेल गुरुलाई फेसबुकमा म्यासेज गरेँ, "सर नमस्कार,म आशिष पाण्डे नवलपरासीबाट कानुन पढ्न एकदमै इच्छुक छु । त्यहाँ विद्यालयमा भर्ना कहिले खुल्ला ?" गुरुले प्रतिक्रिया दिँदै भन्नु भयो "को नतिजा पर्खनुहोस् अनि नतिजा आएपछि हामी जानकारी गराउछौँ । Kalika school of law को पेज हेर्दै गर्नुस् न" त्यसपछि नतिजा आए लगत्तै म कालिकामा कानुन संकायमा भर्ना हुन पुगेँ । सुरुवाती दिनहरुमा कालिकाको विशाल भौतिक संरचना, विद्यार्थी थेगी नसक्नुको चाप र शिक्षकहरुको ठुलो जमातले मलाई श्वास फेर्न पनि अप्ठ्यारो बनाए जस्तो अनुभुति हुन्थ्यो । यो विधालयमा मैले कसरी दुई (२) वर्ष बिताउन सकुँला, यहाँको प्रशासनमा कहिले पुग्ने र विद्यार्थीका सवाल राख्ने अवसर मिल्ला कि नाई र पहिलाको जस्तो मेरो विद्यार्थी नेतृत्वलाई निरन्तरता दिने अवसर प्राप्त होला नहोला ? अनेकन प्रश्नहरु मेरो मानसपटलमा आइरहन्थ्यो । संयोग भनौँ वा ईश्वरले मेरो इच्छा पूरा गराउन जुराएको सुर्वण अवसर म कालिका आएकै केही दिनमा कानुन विद्यार्थी समाज कालिकाको निर्वाचनको तयारी हुन थाल्यो । कानुन विद्यार्थीको छाता संस्था भएकाले पनि मलाई सुरुवाती दिन बेथिति, कुरीति र स्थानीय सरकारको बारेमा व्यङ्ग्यात्मक रुपले प्रस्तुति दिदैँ सिस्नोपानी देउसी भैलो खेलेका थियौँ कानुन समाज कालिकाले लुम्बिनी प्रदेश सभा सचिवालयको सहयोगमा २०७९ मंसिर १३ र १४ गते नमुना संसद अभ्यास कार्यक्रम भव्य रुपमा सम्पन्न गरियो । दुई दिने अभ्यास रुपन्देही जिल्लाका कानुन अध्ययन हुने विद्यालयबाट विद्यार्थीहरुको उपस्थितिमा अत्यन्तै प्रभावकारी रुपमा सफल भएको थियो । दुई दिने अभ्यासमा स्वयम् सभामुखको भूमिकामा थिएँ । कानुनकै विद्यार्थी मुख्यमन्त्री, अर्थमन्त्री, शिक्षामन्त्री लगायत संसद बनेर विभिन्न विधेयकहरुमा छलफल गरियो ।

मङ्सिर २७ गतेदेखि स्थानीय सरकारसँग कानुन विद्यार्थी कार्यक्रम सुरु गरि स्थानीय सरकारका कामकारबाही बारे जानकारी तथा स्थानीय योजना निर्माण , कानुन निर्माण प्रक्रियालाई व्यवहारिक रुपमा बुझ्न २४ पालिकाको ६७ वडामा १५ दिन कानुनका विधार्थीहरुद्वारा सेवा प्रवाह गरिएको थियो ।

२०७९ मंसिर ३० मा न्यायिक समितिको काम कर्तव्य तथा अधिकार सम्बन्धी अभिमुखीकरण कार्यक्रम नागरिक संवाद केन्द्र बुटवलको सहयोगमा ३ स्थानीय तहका न्यायिक समितिको संयोजकहरूबाट (सिद्धार्थनगर नगरपालिका, र बुटवल उपमहानगर पालिका) सम्पन्न गरिएको थियो । कार्यक्रममा सबै न्यायिक संयोजकहरुले आफ्नो अनुभव बताउँदै न्यायिक समितिबारे प्रशिक्षण गर्नुभएको थियो । यस लगत्तै २०७९ माघ ३ गते कानुन विद्यार्थीको लागि मेरो सांसद कार्यक्रम आयोजना गरिएको थियो । जसमा लुम्बिनी प्रदेशका तत्कालीन मुख्यमन्त्री लिला गिरीसहित लगभग ४० जना सांसदहरूसँग लुम्बिनी प्रदेश सभा, दाङमा अन्तरक्रिया कार्यक्रम सम्पन्न गरिएको थियो । संसदहरुले आफ्नो कानुनी सध्दभावना दुतका रुपमा कानुनका विद्यार्थीहरुलाई मनोनित गर्नु भएको थियो । यसपछि २०७९ माघ १३ गते तिलोत्तमा नगरपालिका वडा नं ३ बाट कानुन सचेतना अभियानको सुरुवात गर्दै यसलाई निरन्तरता दिदैँ १३ वटा स्थानीय तहमा सञ्चालन गरिएको थियो । मिति २०७९ माघ २० गते जिल्ला प्रहरी कार्यालय, रुपन्देहीको सहकार्यमा प्रहरी मेरो साथी अन्तरक्रिया कार्यक्रम जिल्ला प्रहरी कार्यलयमा सम्पन्न गरिएको थियो।२०७९ फागुन २४ मा अन्तराष्ट्रिय नारी दिवसको अवसरमा सुनवल नगरप्रमुख विमला अर्यालको प्रमुख आतिथ्यतामा "नेतृत्वमा महिला अवस्था, समस्या र अवसर"विषयका अन्तरक्रिया कार्यक्रम गरिएको थियो । कानुनका विद्यार्थीहरु महिला नेतृत्व आफ्नो जिज्ञासाहरु नगर

प्रमुखसँग राख्दै महिला नेतृत्वलाई सशक्त बनाउनु पर्ने विषयमा बृहत छलफल गरिएको थियो।२०७९ चैत ६ गते कानुन विद्यार्थीको बहसकला अझ अभिवृद्धि गर्नका लागि "संघीयता देशको आवश्यकता कि बोझ ? "भन्ने शिर्षकमा कानुनकै विधार्थीहरुलाई विज्ञ बनाई बहस कार्यक्रम सम्पन्न गरिएको थियो। २०७९ चैत ७ गते सर्वोच्च अदालतका निवर्तमान न्यायाधीश तेज बहादुर के.सी प्रमुख अतिथि, राष्ट्रिय मानवअधिकार आयोग प्रदेश कार्यालय बुटवलका प्रमुख सोमनाथ सुवेदी, नागरिक संबाद केन्द्रकी प्रमुख हेमा न्यौपाने, सिटि कलेज बुटवलका क्याम्पस प्रमुख फणीन्द्र न्यौपाने तथा रिपोर्टर्स क्लब लुम्बिनीका अध्यक्ष राम कुमार क्षेत्री विशिष्ट अतिथिको उपस्थितिमा अभ्यास अदालत कार्यक्रम सम्पन्न गरिएको थियो । नमूना अदालतमा विभिन्न भुमिकामा विद्यार्थीहरु रही फौजदारी मुद्दाको बहस पैरवी सुन्ने र फैसला गर्ने कार्य गरिएको थियो। २०७९ चैत १५ गते पूर्व प्रद्यानमन्त्री के.पि. ओलीसँग कानुन विद्यार्थी समाजका पदाधिकारीहरुले भेट गरि कानुनीशिक्षा सम्बन्धी र समाजका गतिविधि बारे अन्तरक्रिया छलफल गरिएको थियो। २०८० बैशाख २६ बाट कक्षा १२ को बोर्ड परीक्षा हुने भएपछि उक्त समयमा तत्कालीन उपाध्यक्ष विवेक पौडेललाई कार्यवाहक जिम्मेवारी प्रदान गरेर म अध्ययन तर्फ व्यस्त रहेँ। कक्षा १२ को हाम्रो परीक्षा सकिएपछि नयाँ विद्यार्थी आगमन सँगै हाल नमुना मतदानको माध्यमबाट विवेक पौडेल कै नेतृत्व नव कार्यसमिति गठन भएको छ।

कालिकाको मेरो २ वर्षे विद्यार्थी नेतृत्वको अनुभवले धेरै कुराहरु सिकाएको छ। सानो ठाउँबाट सुरु भएको मेरो यात्रा यति ठुलो विद्यार्थी जमात सम्म आइपुग्ला भनेर मैले कल्पना गरेको पनि थिएन। कानुनका ब्याच २०७८ देखि २०८० सम्मका विद्यार्थी अग्रज, सहपाठी तथा अनुयायीहरुको विश्वास र साथले यस स्थानसम्म मलाई प्रेरणा प्रदान गरिरहेकै छ। प्रशासनबाट सदैव सकरात्मक रही सहकार्य गरिदिनु हुने आदरणीय प्र.अ दिनेश थापा,म प्रति एउटा शिक्षकसँगै एक असल अभिभावक समेत भूमिका निभाइरहनु हुने तत्कालिन सङ्काय इन्चार्ज गुरु युवराज कडेल, हरपल मार्गनिर्देशन र सुझाव दिनुहुने गुरुवर्ग, विद्यार्थी समाजका हरेक कार्यक्रमहरुमा खटिने आदरणीय गुरु अधिवक्ता ज्ञानु केसी म्याम, विद्यालय भित्र पनि मातृभावको आभास गराउने गीता मम्मी र सरस्वती थापा म्याम, मलाई हरपल सुझाव दिनुहुने मेरा अग्रज र हरपल हौसला दिने अनुयायी भाइ बहिनी र कानुन विद्यार्थी समाजलाई प्रत्यक्ष अप्रत्यक्ष रुपले सहयोग गर्नुहुने सम्पूर्ण महानुभावहरुकै कारण यो संस्था र यसका नेतृत्व आज हामी यस स्थानमा छौँ। मेरो दुई बर्षे कालिका विद्यार्थी जीवनको समयमा मलाई व्यक्तिगत तथा संस्थागत रुपले साथ र सहयोग गर्नुहुने प्रति आजीवन आभारी र नतमस्तक रहने छु। म कालिकाबाट विदाई हुने बेला भावुक हुँदा युवराज गुरुले मलाई सम्झाउँदै भन्नु भएको थियो "तँ यात्री थिइस चौपारीमा सुस्ताईस, चौपारी सिगार्न कोशिस गरिस, पिपलमा पानी चढाईस। केहीबेर स्वच्छ हावा लिइस। अब तैले चौपारिको चिन्ता गर्ने हैन। अब अगाडि हेर लामो यात्रा गर्नु बाँकी नै छ।" मलाई त्यो सधैँ अन्तरहृदय र मानस्पटलमा आइरहने छ। मैले के कति गरे त्यो थाहा भएन तर जे जति गरे र भयो त्यो सबै कालिकाका कानुन विद्यार्थीहरुकै लागि र कालिका मानवज्ञान मा.वि कै लागि समर्पित भएर गरेको कार्य थियो। आशा छ यहाँहरुको यस्तै मायाले र ईश्वर कृपाले आगामी दिनमा पनि आफ्नो यात्रालाई निरन्तरता दिदैं यस विधालय र संस्थाको लागि हित हुने गरि काम गर्न पाउँ।मैले दुई वर्षे मेरो अनुभवले "गरे जे पनि सम्भव छ, आँट गर्दै नगरे सबै असम्भव छ" भन्ने कुरा सिकाएको छ। आगामी दिनहरुमा पनि यस विद्यालयमा उज्ज्वल भविष्य खोज्दै आउने भाइबहिनी विद्यार्थीहरुलाई आफ्नो क्षमताको सदुपयोग गर्दै आफ्नो विद्याबाट यस विद्यालयको हितको लागि तप्पर रहनुहुन आग्रह समेत गर्दछु।

"जय कानुन, जय कालिका"

# मोबाइल : परिवारको शत्रु



● **विवेक पौडेल**, कक्षा : १२ 'कानुन'

हतारिदैं विद्यालयबाट घर आएर खाजा खाइ साथी सँग खेल्न गरेको पल निकै मीठो लाग्छ । सानो उमेरका केटाकेटी खेल्न जाने, ६ वर्षका केटाकेटी समूह बनाएर साँझमा आफ्नो गफको तालमा बिलिन हुँदै हिँडेको देख्दा आफूपनि त्यो उमेर कहिले आउला भन्ने लाग्ने गर्थ्यो । छ दिन मा आउने शनिवार आउन पनि छ दशक लामो भए जस्तो लाग्थ्यो । चाहे जुन उमेरको व्यक्ति होस् शनिवार नजिकिएसँगै मनमा उत्साह आउने गर्थ्यो । शनिवारको उत्साह पनि छुट्टै हुन्थ्यो । परिवारसँग समय बिताउने,घुम्न जाने, आफन्तीको घर जाने गरिन्थ्यो । प्राय जसो घरमा एउटा मोबाइल हुने गर्थ्यो । मोबाइल भएपनि अहिले जस्तो सुविधा सम्पन्न भने हुन्नथ्यो । मोबाइलको प्रयोग केवल फोन गर्न मात्र प्रयोग गरिने गरिन्थ्यो ।

आज न त्यो शनिवारको प्रतिक्षा छ न साथी भाइसँगको रमाइलो । उबेला फोन मात्र प्रयोग गरिने मोबाइलले जीवनमा यति सम्म परिवर्तन ल्याउँछ भन्ने कल्पना पनि गर्न सकिने अवस्था थिएन । समयको मागसँगै परिवर्तन हुनु आवश्यक हो तर परिवर्तनको लहडमा दौडिँदा उक्त परिवर्तनले हामीलाई पारेको प्रभावको बारेमा जान्नु आवश्यक रहेको हुन्छ । मोबाइल,सामाजिक संजाल लगायतका कुराले हामीलाई निकै प्रभाव पारेको धेरै समय भएको छैन । मोबाइलको नशा लागू-औषधको नशा भन्दापनि बढि खतरनाक भएर निस्केको छ । हरेक उमेरको मानिसलाई यसले समस्याको बेलैमा चित्रण गर्न नसके यसले मानव जीवनमा ठुलै समस्या निम्त्याउने अनुमान गर्न सकिन्छ ।

**नेपालमा मोबाइल प्रयोगकर्ता कसरी बढे ?**

नेपालमा दूरसञ्चारको लामो इतिहास छ, जुन सन् १९१३ मा पहिलो टेलिफोन लाइन स्थापना भएको थियो ।

नेपालमा पहिलो मोबाइल कहिले भित्रियो भयो भन्ने प्रश्न को निश्चित उत्तर छैन तर, धेरैले नेपालमा पहिलो मोबाइल सन् २००० मा प्रक्षेपण भएको नोकिया ३३१० हो भन्ने विश्वास गर्छन्। केही वर्ष अधि सम्म कता कति मात्र मोबाइल प्रयोग कर्ता देखिने गर्थे भने आजकल कताकति मोबाइल प्रयोग नगर्ने मान्छे भेटिने गर्छन् ।

विभिन्न तथ्याङ्कलाई आधार मानेर हेर्दा नेपालमा सन् २०१० बाट अधिकतम मात्रामा मोबाइल प्रयोगकर्ता बढेको पाउने गरिन्छ । कोरोना महामारीको लकडाउनसँगै अफिसको काम, विद्यार्थीको पठन पाठन लगायतका कामहरू अनलाइनको माध्यमबाट हुन थाले । तत्कालीन समयमा मोबाइल नभइ नहुने साधन बनिसकेको थियो । महँगो भएका कारण मोबाइल किन्न नसकेका ले पनि त्यो समयमा छोराछोरीलाइ अनलाइन कक्षा पढाउने,आफूले आफ्नो काम गर्नका लागि मोबाइल किन्न बाध्य भए । यसरी घरमा एउटा मात्र हुने फोन घरका हरेक सदस्यको सङ्ख्या अनुसार हुन थाल्यो ।

मानव समुदायलाई मोबाइल आधुनिक विज्ञानले दिएको एक सुनौलो उपहार हो । प्रविधिलाई अँगाल्दै समस्त विश्व अगाडि बढिरहेको छ । नेपालको सन्दर्भमा हेर्दा नेपालको प्रविधि पनि निकै परिवर्तित छ । प्रविधि भित्रिएसँगै मोबाइल प्रयोग कर्ताको संख्या बढ्नु स्वाभाविक छ । मोबाइलको

प्रयोगकर्ता बढ्नु भनेको हरेक मानिसले विभिन्न कुराको सेवा सुविधा सरल तरिका बाट पाउनु हो। यो नै मोबाइलको मुख्य विशेषता हो। स-सानो काम पनि मोबाइलबाटै हुने गर्दछ। आफ्नो सम्पूर्ण काम मोबाइलबाट हुने भएकोले मोबाइल प्रति मानिसको मोह बढ्नु स्वाभाविक हो। रेडियो,टेलिफोन, टर्च, घडि जस्ता नभईनहुने साधनको सुविधा साधरण मोबाइलमा पाइन्छ त्यसैले मोबाइलको प्रयोगकर्ता पनि ह्वात्तै बढेको पाइन्छ।

**मोबाइलले निम्त्याएका समस्याहरु :**

सामाजिक संजालले निम्त्याएका समस्या भनेर हामीले साइबर अपराधका कुरा मात्र व्यापक सुन्न सकिन्छ। तर, यसको गहिरो अनुसन्धान गर्दै जाने भने मोबाइलले मानिसको मस्तिष्क सँगखेलिरहेको छ। यसले मानिसलाइ संसार बाट एक्लो बनाउने, पारिवारिक सम्बन्धमा दरार ल्याउने र आत्महत्या गर्न सम्म बाध्य बनाउने जस्ता समस्या निम्त्याएको छ।

बढ्दो चिन्ता, कमजोर आत्म-सम्मान, असुरक्षित संलग्नता, वा भावनात्मक अस्थिरता जस्ता कारकहरूको कारणले मानिसलाइ मानसिक आरामको आवश्यकता हुन्छ। कतिपय मानिसहरू भावनात्मक सम्बन्धमा आराम पाउन मोबाइल फोनको अत्याधिक प्रयोग गर्छन्। यसरी आराम पाउनको लागी मोबाइल प्रयोग गर्दा मानिसमा मोबाइलको लत बस्न जान्छ। यसलाइ नै नोमोफोबिया भनिन्छ। नोमोफोबिया सामान्यतया व्यवहारिक लत मानिन्छ। यसले लागू पदार्थको लतसँग धेरै विशेषताहरू साझा गर्दछ। इन्टरनेटमा मोबाइल फोनको जडान नोमोफोबियाको एक कारण हो।

भनिन्छ मोबाइलले, सामाजिक सञ्जालले समस्त संसारलाई एक गाउँमा परिणत गरेको छ। मानिसले संसारको ज्ञान लीन खोज्दा आफ्नो आपसि सम्बन्ध गुमाएको छ। एकै छानोमुनि बसेका परिवारमा पनि पारिवारिक रमझम हुन सकेको हुँदैन। हामी सामाजिक संजालमा यति व्यस्त बन्यौं कि हामिलाइ घर नजिकै घटेको घटना पनि सामाजिक संजाल मार्फत पत्ता लाग्ने गर्दछ। घरमा आमालेखाना खान पनि मोबाइलमै मेसेज गरेर बोलाएको अवस्था देख्न सक्छौं। यसले पारिवारिक सहिष्णुतामा निकै असर गरेको छ।

यसले परिवारको आपसी सम्बंधमा निकै प्रभाव पारेको छ। सानो कुरामा पनि घर परिवारसँग झर्किने, आफूलाई एक्लो बनाउने, बाहिरी कुरामा वास्ता नदिने,आफ्नै आफन्तीलाई समेत नचिन्ने जस्ता समस्या मोबाइलले निम्त्याएको देख्न सकिन्छ।

मोबाइलमार्फत फैलिने मिथ्या सूचना एउटा जल्दो बल्दो समस्याका रूपमा स्थापित हुन पुगेको छ। मानिसले दिनमा आधा समय मोबाइलमा खर्च गर्ने गर्दछन्। सामाजिक सञ्जालको प्रयोग गर्दा उनीहरू त्यहाँ आएका सम्पूर्ण कुरालाई साँचो मान्ने गर्छन्। यही कुराको फाइदा उठाएर कतिपय मानिसले मोबाइल प्रयोगकर्ताको मानसिकतासँग खेलेर उनीहरुलाई लुटेको जस्तो समस्याका खबर सुन्न सकिन्छ।

यी लगायत पनि व्यक्तिको शारीरिक असक्तता र मानसिक तनावको कारण पनि मोबाइल बनेको छ।

**मोबाइलले कसरी समस्या निम्त्यायो ?**

पहिला घरमा एक जनासँग मात्र हुने मोबाइल आज घरको हरेक सदस्यसँग एकाएककै हातमा भेट्न सकिन्छ। लकडाउनले सबैको हातमा मोबाइल पुऱ्याइ सकेको थियो। साना बच्चादेखि लिएर ठूला सम्मले एक एक मोबाइल चलाउन थाले। मोबाइल प्रयोग गरेकालाई सामाजिक सञ्जालमा जोडिन धेरै समय लागेन। सामाजिक सञ्जालको फाइदा बेफाइदा थाहा नपाएका उनीहरू मोबाइलको नराम्रो लतमा फसेको पाइन्छ। सामाजिक सञ्जाल जति हेऱ्यो, जति यसको प्रयोग गऱ्यो त्यति रस हुन थाल्छ। यसरी यो लतको रूपमा स्थापित भएर समस्या निम्त्याएको पाइन्छ।

वर्तमान समयमा मोबाइलको लत धेरै देखिएपनि यसलाई सुधार गर्न सकिएन तर एउटा बालकलाई सानैबाट मोबाइलको लत लाग्यो भने उसलाई यो लतबाट निकाल्न

सम्भव नहुने अवस्था हुन सक्छ । हामी बालबालिकालाई मोबाइल बाट टाढा राख्नको सट्टा आफैं उनीहरूलाई मोबाइल हेर्न प्रोत्साहन गरेका छौं । केही महिनाको बालकलाई खाना खाएन भनेर मोबाइल दिने, आफू काममा व्यस्त भएको बेला बच्चालाई मोबाइल हेर्न दिने, पढ्न सिकाउँछु भन्दै मोबाइल दिने गरेको पाइन्छ । यसरी हुर्किएको बच्चाले भोलि मोबाइल भएन भने खाना नखाने समस्या आउन सक्छ । अहिले पनि कतिपय बच्चा मोबाइल बिना खानानखाएर हस्पिटल सम्म ल्याउन परेको समस्या डाक्टरहरु बताउने गरेका छन् । यसरी हामीले नै एक बालकको भविष्यमा खेलबाड गरेका छौँ । समस्याको जरोमा घरबाटै पानि हालेर त्यसलाई हुर्काइरहेका छौं ।

**त्यसोभए के गर्ने त ?**

- बालबालिकालाई खाना खुवाउने निहुँमा मोबाइलको प्रयोग गर्न नदिने । अन्य काममा आवश्यक परेको खण्डमा आफ्नो निगरानीमा प्रयोग गर्न दिने ।
- मोबाइललाई आफूमाथि हावि हुन नदिने । स्क्रिन टाइम हेरेर आफूलाई यसको लत लाग्न बाट नियन्त्रण गर्ने ।
- ससाना कुरा खोज्नुपऱ्यो भने मोबाइल को प्रयोग नगर्ने । किताबमा हेरेर हुन्छ वा अन्य व्यक्ती लाई सोधेर समस्या समाधान गर्ने ।
- राती सुत्ने बेलामा मोबाइल अन्य कोठामा छोडेर सुत्ने ।
- आफूलाई शान्त राख्ने र मोबाइल बाहेकका काममा व्यस्त बनाउने । आदि ।

यी कुरा गरेमा हामीले आफूलाई मोबाइलको लतबाट बचाउन सक्छौँ । पुन पहिला जस्तै खुसी जीवन यापन गर्न सक्छौं । यसरी मानिस शारीरिक तथा मानसिक दुबै रुपले स्वस्थ हुन सक्छ । गुमेका पारिवारिक सम्बन्ध फेरि जोडिन थाल्छन् । फेरि जीवन हर्षमय हुन जान्छ ।

# अन्त्य



**विवेक पंगेनी**
कक्षा : १२ 'मानविकी'

सुनसान सडकमा म लडेँ
म सँगै ढले मेरा सारा वेदना
सपना ?
त्यो त कहिले मरिसकेको
अब त मात्र हर्ष बाँकी न की पश्चाताप
म सँगै ढल्यो, मेरी आमाको सास
पिताले यत्रो वर्ष सँगालेको आश
मुक्तिको शुभकामना र बधाई सँगै
मेरो शरीरको तरल अबिरबाट
रङगिएको छु म
ए यात्री किन छेउ बाट जान्छौ
म माथिबाट जाऊ न है
म लक्ष्यमा पुग्न आँटेको हुँ
पुगिसकेको छैन
म माथिबाट जाऊँ ताकि
मलाई रुवाउनेको मुहारमा
मन्द मुस्कान ल्याउन सकुँ
अहो किन मलाई उठाउँदैछौ
यो के को भीड हो फेरि
म मरी त सकें
के काम फिजुल खर्च गरी
आहा कति छिटो यो यात्रा
मेरो जीवनमा आउने खुसी जस्तो
ए पख्नुस् त !
उनको घर यही नजिक छ
एसो हँसाएर जान्छु किनकि
उनी हाँस्दा मलाई असाध्यै खुसी मिल्छ
म अन्तिम पटक खुसीसँग मर्न चाहन्छु !

सन्दर्भः जलस्रोतको विकास

# नेपालको जलस्रोत र यसको उपयोगिता



● **सिजोन घिमिरे**, कक्षा : ९

जल प्राप्त हुने सबै किसिमका स्रोतहरुको समष्टिलाई जलसम्पदा भनिन्छ। हिमनदी, नदी, ताल, पोखरी, कुण्ड, झरनालगायतको स्वरुपमा पाइने जलसम्पदा नेपालको महत्वपूर्ण प्राकृतिक सम्पदा हो। यो विश्व भरमा जलसम्पदाको दृष्टिकोणले दोस्रो धनी देशको रुपमा चिनिन्छ। इतिहास : नेपालमा जलविद्युत उत्पादनको सुरुवात राणाकालमा वि.सं. १९६८ बाट भएको थियो। अहिले सम्मको तथ्याङ्क हेर्ने हो भने करिब १३८६ मेघाबाट विद्युत उत्पादन भएको छ। राणाकालमा फार्पिडबाट ५०० किलोवाट विद्युत् उत्पादन भएको थियो।

**वर्तमान तथ्याङ्क :**

नेपालका विभिन्न भूभागमा रहेका नदीनाला, तालतलैया, तातोपानी, कुण्ड, पानीका मुहान, कुवा आदि प्रकृति प्रदत्त स्रोतहरु मुख्य जल सम्पदाका स्रोत हुन्। नेपालमा हाल मात्रै २८०० मेघावाट जलविद्युत् उत्पादन भएको छ। नेपाल सरकारले सुनकोसी मरिन बहुउद्देश्य आयोजनालाई राष्ट्रिय गौरवको आयोजना सुचीकरण गरेको छ।

**महत्व**

१) नेपालका नदीले थुपारेको मलिलो पाँगो माटोले कृषि उत्पादनमा सहयोग पुऱ्याउँछ।

२) नदीबाट गिट्टी, ढुंगा, बालुवाजस्ता निर्माण सामाग्री प्रयोग हुन्छन् जुन विकास निर्माणका अनिवार्य साधन हुन्।

३) कतिपय नदीले राजनीतिक सिमानाको समेत काम गरेका छन् भने स्थानीय तह, अञ्चल र प्रदेशको नामकरणमा पनि नदीको नामले सहयोग पुऱ्याएको छ।

४) जलविद्युतको उत्पादनबाट विजुलीको आवश्यकता परिपूर्ति गर्दछ।

५) जलचर प्राणीलाई आश्रय दिएर जलस्रोतले परिस्थितिकीय सन्तुलनमा सघाउने काम गर्छ। देश विकासको लागि यो गरिष्ठ तत्व जलसम्पदाको उपयोग गरौँ यसको छ धेरै महत्व।

---

# गजल



**रविन्द्र पाण्डे**
कक्षाः १२, शिक्षा, 'ए'

दुःख नहेरी गन्तव्यमा पाइला चाले पो साहसी हुन्छ
कुन मुखले भन्छ, हार मान्न थाले पो साहसी हुन्छ ?

तातो तेलमा सलाईले जसले पनि आगो बाल्न सक्छ
बग्दै गरेको पानीमा आगो बाले पो साहसी हुन्छ

दुःख, पीडा,बाधा,अफ्ठ्यारा आइरहन्छन् जीवनमा
सबै परिस्थितिमा आफूलाई सम्हाले पो साहसी हुन्छ

आफू लुकेर अरूलाई हमला गर्दा यहाँ कसैले चिन्दैन
अरिङ्गालको गोलाभित्र हात हाले पो साहसी हुन्छ

नराम्रो लागेको कुराको विरोध गर्नु ठूलो कुरो होइन
उठ्दै नउठ्ने गरी असत्यलाई ढाले पो साहसी हुन्छ।

# इज्जतको दाग र कानुनको न्याय



● **प्रिया यादव**, कक्षा : १० ए

१. के थाहा अरुलाई मेरो पिडा ? अध्यारो जीवनमा कालो बादल कहिले पनि जादैन। मनको यो दुःख र जीवनको सागरमा म डुब्दै छु। घर बाहिर मान्छेहरुको बोली सुन्दा र चरा चुरुङ्गीहरुले आफ्नो भाषामा कुरा गर्दा यस्तो लाग्छ कि अब, त यो कालो अध्याँरो कोठाबाट निस्केर बाहिर जाऊँ र सबैसँग आफ्नो मनको त्यो बोझलाई अरुसँग साट्न पाए हुन्थ्यो। तर के गर्नु त्यो कालो दिन भएको घटनाले मेरो जीवनबाट सुनौलो उज्यालो लिएर गयो।

म २८ बर्षको युवती सर्मीला सामान्य कार्यालयमा जागिर गर्दै थिएँ। समाजको एउटा उदाहरणीय महिला बनिसकेको थिए। द्दण्डर्णकिर्या ज्ञ को दिन कार्यालयमा महत्वपूर्ण कामले पनि धेरै समय कार्यालयमा बस्नु पर्‍यो। करिब १२ः१५ बजी सकेको थियो। काम पूरा गरेपछि म घर जानको लागि हिडेँ। धेरै राती हुनाले गाडी भेटिएन। मान्छे नै मान्छेबाट भरीएको यो देश रातितिर पनि शान्त कोही छैन जस्तो वातावरण थियो। आकाशमा जुनतारा चम्किरहेको थियो त्यसको प्रकाशले रातीको अध्यारोमा सुनौलो प्रकाशले ठाउँठाउँमा उज्यालो पारेको थियो।

२. त्यही समयमा केही मान्छेहरुलाई मेरो पछाडि सम्झेँ। पछि पो थाहा भयो। यिनी मान्छेहरुलाई कार्यालयबाट चोरी गर्दा मैले कामबाट निकालेको मान्छेहरु रहेछन्। डरले म छिटो छिटो घर आउँदै थिएँ। तर त्यही मान्छेहरुको प्रतिशोधको भावनाले मेरो अस्मिता माथि ठूलो दाग लाग्यो। उजुरी हाल्न जाँदा पैसाको बलले शोषण गरेको मान्छेहरुलाई त्यही कानुनले राम्रो मान्छेको पद दियो। कुलतमा फसेको नराम्रो महिला भनियो। न्याय माग्न जादाँ त्यही कानुनले राम्रो मान्छेमाथि नराम्रो दोष लगाउन भनेर मलाई बर्षभरी जेलको सजाय सुनायो। पैसाको पावरले न्यायको आँखामा पट्टी बाध्यो। पैसाको अगाडि कसैले पनि कालो एउटा असाध्यै र शोषित महिलाको साथ दिएनन्। हिलोको दलदलमा फसेर निस्किन सक्दैनौ। त्यस्तै म इज्जतको दाग र कानुनको न्यायमा फँसेँ। आज पनि त्यही घटनालाई सम्झेर मेरो मुटु झसङ्ग गर्दछ। निर्मलाको अस्मिता लुटेपछि न्यायको खोजी जाँदा भोलि जाँच हुन्छ भन्दाभन्दै न्याय नपाएर।

३) आत्महत्या गरिन जब सम्म राम्रो र उत्कृष्ट न्याय दिने मान्छे र पैसाको पक्षबाट नभई सत्यको पक्षभई न्याय दिलाउने कानुन बन्दैन। तब सम्म संसारबाट निर्मला, रमीला र पुजा जस्ता सुनौलो मोती हराउदैँ जान्छन्।

समाजमा केटीलाई नराम्रो दृष्टिकोणले अहिले पनि हेर्दैछन्। छोरीलाई रातिको समयमा घरबाट बाहिर जान दिँदैन। छोरीलाई एक्लोपनमा सम्झाउँछन् कि रातिमा एक्लै घरबाहिर जानु हुँदैन। छोरीलाई सम्झाउन अघि छोरालाई सम्झाउन पर्छ कि घरमा आफ्नो दिदी, बहिनीलाई इज्जत, दिन्छौ। त्यस्तै बाहिर जाँदा केहीहरुलाई माया सम्मान गर्नुपर्छ। किन कि ऊ पनि त कसैको दिदी, बहिनी, छोरी हो।

उफ्, हे भगवान ! म थाकिसकेको छु म समाजको यस्तो गतिविधि हेरेर कहिले आउला न्याय दिलाउने कुरिरहेकी छु म। आकाशमा लागेको कालो बादलले जसरी चन्दमालाई ढाक्छन्। त्यसरी नै इज्जतको कालो दागले मेरो जीवनमा अध्यारो ढाक्यो।

# ५० बर्षका मेरा बा



● **श्यामकला अर्याल**, कक्षा : ११ (कानुन)

५० वर्ष पुगेका मेरा बालाई
यसो फर्केर हेर्छु
मेरो गहभरी आँसु भरिन्छ
मेरो हृदय पिडाले चिरिन्छ
अनि यतिकैमा भौ भोकाउन थाल्छ
ए ! बा तिमी कति दुखिया रहेछौ है ।

५० बर्ष पुगि सक्दा पनि
तिमले शिरको भारी बिसाउन पाएनौं है
तिम्रो त्यो शरीरले आराम अनि
पाखुरा र पाउले विश्राम पाएन है ।

हाम्रो लागि राम्रो नाना अनि
खानाको मूल्य तिर्न तिमीले
ढुंङ्गा अनि बालुवासँग
मित्रता गास्यौँ है
वर्षायामको झरीमा चुहिने छानो
छाउन अनि भत्किएको गारो टाल्न
तिमीले प्रदेशसँग पनि त
सम्झौता गर्थ्यौ है ।

ए बा ! तिमी कति अभागी रहेछौ हैं
दिन रात रगत अनि पसिना बगाई
बेलुका आधा पेट सुत्छौ है
हाम्रो सुन्दर भविष्यको लागि
पुरै जीवन सुम्पेर नि समाजले
केही गर्न सकेन भन्छन् है ।

ए बा तिमीले कति (थाहा) नपाउने रहेछौं है
तिम्ले लगाउने जुत्ताबाट बुढि औलाले
सास फेरिसक्यो
तिमीले लगाउने ढाका टोपी
कलेठी परिसक्यो
तिमीले लगाउने त्यो सटबाट पनि
कुहिनाले बाहिरी संसार देखिसक्यो
तिम्रा ती पाइन्टमा चस्मा बनेको
सारा गाउँलेले थाहा पाइसके
'ओए हेप्ने' भनेर कानेखुसी गरिसके ।

ए बा । तिमीलाई स्वास्थ्यले साथ नदिदा
पनि चेत नपाउने रहेछौं है
बिहान उठ्दा तिम्रा तीनयन
कचेराले भरिन्छन्
नाकबाट बग्ने त्यो तरल पदार्थ
सेतो दारी अनि जुङ्गामा छरिन्छन् ।
घाटीको रुद्रघण्टी सायद पहिलाको
डबल भइसक्यो
हातले यस्सो शरिर छाम्दा
करङ्ग छोइसक्यो
तिम्रा ती घोडा जोडिसक्यो
खुट्टा थरथरी कामिसक्यो
अनि आँखाले देख्न छोडिसक्यो ।
त्यो मुखले खोकी रोजिसक्यो
सबैभन्दा महत्वपूर्ण कुरा त

तिमीलाई भोक अनि निन्द्राले
छोडिसक्यो
थोरै खाए नि पेटले
अपज भनिसक्यो ।

ए बा ! तिमि कति आशामूखी रहेछौ है
जे गर्दा जति गर्दा पनि
असफल भए पनि
सफल हुने आशामा छौ है
बारम्बार समय र परिस्थितिले ठक्कर दिएपनि
राम्रो दिन आउँछ भन्ने आशामा छौं है
सबैको नजरमा दुखिया अभागी भएपनि
एक दिन सुखिया भाग्यमानी छु भनेर
प्रमाणित गर्ने आशामा छौं है
आज हाम्रो परिवारको स्थितिमा
छि :छि भन्नेहरुलाई
आहा ! भन्नि गराउने आशामा छौ है
छोरालाई मात्र हैन छोरीलाई पढाए लेखाए
भोलि आफ्नो जिम्मेवारी निभाउछन्
भन्ने आशामा छौ है ।

हो बा यो आशालाई निराशामा
बदल्न दिने छैंनौ,
त्यो आँट अनि शाहसलाई
ढल्न दिने छैनौं ।
अब तिम्रो त्यो मनमा
आशाङ्खाका दियो बल्न दिने छैनौं
तिमीले बुनेका ती सपनाहरुको
बिट हामीले मार्ने छौ ।
आँज तिमीलाई अनेंकौ प्रश्न गर्नेहरुलाई
सफलताका तिरले हान्ने छौं ।
सत्यमा शिर निहुराएर हैन उठाएर बाँच्ने छौ
अब एक्लै रुने हैन हामी समूह मै हास्ने छौं
जुन हासोले हाम्रो परिवार मात्र नभई
सिङ्गो समाज र राष्ट्रको प्रतिनिधित्व
गरेको हुने छ
हरेक बाको सपना पूरा भए
सिङ्गो समाज र राष्ट्रले सर्वोच्च
शिखर हुने छ ।

---

कविता

## सचेत नागरिकको निर्वाचनमा भूमिका



**शिशिर मल्ल**
कक्षा : १० 'जि'

नागरिक तिमी यो देशका हौ कर्णधार
निर्वाचनमा सघाउनु नै राष्ट्रियताको सार
देशको भूत र भविष्य छ तिम्रै हातमा
बाँच्छ तिमीसँगै यो देश मर्छ साथमा ।

निर्वाचन एक परीक्षाको तिमी परीक्षार्थी
विवेक आफ्नो प्रयोग गर्नु राज्यको सारथी
बनाउनु छ तिमीले नै देश मिलीजुली
आऊ सबै निर्वाचनमा हुन सहभागी ।

देशको हितको निधो गर्छ तिम्रो मतले
आफ्नो अधिकार मिल्छ चुनावको रितले
अधिकारको प्रयोग गर जागी विचार गर
देश चलिरहेको त छ तिम्रै काँधको भर ।

आऊ अब हामी सुनौलो भविष्यमा झुमौं
आफ्नो देशलाई माया गर्ने प्रतिनिधि चुनौं
असत्यको विरोध गर उठाउ आफ्नो स्वर
निर्वाचनमा सक्रियता सधैं देखाउने गर ।

# निस्वार्थ मित्रता



● **अमृत जि.सी.**, कक्षा ११, विज्ञान 'जी'

त्यो अनजान मुहारहरुको बीच जब मेरो मन
कम्पित भई छट्पटिरहेको थियो,
तिम्रो मित्रताको हात मेरो लागि अनमोल थियो,
न्याउरो मुहारमा मुस्कान अनि मनमा छुट्टै राहत लिदै
सायद एउटा नयाँ मिलनको बोल थियो ।

घनिष्ट हाम्रो सम्बन्ध हुँदै जाँदा मेरा भावना शब्दमा
यस प्रकार प्रकट हुन्छन् की
की,
वर्ष, खुसी, दुःख, वेदना साट्नी पाएको छु
मेरो लागि धेरै कुरा नाट्नी पाएको छु
जिन्दगीमा मैले धेरै साथी पाए
अहिले जे कुरापनि हुरुक्क भई आट्नी पाएको छु ।

म नास्तिकलाई आस्तिक बनायौं,
सम्मान अनि व्यवहार सिकायौँ,
सतकर्म अनि धैर्यताको पाठ पढाउँदा,
नम्रता अनि सङ्गत सिकायौं ।

खैर,
जेठ महिनाको खडेरीझैं हाम्रो मित्रता सुक्खा भएको छ,
सायद हाम्रो गन्तब्य बदलिएको छ,
कम हुँदै जाँदा हामी बीचका बातहरु
नआउलान् गहुँका आँसु पुछिदिने हातहरु ।

सायद यो खटपट पछिको मिलन निकै खास हुनेछ,
नछुटिने साथ अनि आँखा चिम्म गरी विश्वास हुनेछ,
शिशिर पछि बसन्तमा फुलेका फूलहरु झै
म ओइलिन दिने छैन हाम्रो मित्रता,
मैले ओए ! भन्दा तिमी त्यस्को जबाफ दिनु ।

तिम्रो सफलतामा बेजोड ताली बजाउने रहर छ,
तिम्रो चरणमुनीको बाटो पुष्पले सजाउने रहर छ,
म फेरी गर्वसँग भन्न सकूँ
हर्ष, खुसी, दुःख, वेदना साट्नी पाएको छु
मेरो लागि धेरै कुरा बाट्नी पाएको छु
जिन्दगीमा मैले धेरै साथी पाए
अहिले जे कुरापनि हुरुक्क भई आट्नी पाएको छु ।।



# आमाबुवाको सपना



● **रुपेश खराल**, कक्षा : १२ सी

सपना सबैका आ-आफ्नै हुन्छ
फरक यति हो
कसैका पुरा हुन्छन् त कसैका अधुरा रहन्छन्
सपना त मेरा बुवाआमाका पनि थिए होलान्
जुन मेरो विपना पूरा गर्दा गर्दै खै कता बिलाए।

के बुवालाई रहर थियो होला त ?
त्यो चर्को घाम खेपि काम गर्न
के रहर थियो त आफ्नो पाउमा च्यातिएको
चप्पल लगाई मलाई ब्रान्डेड जुत्ता किनिदिन
के रहर थियो र चर्को घाममा साइकल पेलि
काममा जात
खै कता हराए बुवाका सपना सबै मेरा
बिपना पूरा गर्दै त खेर गए॥

र मेरी आमा,
के रहर थियो र त्यो मेलापातमा निरन्तर
धाइरहन
के रहर थियो र आफ्नो सपनालाई पच्छाई
मेरा विपनाका लागि काम गर्न
तिमी रात दिन गाई वस्तुको स्याहारमा
व्यस्त हन्थ्यौ॥
र
के रहर थियो र आफू बिरामी हुँदा पनि
तिमीहरुको ख्याल गर्न
यो सबै मेरा लागि नै हैनन् र
खै कता बिलाए मेरी आमाका ती सपना
सबै मेरा बिपना पूरा गर्दै त खेर गए॥

नसकूँला आमाबुबा, हजुरका चाउरी परेका
अनुहार पुनः सजाऊन,
तर
यति चाँहि वाचा गर्छु कि हजुरहरुका
जीवनमा कुनै बाधाकष्ट आउन दिन्न॥



# Trading rules of NEPSE Online Trading System (NOTS) for beginners



● **Bibhuti Shakya,** Teacher

NEPSE opened its trading floor on January 13, 1994 and adopted "Open Out Cry" system for the transaction of securities through its licensed members. NEPSE introduced automated screen based trading (Computerized trading system, CTS) from 24th August, 2007. The CTS facilitated remote trading access from the broker's office. In order to bring a new level of dynamism to Nepalese stock market, NEPSE launched NEPSE Online Trading System (NOTS) on 6th November, 2018.

NOTS is designed to allow investors to place their orders online, where everything including trading, clearing and settlement can be carried out electronically. A broad spectrum of market participants are expected to be benefited from the increased convenience of the new system.

NOTS includes an integrated online matching engine, comprehensive off-market and negotiated trade mechanism, pre-trade risk management, post-trade reporting, in-built surveillance reports and market dissemination system for brokers and third party vendors. The solution expected to enable NEPSE to provide industry standards and leading price/value performance to their market participants-drive them rapidly for liquidity and profitability.

A high speed messaging system has been used to communicate amongst different components of the system, which ensures reliable and efficient delivery of the messages i.e. millions of messages/minute.

NOTS is a state of the art system that is implanted at the NEPSE. Its highly flexible features will enable it to cope with future needs and growing loads without compromising its performance, Being an online trading system, it can be accessed from any part of the world via internet.

NOTS has created an ample platform for the new investors to invest on securities with an ease of access to internet. New beginners can participate in investment through NOTS and take advantage of online trading floor provided by NEPSE. Early investors is required to open/registered DEMATE account, Mero share account, ConnectIPS and TMS account to trade on NEPSE.

**Trading Rules**

Following rules are followed for trading in NEPSE

1. **Client Management:** Client management enables a broker to

create a client. Without creating a client the broker as well as client will not be allowed to place order. The broker has to insert various details of the client out of which a unique client code (UCC) is created for a client.

2. **Order:** It is an experssion of interest to either buy or sell a specified quantity of stock either at a specified price or at the current market price. The order can be placed by the client themself by getting username and password from the broker for online trading or is placed by the licensed broker on behalf of the clients. There is an order entry form in the system through which the order is placed in the system.

   Generally four types of order can be placed in the system

   **Regular :-** An order which is completed on the exchange and that confirms the order of lot size or greater than that.

   **Odd-Lot :-** An order which is completed on the exchange and that confirms the order less than lot size.

   **Manual:-** An order which is placed by the brokers and is reported individually by the buying and selling brokers.

   **Block:-** An order which is placed by the brokers and confirms to the minimum block trade quantity specified by the exchange and is reported individually by the buying and selling brokers.

3. **Price:** It is the price, which is quoted by client for buy or sell of stock. The investors as usual can quote in three ways in their order forms. They can quote fixed price, price in range or market price. In present system the order entry form in computer has been developed to indicate the price either in limit or market. If the price is limit then the order is placed within the price range set by the system where transaction is executed by the negotiation process. If the price is market then the order is executes at market price. It means buy or sell the shares at market price.

4. **Execute At:** This represents the phases of trading when to execute the order. There are three phases during which the client them self or broker on behalf of client can place the order to execute the transactions. Such phases are:

   **Pre Open Session:** This session starts from 10:30 A.M. to 10:45 A.M. During this session the order is placed in different window by selecting the pre-open session in buy/sell order book. All the orders will be accumulated in the system till execution time and after the time reaches the orders will be executed at the best price. This session gives the price, quantity and time priority for the execution. The engine calculates the best price and matches the order at 10.45 A.M. i.e. before market opens. In this case price can be quoted within the range of 2 percent of previous close price.





Once this session is over price can be quoted within the range of 2 percent of LTP. Pre-open session helps to determine the opening price for the stock. If there are no matchable orders for a stock the open price of the stock will be equal to the previous close price.

There is a special pre-open session for newly listed securities which is aimed to determine the opening price of the particular security within the price range set by NEPSE.

**Continuous Session:** This is the phase that indicates the orders should be executed while the market is in progress.

**Post Close Session:** This is another market type that runs after continuous market for a time period as specified by NEPSE. After the continuous market has been ended each security will have its closing price calculated and then during post close session, member or client can place market order. The system has provided facility to generate the closing price of a stock either by taking the average of the price of last in transactions or the average of the price of the last in minutes. Currently NEPSE adopts the average of last in transactions where n equals to 1 i.e. the LTP of the stock at close is the post close session price or closing price.

5. **Retain until:** Customer can give order to retain until the specified period as below unless it is executed.

**End of Day (EOD):** This indicates the placed orders, if not executed will be retained until end of today.

**Good Till Cancel (GTC):** The order entered in the system must specify the validity period of the order which must be less than 15 days. The order is automatically removed from the system after the specified period.

6. **Conditions:** This specifies the conditions under which the order could be executed. The conditions are as below:

**None:** This indicates there are no conditions for execution of orders.

**Immediate or Cancel (IOC):** This condition indicates that the orders should be executed in full or part immediately if not executed immediately the unexecuted order will not be sent to Public order book but cancelled immediately by the system.

**Fill or Kill (FOK):** This condition indicates the order must get executed entirely or cancelled immediately. The unexecuted order is not sent to public order book but killed (cancelled) by te immediately. NEPSE has modified the system allowing entering the quantity of a stock to be traded either at the multiple of lot size or greater than that.

**All or none (AON):** This condition indicates that order must get executed entirely and if not executed the order is sent to public order book. In this condition too, NEPSE has modified the system allowing entering the quantity of a stock to be traded either at the multiple of lot size or greater than that.

# सबै स्वार्थी



● **विशाल पुन मगर**, कक्षा : ९ 'ए'

हरे ! शान्ति शान्ति प्रणायम् शान्ति,
के अर्चना गर्नु जीवन हेर शान्ति ?
कयौं पटक आरती गर्दै शिव ! शिव !
के निर्जीव वस्तुमा जल चढाउनु जीवन हो र ? शान्ति !
हरे ! भिक माग्नेको लागि मुठ्ठी नखोल्नेले,
मन्दिरमा पैसा चढाउनु जीवन हो र ? शान्ति !





ए शान्ति किन प्रतिउत्तर दिदैनौं तिमी ?
किन मौन बसेका छौ तिमी ?
किन विचल्लित छौ तिमी ?

सर्वश्रेष्ठ मानिने यी मनुष्य,
खुबै धर्मी भन्ने गर्छौ आफूलाई तिमी,
नाम जब्दैमा घन्टी बजाउँदैमा धर्मी बन्न सक्छौ र तिमी ?
सारै भलो भन्छौ आफ्नो भगवान्लाई तिमी,
उसो भए पशुको हत्या गरी वली चढाउनु पर्ने किन ?
अरुको रगत चढाएर पनि धर्मी बन्न सक्छौ र तिमी ?

प्राण धारण गर्ने साँच्चै के भलो होलान् र तिम्रो देवता ?
धर्म मेरो मार्गदर्शक सूकार्य मेरो कर्तव्य भन्ने तिमी,
के यहि सिकायो र तिम्रो धार्मिकताले तिमीलाई ?
हरे ! शान्ति किन अछुत छौ तिमी ?
ए शान्ति किन उदास छौ तिमी ?
मनुष्यको आस किन निराश छौ तिमी ?

ए शान्ति कति कठोर मनोभाव तिम्रो,
केही दिएर मात्र पाउने भए,
के तिमी पनि स्वार्थी हैनौ र शान्ति ?
के तिमी आत्मा विश्वासमा छैनौ र शान्ति ?
के मन्दिरै धाउनु पर्ने हो र शान्ति ?
पछि हाम्रो मृत्त सम्बन्ध भए।

फूल चढाउनु पर्ने किन ?
ढुङ्गा रङ्गाउनु पर्ने किन ?
अर्चना गर्नु पर्ने किन ?
हरे शान्ति शान्ति प्रणायम् शान्ति।

# हार्दिक बधाई तथा शुभकामना


**Dilip Kumar Yadav**
MBBS (Rank: 25th Open, Category: 1)


**Milan Gyawali**
Engineering (Rank: 29), Pulchowk, TU

शैक्षिक वर्ष २०७९ मा कक्षा १२ उत्तीर्ण गरी शिक्षा मन्त्रालय, नेपाल सरकारद्वारा संचालित MBBS, BAMS, Pharmacy, Forestry, Agriculture र Engineering को स्नातक तह अन्तर्गत प्रवेश परीक्षामा उत्तीर्ण भई पूर्ण छात्रवृत्तिमा नाम निकाल्न सफल यस विद्यालयका रत्नहरुलाई **हार्दिक बधाई तथा शुभकामना** व्यक्त गर्दछौं ।


**Praveen Bhattarai**
MBBS (Rank: 111th)


**Mohammad Usman**
MBBS (Rank: 135th)


**Amit Kurnal**
MBBS


**Prakriti Sedai**
MBBS (Maharajgunj)


**Nirajan Koiri**
MBBS (Rank:149)


**Atul Acharya**
MBBS (Dharan)


**Bindu Poudel**
MBBS


**Rosan Acharya**
MBBS, TU


**Prabin Regmi**
MBBS


**Darshan Ghimire**
MBBS


**Sagar Aryal**
MBBS Bangladesh


**Dipesh Mishra**
MBBS


**Manoj K. Chaudhary**
MBBS


**Somika Bhandari**
MBBS, BPKHIS, Dharan


**Samikshya Panthi**
BAMS, B.Sc. Nursing


**Pradip Yadav**
BAMAS


**Milan Panthi**
B. Optometry, TU


**Ujjwal Puri**
Mechanical Engineering
WRC


**Biplov Bhusal**
Engineering (Rank: 54), TU


**Pariskar Sharma Poudel**
Engineering (Rank: 87), TU


**Bikash Ghimire**
Engineering (Rank: 112), TU


**Dipson K.C.**
Engineering (Rank: 162), TU


**Shusil Adhikari**
Engineering (Rank: 177), TU


**Binod Pandey**
Engineering (Rank: 183), TU


**Pratik Pokharel**
Engineering, Thapathali


**Subham Gautam**
Engineering, Thapathali


**Smiriti Shah**
AFU, Forestry


**Poojan Shrestha**
AFT (Forestry), PU (BPT)


**Pramisha Karki**
BMLT, B.Sc. Nursing


**Bibek Kumar Chaudhary**
AG (TU Topper )


**Sangita Rayamajhi**
B. Pharma (Rank: 38)


**Bishaka Khanal**
BPH, TU


**Parbati Gharti**
B.Sc. Nursing, Tu


**Purnima Timilsena**
B.Sc Nursing, TU


**Mausami Kafle**
BPH, TU


**Kushal Pokhrel**
BPH (Rank: 16th)


**Sneha Poudel**
BMLT, PU


**Manish Mishra**
B.Pharma & BPH


**Muna Paudel**
B.Sc. Forestry, TU


**Parnav Karki**
BMIT, BDS


**Pawan Adhikari**
B.Pharma (PU)


**Sameer Neupane**
BPH, TU


**Prakriti Wosti**
B.Sc. Nursing, KUSMS


**Dakshina Nepal**
B.Sc. Nursing, TU


**Subekshya Belbase**
B.Sc. Nursing, TU


**Sushmita Ghimire**
B.Sc. Nursing, TU


**Diksha Xettri**
Forestry, TU


**Bikash Dhakal**
Forestry, TU


**Ram Banjade**
Forestry, PU

नित्यानन्द ज्ञवाली
अध्यक्ष (वि.व्य.स.)

दिनेश थापा
प्रधानाध्यापक

एवं

**कालिका मानवज्ञान माध्यमिक विद्यालय परिवार**
बुटवल-१०, रुपन्देही, नेपाल

# Tourism in Nepal
# WELCOME TO NEPAL



● **Sneha Gaha,** Class : 11, M O



Nepal, the country rich in culture, tradition and natural resources is the best place for fourists to descover more and have a better experiences that is mesmerizing. Nepal is the best destination for them. It is the place which beauties are still to be disclose those places and also uncover themself.

The huge diversity of Nepal from hot terai region to icy peates of the world's highest mountains is the main attraction of Nepal. Trekking. Mountaineering, rafting are the most famous things of Nepal. Other activities as parafliding, vungee jumping, elephant polo etc are also the attractions for tourists. With 15 National & wildligefe parks (two are UNESCO Hexitage sites) Nepal is are of the last places you can spot one horned rhinoceros asiotie and Royal Bengal Tiger.

For most of the tourists gereatest attraction of Nepal is its people. The unique culture and diverse traditions are a major part of what makes Nepal so special. From remote mountain villages to mid hill- tows and the cities of the kathmandu, the people of Nepal are always gracious. Come and have the experience of strong and unique flavors of Nepalese food, prepared with love. Nepal is the country that can offer you as many festivals as there is howhere else in the world. The unity in deversity of Nepalese people is the strength of Nepal.

With the 8 out of 10 highest mountains in the world, Nepal is the most prefer destination for mountaineers, rock climbers, trekkers and people seeking adventures. Nepal is the country of the Mount Everest, the highest mountain peak in the world, and the Birthplace of Gautam Buddha- Lumbini. The capital city of Nepal (Kathmandu) is full of historical and ancient temples. So not only for adventure, people who have faith in religion also, Nepal will be the natural, Cultural, historical, religious and adventurous values Nepal is the best choicest destination for tourism.

# राजनीति र युवा



प्रतिमा भट्टराई

उठ उठ युवावर्ग राजनीतिमा लाग्नुपर्छ
पछि हट्ने हैन हामी देशको लागि जाग्नुपर्छ
ती पुरा नै नेतालाई कति दिने पालो अब
युवा वर्ग जागरुक भई फालौं भ्रष्टाचारको जालो सब ॥

डिग्री पास गरेका शिक्षित युवाहरु
न त कुनै पदमा छन् न त रोजगार अरु
शिक्षित युवा बेरोजगारको सिकार बनी बस्ने
सधैं सधैं तिनै नेता मन्त्रीमण्डल पस्ने ॥

अब देशको परिवर्तन युवाले नै गर्नुपर्छ
नयाँ पालुवा पलाइसके पुराना पात झर्नुपर्छ
शिक्षित मात्रै हैन युवा राजनीति नि गर्नुपर्छ
कति पछि पर्ने युवा अब अघि सर्नुपर्छ ॥

:ऋऋ नि पास भयो राजनीतिकै लागि
युवा देश छोड्न बाध्य भई पसेका छन् खाडी
भूमि अनि नदीनाला बेचिए नि कति
अब जागरुक बन्नुपर्छ युवा वर्ग जति ॥

राजनितीकै खेल रैछ नेपालभित्र अति
सक्रिय भई राजनीतिमा लागौं युवा वर्ग जति
युवाको नै देश बनाउने ठूलो देन छ नि
जागरुक बनौं आफ्नो देश आफै बनाऔं भनि ॥

राजनीति र युवा शब्द कस्तो कस्तो रै छ
एक सिक्काको दुई पाटो बन्नुपर्ने रै छ
राजनीतिमा युवा जागरुक बन्छु अनि देश
राम्रो नीति ल्याएपछि अर्कै परिवेश ॥

# शिक्षाको महत्त्व



प्रमिशा नेपाली

कुनै विषयमा ज्ञान लिनु वा दिनुलाई शिक्षा भनिन्छ । शिक्षा मानिसलाई असल बाटोमा हिड्न सिकाउने मार्ग हो । शिक्षा बिना मानिसको जीवन पूर्ण हुन सक्दैन । शिक्षा आर्जन गर्नको लागि कुनै, उमेर जात, लिङ्ग धर्म संस्कारले छेक्न सक्दैन ।

कुनै वस्तु, देखेर, सुनेर छामेर पनि ज्ञान प्राप्त गर्न सकिन्छ । शिक्षा भने बित्तिकै विद्यालय, कलेज वा घरमै पनि नियमित रुपले अध्ययन गर्ने गराउने वा पढ्ने बन्दोबस्त मिलाउने कार्य भन्ने बुझिन्छ । विद्यालयमा र कलेजमा शिक्षकले पढाउनु हुन्छ भने घरमा अभिभावकले पढाउनु हुन्छ । शिक्षा मानव जातिको तेस्रो चम्किलो आँखा भएकाले आजको युगमा यसको निकै ठूलो महत्त्व रहेको छ । शिक्षा आजका मान्छेको गहना नै हो । शिक्षाको उज्यालो घामबाट कुनै पनि व्यक्ति बञ्चित हुनु भनेको अध्यारो खाडलमा जीवनलाई धकेल्नु हो । शिक्षारुपी ज्ञानबाट नै मानिसले राम्रो नराम्रो, असल खराब आदि छुटयाउन सक्छ । सहि बाटोलाई पहिल्याउन सक्छ । यसैबाट मानिस लगनशील इमान्दार र सभ्य नागरिक पनि बन्न सक्छ ।

हाम्रो समाजमा नारी र पुरुष दुबै शिक्षित भए भने अनि समाज र राष्ट्रको उन्नति हुन सक्छ । अझै पनि हाम्रो देशका कतिपय ठाउँमा छोरीहरुलाई पढाउने गरिदैंन । कतिपय समुदायका व्यक्तिहरु अझैपनि शिक्षाबाट बञ्चित भएका छन् । अशिक्षाका कारणले गर्दा अहिले लाखौं नेपाली युवाहरु विदेशिन बाध्य भएका छन् । कति नेपालीहरुले त झन ज्यान समेत गुमाउन परेको छ । त्यसैले आजको युगमा शिक्षाको धेरै महत्त्व छ । त्यसैले हामी सबै शिक्षित हौं ।



# कविता

● सम्पदा गौतम

प्रतीक्षा तिमीले सारै गरायौ,
दर्शनको आशमा घायल बनायौ,
भेट्ने भाव देख्छु तर स्पर्श हुन्न,
तिम्रो अभावमा हेर यो लोक शुन्य ।

मन्दिरमा खोज्दै सारा घण्टा बजाएँ,
स्वागतमा तिम्रो आचल विछ्याएँ ,
मस्जिद, गुम्बा सारा नियाँले,
चोक चौतारा सारा पखालेँ ।

घरघरमा बास तिम्रो हुन्छ भन्थे,
बुहारी आज किन जली मर्थे,
बुढा बुवाको पिढीमा बास ,
तन्नेरी सन्तान सदा अर्को साथ ।

शान्ति तिमी कहाँ हरायौ,
नेपथ्यमा रुँदै किन करायौ,
तिम्रो त्यो पीडा कसले देख्छ यहाँ ?
अन्धो रहेछ सारा संसार जहाँ ।

बुद्धको साथमा नाम कमायौ,
शान्ति बनेर विश्व चिनायौ,
कुदृष्टि पर्‍यो तिमीलाई कस्तो ?
भिक्षु मारिए जीवन भो सस्तो ।

शान्ति गगनलाई खोतल्दै खोजें,
चट्याङ बर्स्यो म धेरै तर्से,
पवन बिच तिमी छौ कि भन्दा ,
हुरीको साथ कटायौ धुरी ।



नील सागर पनि रहेन शान्त ,
सुनामी बनी डुबायो संसार,
आउ न शान्ति असैया भो आज,
कृष्ण बनेर छोपी देऊ न लाज ।

जलमा, थलमा, पवन आकाशमा,
प्रभु बस्ने सबको मन मनमा,
बसन्त बनी बसिदेउन बास,
बुढी आमाको तिम्रै छ आश ।

तिमी रहेत स्वर्ग बन्थ्यो धर्ती,
आगो र पानीमा पनि मिल्थ्यो पिरती ,
वृक्षलतामा फुल्थ्यो फूल,
मानिस कहिल्यै गर्थेन भूल ।

# मेरो जन्मभूमि



**सुजता गौतम**
कक्षा : १०

नाम सुन्दै आहा लाग्ने कस्तो राम्रो ठाउँ
प्रकृतिको सुन्दरताले भरिएको गाउँ ।

न त यहाँ धुवाँधुलो न त कुनै जाम
सबै मानिस मिलिजुली गर्ने गर्छन् काम ।।

ओल्लो गाउँ पल्लो गाउँ सबै यिनका दाजुभाई
बाहुन, क्षेत्री, गुरुङ्ग साथै बस्छन् यहाँ राई ।

परम्परा रीतिरिवाज जोगाउँदै आएको
कुनै घर ढुङ्गाले त कुनै खरले छाएको ।।

हरियाली बन देख्दा मनै हुन्छ आनन्द
कस्तो राम्रो लाग्छ आहा फूलहरुको सुगन्ध ।

हरेक घरका मानिस यहाँ गर्ने गर्छन् किसान
त्यसैले नै रहेकोछ नेपालको निसान ।।

गर्व लाग्छ यही ठाउँमा जन्म लिन पाउँदा
देश विदेशका अन्य मानिस घुम्न भनी आउँदा ।

जता हेर्‍यो शान्ति देख्छु छैन कुनै दुविधा
प्रकृतिकै उपहार हो यहाँको सुविधा ।।

# विद्यार्थी जीवन



**स्वेता पौडेल**
कक्षा : १०

आज भन्दा भोलि भन्दा दिन गैगयो
पछि पढौं लानी भन्दा फेल भैगयो,

आफूसँग पढ्ने साथी माथि गैगयो
फेलसँग किन बोल्ने ठुलो भैगयो,

पढ्ने बेला ख्यालै छैन बस्छौ घुमेर
समयमै पढ्नु पर्छ जाला उमेर,

काम गर्न अल्छी लाग्छ आउँदैन लडेर
अन्त कतै नसोच्नु है बस्नुस् पढेर ।

राम्रो गर्दा ताली पाउँथ्यौ नराम्रो गर्दा गाली
शिक्षाको बाटो लाग्ने अब आयो हाम्रो पाली,

आएका हामी अध्याँरोमा पाइला चाली
चम्काइदिनु भो भविष्य शिक्षाको दियो बाली,

बाबु छोरो जस्तो सम्बन्ध हुन्छ गुरु चेला
विद्यार्थी जीवनलाई नगर्नु है हेला,

नराम्रो बानी फाली राम्रो बानी पालौं,
बनी साहसी शिक्षालाई अँगालौं ।

रातमा धेरै उज्यालो दिने पूर्णिमाको जुन
देशको समग्र विकाश गर्ने विद्यार्थी नै हुन् ।

बनौं हामी आकाशका चम्किला तारा
शिक्षाले नै चलेको छ यो संसार सारा ।

# मेरो देश



**निश्चल गहतराज**
कक्षा : १०

देश हाँसे हाँस्छौ हामी
देश बाँचे बाँच्छौ ।
उन्नति र प्रगतिमा
हामी सधै नाच्छौँ ।

प्राधिनता होईन हाम्रो
विरताको गाथा ।
बलभद्र र भक्ति जस्ता
पूर्वजको गाथा ।।

विदुषीको तपोभूमि
अपार ज्ञानको भण्डार ।
बुद्धको शान्ति भूमि
संसारलाई आधार ।।

उत्तर हेर्दा हिमाल चुली
दक्षिण समतल फाँट ।
प्रकृतिको सुन्दरताले
दिन्छन् राहत ।।

देश हाँसे हाँस्छौँ हामी
देश बाँचे वाँच्छौ हामी
उन्नति र प्रगतिमा
हामी सधैँ नाँच्छौँ ।

# नेता र नेतृत्व



**उत्तम अधिकारी**
कक्षा: ९ ई

वर्षौं देखिको त्याग एउटा असल नेतृत्वका लागि थियो ।
तर नेपालीहरुको त्यो दुःखले त स्वार्थी नेताहरु मात्र दियो ।।

जनताहरु घाँटी सुकुन्जेल भनिरहेका छन् विकास विकास ।
तर विडम्बना मेरो देशमा अझै भएको छैन संवृद्धिको निकास ।।

कैयौं नेता फेरिए व्यवस्था फेरिए र अवस्था फेरिए ।
जनताहरु भने सधैं भोकमोरी महङ्गी र अनेकौं विपद्ले बेरिए ।।

कस्ता रहेछन् वार्ता र सहमति नेतृत्ववीच कहिल्यै नहुने ।
जनतका कष्ट, पिर र दुःखले किन होला मन नछुने ।।

बढ्दै छ वैदेशिक पलायन बेचिदैछ नेपालीहरुको स्वाभिमान ।
शासन सत्ता चलाउने हो कि गरिबहरुमाथि शोषण गर्ने हो शासकको काम ।।

कस्तो नेतृत्व चयन गरेछौं हामीले भष्टाचार उकास्ने र अर्थतन्त्र खस्काउने ।
कस्ता एजेण्डा मन पारेछौं हामीले गरिब दबाएर गरीबी घटाउने ।।

विदेशीले हेपिएको नेपाल देश चेपिएको हेर्ने मन छैन ।।
जनताको माग शिक्षा स्वास्थ्य र रोजगारी हो भाषण हैन ।।

सारा जनता एकजुट भइ कुर्चीमा असल नेतृत्व पठाऔं ।
आफ्नै सिप र क्षमताले स्वर्ग जस्तो हाम्रो देश सिंगारौं ।।

# छोराको जिम्मेवारी



**दिबिन्सा पाण्डे**
कक्षा : १०'डी'

कस्तो समाज यो, बेरोजगारी छोरा हुने
आफ्नै घरमा बोझ।

भन्न त भन्छन् दुनिया छोरा होस्
तँ तलाई कति मोज।

पैसा कमाएर सारा घर व्यवहार हेर्नुपर्ने
नौ डाडाँ काँटी सबैलाई खुसी राख्नै पर्ने
यो कस्तो जिम्मेवारी।

सानो छँदा बरु बाआमासँग
मागिन्थ्यो हरेक कुरा रोइ कराइ।

पैसा भएन भनि आफ्नाले त
चिन्दैन यहाँ हुन्छन् सबै पराई।

बुबाआमा परिवारको मन नदुखाई
एउटा असल छोरा बनूँ।

परिवारलाई सधै खुशी राखी
छोराको कर्तव्य पूरा गर्न सकूँ।

# विद्यार्थी जीवन के हो ?



**पुष्पा जि.सी**
कक्षा : १०

पढाइमा रुची हाम्रो, पुस्तक हो हाम्रो साथी
शिक्षकले देखाएको पथमा, हाम्रो सपना छन् साहसी।

पर्खि बस्छौं परीक्षाका दिन, थाहा पाइन्छ सन्देश
अगाडि बढ्ने छौं हामी, लिने छौं हामी हाम्रो मुल्याङ्कन॥

विद्यार्थी जीवन हाम्रो, विश्वबन्धुत्वको सागर
पूरा गर्ने छौं सपना पायौं भने सहयोग।

परिश्रम गर्दै जाउ हामी पूर्ण बनाउँदै रुप
कालिकाका विद्यार्थी हामी बुझे जानेका छौं स्वरुप॥

उच्च शिक्षाको उचाइमा विजय हुने छ सकलता
गाउदैं, बजाउदैं हिड्दै छौं हामी स्वर राखी गित।

सिकाउँछन् शिक्षक हामीलाई सेवा र समर्पणमा साथ
विद्यार्थी जीवन हुनेछ उत्कृष्ट लाग्यौं भने देखाएको पथ॥

हातेमालो गरी अगाडि बडौं न ए कालिकाका साथी
विश्व उत्कृष्टका विद्यार्थी हामी भविष्य छ हाम्रो साथी।

ढुक्क हुनुहोस् हजुर राख्ने छौ आत्मविश्वास
कालिकाका चेला हामी हुने छौ उत्कृष्ट विज्ञान॥

# हे युवा जाग



**लविज खनाल**
कक्षा : ८

हे युवा जाग, अब अघि लाग
आफ्नो कर्तव्यबाट अब नभाग।

जाँगरले कहाँ पुगे छिमेकी
किन रोक्छौ कदम सबै देखि देखि॥

रित्ता भण्डारहरु अब भर्नुपर्छ
नबसौं यसै हामी केही गर्नुपर्छ।

थारु र भोटे पछाडि र हिमाली
सब जात र वर्ण हामी छौँ नेपाली॥

खाडीमा सुकिरहेका छन् हाम्रा रगत पसिना
कमजोर छ देश हेर युवा तिमी बिना।

माफियाहरूले हेर दुष्ट पाले
हाम्रा जँङ्गे पिल्लरहरु ढल्न थाले॥

बन्नु छ सक्षम केही सिप सिकेर
विदेशमा पसिना फाल्नु छैन खेर।

सम्हालौ श्रम हाम्रो खेर गएको
पाउँ देश देख्न स्वर्ग सरी भएको॥

# म मानिस हो



**स्विकृती पुन**
कक्षा : ८



म मानिस हो
म चरी जस्तै उड्न चाहन्छु
यो रङ्गिन संसारमा
जीवनको स्वाद पाउन चाहन्छु।
म मानिस हो
मेरो पनि जीवन छ
दुई दिनको जीवनमा
मलाई केही गर्नु छ।
म मानिस हो
जन्म पछि मृत्यु छ
नर्क र स्वर्ग के नै हो र
यो कलियुग त सुन्दर छ।
दुःख र पीडाको संसारमा
मलाई खुसी र सुख हेर्नुछ।
यो अनगिन्ती ब्रमाण्डमा
मलाई तारा खोज्नु छ।

# देश नेपाल



**आकृती पाण्डे**
कक्षा : ८

देश विकास गर्नु छ
तिमी हामी मिलेर।
देश विदेश गएका
साथीसंगी दाजुभाई दिदी बहिनी
फर्क आफ्नै देश।
कति गर्छौ खाडीमा दुःख
कति बगाउँछौ पसिना
बरु आउ आफ्नै देश आफ्नै ठाउँ
त्यही पसिना लिएर।
सुकी सके बाली नाली सुकी सक्यो खेत
त्यही पसिनाले सुकेका खेतहरु ओसिला पार॥
फर्क आफ्नो देश नेपाल
तिमी हामी मिली देशको विकास गर्नु छ॥
इतिहासलाई बदल्नु छ
देशको विकास गरेर,
देशको विकास तब हुन्छ,
जब तिमी हामी सबै एक जुट हुने छौ॥
त्यसैले आउ फर्क आफ्नो देश
मिली जुली गरौला देश विकास
फर्क आफ्नै देश
आउ युवायुवती हो
देशलाई विकासको बाटोमा
हिडालौं॥

# बाँचुन्जेल



**सलिना टण्डन**
कक्षा : ८



बाँचुन्जेल, मिठो बोली, बोल्नै चाहेन
मरेपछि, एक शब्द नि, बोल्नै पाएन॥

बाँचुन्जेल मात्रै राम्रो मोटो घाटो हो
मरेपछि, तिमीहामी, सबै माटो हो॥

बाँचुन्जेल मातेर, बोल्यौ झर्केर
मरेपछि को आउँछ र, फेरी फर्केर॥

धनीमानी नहिँड धेरै नक्कल पारेर
कसले लग्यो, सम्पत्ति पोको पारेर॥

बाँचुन्जेल गहनाले नाक-कान दुखाउँछन्
मरेपछि, शरीर पोल्छन्, गहना फुकाउँछन्॥

ज्यूदौं छँदा मान-सम्मान, दिन्छन् सलामी
मरेपछि लान्छन, आउँछन् मलामी॥

# गुरू



साना खातुन
कक्षा : ४



गुरु नै हो सबै पढे
गुरु नै हो सबै पुराण
गुरुलाई गर्नु सभ्य सम्मान
गुरु नै हो जीवनको आधार।

न त कसैलाई धनी देख्ने
न त कसैलाई गरिब
न त कसैलाई पराई भन्ने
न त भन्ने आफ्नो।

आफू जति दुःखी भए पनि
शिष्यलाई सुखी बनाउँदछन्
मैनबत्ति जस्तै बलेर आफै
ज्ञानको ज्योति फैलाउँदछन्।

आदर्श व्यवहार हुन्छ गुरुको
सागर जस्तै हुन्छ ज्ञान
कसैलाई बनाउँदैछन् डाक्टर
कसैलाई बनाउँदैछन् महान्॥

# के तिमि नेपाली हौ ?



पवन कार्की

के तिम्रो भेषभूषा, बाहिरी आवरण नेपाली जस्तो छ ? गीत, हिन्दी तथा अरू विभिन्न गीत याद छ, गाउन पनि आउँछ तर कहिले आफ्नो विर पूर्खा र मात्तृभूमीलाई सम्झी बिहान उठेर कहिले राष्ट्र गान गाएका छौं, तिमीलाई राष्ट्र गान राम्रोसँग गाउन पनि आउँछ ? यदि पनि छ तिमीलाई पूरै गीत ? प्रष्ट सँग गाउन पनि आउँछ तिमीलाई कहि कतै राष्ट्र गान बज्दा उभिएर गाएका पनि छौं ? के तिमी साच्चींकै नेपाली हौ त ? के तिम्रो शिरमा ढाका टोपी लगाएका छौं ? शरिरमा दौडा सुरुवाल, गुन्यु चोली लगाएका छौं ? आफ्नो जातिको पोशाक लगाएका पनि छौं, के तिमी साच्चीकै नेपाली हौ ?

मन्दिर जाँदैनौ, धर्म, कर्म, हराएको आफ्नो भाषा भुलेका छौ, आफूभन्दा ठुलोलाई सम्मान हराएको छ, आदर हराएको छ, पैसाको अगाडि मित्रता हराएको छ, आफूले केही गल्ती गर्यो भने गल्ती मान्न सक्दैनौ, गल्ती स्वीकार गर्न सक्दैनौं, माफी माग्न सक्दैनौ, आफूले चिनेको मान्छे देख्दा दुइहात जोडी नमन गर्न सक्दैनौ, झुक्न पर्ने समयमा झुक्न सक्दैनौ, आफ्नो संस्कृति संस्सार र रीतीरिवाज भुलेका छौ र बाहिरी रीतीरिवाज अप्नाएका छौ के तिमी साच्चिकै नेपाली हौं ? विश्वभरी एक मात्र हिन्दु राष्ट्र नेपाल भाषा छैन, आफ्नो धर्मलाई विरोध गर्छौ, आफ्नो देशलाई विरोध गर्छौ, विविधता हराएको छ, हिन्दु समाजको पहिचान हराएको आफ्नो जातिका भाषा बोल्न आफैलाई आउदैन, आफ्नो जातिको मौलिक नाँच गान, बाजा भुलेका छौं र बाहिरी देशको संस्कृति अप्नाएका छौ र समाजमा विकृती फैलाइरहेका छौ। के तिमी साच्चीकै नेपाली हौं त ?

यदि तिमी यो पढी रहेका छौ भने म तिमीलाई, बिन्ती गर्छु एक पटक आफैलाई प्रश्न गर के तिमी नेपाली हौं ?

# Mass communication and it's importance



**Prajwal Neupane**
Class: 12

Mass communication is the lifeline of modern societies, serving as the bridge that connects people on a global scale. Through mediums such as television, radio, print, and digital platforms, it disseminates information, shapes public opinion, and influences cultural trends. The importance of mass communication lies in its ability to foster understanding, provide a platform for diverse voices, and hold those in power accountable.

In the realm of politics, mass communication enables citizens to make informed decisions, shaping the course of democracies. It also acts as a catalyst for social change, shedding light on issues that demand attention and inspiring collective action. Beyond news, it encompasses entertainment, advertising, and education, contributing to the fabric of everyday life.

As societies continue to evolve, the role of mass communication becomes increasingly crucial. It's not just about transmitting messages; it's about forging connections, fostering empathy, and creating a shared narrative that binds communities together. In essence, mass communication is the pulse of a well-functioning, interconnected world.

# अभागी छोरी म



**अस्मिता थापा**
संकाय : कानून विहानी समूह, सेक्टर : १



जब घरमा छोरी जन्मिछिन खुशियाली आउँदैन रे
छोरा जस्तो छोरी कहिल्यै पनि हुँदैन रे
वंश धान्न, घर चलाउन छोरी नभई चल्दैन रे
हजुर आमा भन्छिन् नाति बिना घरको दियो बल्दैन रे

छोरा भए खसी ढाल्छन छोरी भए खुशी हुन पनि पाइदैन रे
छोरा भने सबको प्यारो छोरी त बोल्न पनि पाउँदैन रे
हजुरआमाको प्यारो नाति नातिनी त आफ्नो हुँदैन रे
बाबुको सम्पत्ती सबै छोराको छोरीले त छुनु पनि हुँदैन रे

उमेर बढेकी छोरी त धेरै माइतीमा बस्नु पनि हुन्न रे
बिहे गरी अर्काको घर गएकी छोरी,
अब आफ्नो जन्मघर नि धेरै आउनु हुन्न रे
कन्यादान गरेको छोरी त मरे पनि बाले जुठो बार्नु पर्दैन र

अर्काको घर गएकी छोरी त अब आफ्नो पनि हुँदैन रे
अर्काको घर जाने जात हो गई अब टाउको दुखाउन पर्दैन रे
बालाई अब म छोरीको माया पनि लाग्दैन रे
भागेर गएको छोरी म मरे पनि फरक पर्दैन र

# Melius portion



**Manika Bhattarai**

To be the best of friends is a gift ,
To share things together care and uplift.

Whether happy or sad ,
The love will be pure,
Good times or bad times,
The bond will endure.

Nothing compares to our friendship,
Nothing is too vast,
Our friendship is the only thing,
That will forever last.

Really nothing can mend my heart ,
But the grief of losing you can tear me apart.

As I stop to count my blessings,
There is one thing which rings true,
I will always be so grateful,
For the friend I found in you .

You will be my star ,
That will always twinkle,
You will be my friend ,
Until we both will wrinkle.

# Thot day



**Karuna Shrestha**
Class : 9 'I'

Wind was blouing throught your hair,
I was feeling that or
I had a look at you,
Then I realized
How come you were so wonderful !
Then I looked at the sky,
I felt so sky,
When you looked at me,
My heart went up to the sky !
Wind was blowing too fast,
I never felt lilce this in past,
when I saw youreyes,
I got lost !
It was beezy that day,
After I left that place,
You are in my head from,
the last eight days ......
I was so encharted to meet you,
Ihalf the fate makes us
meet again .....!!

# "I wish"



**Swechchha Pandey**
Class : 8



I wish to be the rain
To cry out all my pain
Sometimes I feel I'm too in sane
Why do I always look back then

I wish to be the rainbow
I want those colour it show
Rs colorful as it glow
But I can't have them although.

I wish to be the river
To flow all my fear
I want its strength to bear
Which I need not to share

I wish to be the wind
To blow out negativity of mind
and to be that mankind
Who never lost but find.

# Who am I



**Sneha Aryal**
Class : 10 'D'




Everybody wants me
They try to do everything to gain control
But I, I only like to endure

In a battle field, I am god
And in music, I am chords

During hard times, you seek me
and in right times too
Those who don't want me
are truly fools !

Countless lives I have saved till the day
I don't cast any one away
I am always there to ease
everybody calls me peace !

# Care



**Prashansha Dhungana**
Class : 10 'D'



You don't think what will happen !
you don't even care !
When someone tries to tell
you something
you are someone with no fear !

Tears are important to me !
But for you it might not be.
So just wait and see
What these tears have made me.

When you make a mistake
You apologize that's a simple rule
And when you don't
Nobody thinks you're cool

Values and Morales are important
Those are what make us humans.
Don't disobey anyone don't you dare
Always treat everyone with care!

# TRY NOT TO SWAY



**Prakriti Malla**
Class: 10 'D'

The path I know it will end
The journey to my excellence
The journey to my success day
So I will do my best no to sway

Endurance and preservance
I will do it all
Just like Mt. Everest
I will stand firm and tall

Not be someone's favourite
Not be some one's bestest
Just be the bestest version of my self

Not care about others and what they say
This time I am not going to away
This time it will be, just me and my self

This journey, I want it to end soon,
But will it truly be a boon ?
will it truly play like a beautiful tune ?

# Grades don't define you



Soniya Pandey

Documents and papers that's all they want
I want to scream out that
grades don't really define me
but I just really can't
Always worrying about marks, that's how our day goes
And people always care about grades but
they pretend not to show.
Everytime and everywhere its always about grades.
But grades don't define you what's the reason to be afraid ?

Tears rolling down our cheeks but how can we stop it ?
Our life is a fine movie of how much grades we achieve, tell me how can we flop it ?

Always in tension, we let grade to go over us
But while moving towards grades, we had literally lost ourselves.
Maybe one day people will understand that
Grades don't define us and they literally can't

# A delightful one



Prashna Pandey
Class: 11 'E' Science

Few bunch of kids so wild and free
Little life contacting so much glee

Thrilled by the starting of the year
No idea of what they'll have to bear
what's so special about it anyway?
It's the 10th grade of school life, I say

Studied from morning till late night
Anyways the friendship was still tight

Wrote until our pen's ink dried
with each other we laughed and cried

Stayed together from dusk till down
And the year was a delightful one.



# विद्यालय शिक्षामा जलवायु परिवर्तनको असर



● युवराज कंडेल

**विषय प्रवेश**

उन्नाइसौ शताब्दीदेखि शुरु भएको औद्योगीकरण र यातायात तथा विलासिताका प्रविधिको विकासले मानव समुदायलाई निकै सजिलो त बनाएको छ, साथसाथै विश्वलाई संकटग्रस्त समेत बनाउँदै लगेको छ। खासगरी जीवाश्म इन्धनको प्रयोगले पृथ्वीमा हरितगृह प्रभाव उत्पन्न भै विश्वव्यापी उष्णिकरणको अवस्था आएको छ, जसको प्रत्यक्ष असर पृथ्वीको जलवायु-चक्रमा परिरहेको छ। वैज्ञानिकहरुका अनुसार पछिल्लो सय वर्षमा पृथ्वीको तापक्रम, मौसम-चक्र र हावापानीमा निकै हेरफेर भैरहेको छ। सन् १९०६ देखि २००५ को अवधिमा पृथ्वीको औसत तापक्रम ०.७४ सेल्सियस बढ्केको छ। जलवायु परिवर्तनका प्रभाव विशेष गरेर नेपाल जस्ता गरिब, विकासोन्मुख, भूपरिवेष्टित तथा पर्वतीय मुलुकहरुमा बढी देखिएको छ।

अधिकांश नेपालीहरुको आर्थिक अवस्था कमजोर भएकोले हरितगृह ग्याँस उत्सर्जन गर्ने मोटरगाडी र विलासिताका साधनहरुको प्रयोग निकै कम मात्रामा भैरहेको पाईन्छ। नेपालमा औद्योगीकरण पनि नगन्य मात्रामा छ। यी कारणहरुले गर्दा नेपालले विश्वको कूल हरितगृह ग्याँसको करिव ०.०२५ प्रतिशत मात्र उत्सर्जन गर्ने गरेको छ। जलवायु परिवर्तनको ६० प्रतिशतभन्दा बढी प्रभाव जलस्रोतमा पर्ने बताईन्छ। पछिल्ला वर्षहरुमा मुसलधारे वर्षा हुने दिनको सङ्ख्या बढ्दै छ। पानी पर्ने समय र अवधिमा परिवर्तन भइरहेको छ। तीब्र गतिमा हिमगलन हुँदै जानाले हिमनदीहरु पातलिँदै र छोट्टिँदै गएको र हिमतालको आकार बढ्दै गएको बाढी, पहिरो डढेलोको साथै खडेरी, अतिवृष्टि अनावृष्टिका घटनाहरुमा तीव्रता आएको विभिन्न अध्ययनहरूले देखाएका छ। कृषि तथा खाद्यान्न, जलस्रोत, वनजङ्गल तथा जैविक विविधता, स्वास्थ्य, पर्यटन तथा पुर्वाधार लगायतका हरेक क्षेत्रहरुमा जलवायु परिवर्तनको प्रतिकूल प्रभाव पर्न थालेको छ। अन्य क्षेत्रमा जलवायु परिवर्तनका असरहरुको बारेमा निकै चर्चा हुने गरेपनि देशको सामाजिक विकासको मेरुदण्ड बनेको विद्यालय शिक्षाको बारेमा विरलै चर्चा हुने गरेको छ। यस आलेखमा जलवायु परिवर्तनबाट विद्यालय क्षेत्रमा परेको यस्तै असरको बारेमा चर्चा गरिएको छ।

**नेपालमा जलवायु परिवर्तन र विपदको ग्राफ**

नेपालले न्यून मात्रामा हरितगृह ग्याँस उत्सर्जन गरेपनि वायुमण्डलीय तापक्रम बृद्धिका कारण प्रभावित हुँदै गएको छ। सन् १९७४-२०१४ मा नेपालको तापक्रम औसत ०.५६ डिग्री सेल्सियसले बढेको देखिन्छ। प्रक्षेपणहरूले देखाए अनुसार भविष्यमा औसत तापक्रम पनि सन् २०१६-२०४५ मा ०.९२-१.०७ र सन् २०३६-२०६५ मा १.३-१.८२ डिग्री सेल्सियसले बढ्ने अनुमान छ। अध्ययन अनुसार, शताब्दीको अन्त्य सम्ममा, वर्षा औसत ११-२३ प्रतिशत र औसत तापक्रम १.७२-३.५८ डिग्री सेल्सियसले बृद्धि हुने अनुमान गरिएको छ।

तापक्रम वृद्धिको असर मौसमचक्रमा परेको देखिदै गएको छ। अतिवृष्टि, अनावृष्टि र खडेरीका दिनहरु बढिरहेका छन्। यसको कारण बाढी, पहिरो, सुख्खापन र आगलागीका घटनाहरुमा तीव्रता आउनुको साथै नेपालमा वार्षिक वर्षा-चक्रमा हेरफेर, लामो समयसम्म खडेरी पर्ने तथा तीव्र वर्षा हुने गरेको छ। तीब्र गतिमा हिमगलन हुँदै जानाले हिमनदीहरू पातलिदै र छोट्टिँदै गएको एवं हिमतालको आकार बढ्दै गएको छ भने नयाँ हिमतालहरू बन्दै फुट्ने खतरामा

छ। पूर्वानुमान गर्न नसकिने गरि दोहोरिने बाढी पहिरो, शितलहर, लू जस्ता विपदबाट वर्षेनी ठूलो मात्रामा धनजनको क्षति भैरहेको छ। २०७० यताका १० वर्षमा मात्र बाढी, पहिरो र भारि वर्षा जस्ता विपदका घट्नाबाट २१४८ जनाको मृत्यु भएको छ भने १८५ खर्ब रुपैँया भन्दा बढीको आर्थिक क्षति भएको छ। २०८० बैशाख १ देखि मङ्सिर २५ सम्ममा यी ३ विपदबाट थप ६७ जनाको मृत्यु भैसकेको छ भने ३ अर्ब भन्दा बढीको क्षति भएको छ। जलवायु परिवर्तनका कारणले कृषि तथा जलस्रोत व्यवस्थापनका क्षेत्रमा देशले कूल ग्राहस्थ उत्पादनको २ देखि ३ प्रतिशत सम्म नोक्सान व्यहोर्नु परेको छ। अर्कोतर्फ नेपालले कूल ग्राहस्थ उत्पादनको १.५ देखि २.० प्रतिशतसम्म थप खर्च व्यहोर्नुपर्ने अवस्था रहेको छ।

**मनसुनजन्य विपद्‌बाट भएको क्षतिको विगत विगत १० वर्षको तथ्याङ्क**

(२०७०/०१/०१ देखी २०७९/१२/३०)

| घटना | घटना संख्या | मृत्यु | बेपत्ता | घाइते | प्रभावित परिवार | घर क्षति | | गोठ क्षति | पशु चौपाया क्षति | अनुमानित क्षति (रुपैयाँ हजारमा) |
|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | आंशिक | पूर्ण | | | |
| बाढी | १,५१२ | ७४१ | ४६३ | १८७ | ६४,७७० | ४१,३०३ | १०,९२५ | ३६९ | २,८२६ | १६,२९,८४,६७,८८८ |
| पहिरो | २,५६३ | १,३०३ | ३१५ | १,१०६ | १०,०७० | ३,५७५ | ३,७२५ | ५१५ | २,९७७ | १,७७,४४,५४,६३७ |
| भारी वर्षा | १,५३९ | १०४ | १ | २७६ | ५,५६५ | ६८४ | १,२४३ | २४७ | २९६ | ५१,५४,२९,५५५ |
| जम्मा | ५,६१४ | २,१४८ | ७७९ | १,५६९ | ८०,४०५ | ४५,५६२ | १५,८९३ | १,१३१ | ६,०९९ | १८,५८,८३,५२,०८० |

*तथ्याङ्क स्रोतः विपद् पोर्टल (bipadportal.gov.np) र drrportal.gov.np*

**विद्यालयको संख्या र वितरण**

शिक्षा मन्त्रालयको रिपोर्टअनुसार शैक्षिक सत्र २०७९ मा नेपालमा ३६ हजार ३२ वटा विद्यालयहरु संचालित थिए. कूल विद्यालयमध्ये सामुदायिक विद्यालय ७५.९ प्रतिशत, सस्थागत विद्यालय २०.५ प्रतिशत र परम्परागत/ धार्मिक विद्यालय ३.६ प्रतिशत रहेका छन्। तहगत रुपमा हेर्दा सबैभन्दा बढी (४८.९५ प्रतिशत) आधारभूत तह (कक्षा १-५) का विद्यालयहरु छन् भने माध्यमिक तह (कक्षा १-१२) संचालित विद्यालयहरु १३.४४ प्रतिशत मात्र रहेका छन्। प्रदेशागत रुपमा हेर्दा सबैभन्दा धेरै विद्यालयहरु कोशी प्रदेशमा (७०२६) र सबैभन्दा कम विद्यालय कर्णाली प्रदेशमा (३२४३) रहेका छन्।

**विद्यालयको प्रकार अनुसार विद्यालय संख्या**

| तह र प्रकार अनुसारका विद्यालय | सामुदायिक | संस्थागत | परम्परागत/धार्मिक | जम्मा |
|---|---|---|---|---|
| आधारभूत तह (कक्षा १-५) | १४९९८ | १५४१ | १०८९ | १७६२८ |
| आधारभूत तह (कक्षा १-८) | ४९७९ | १६०५ | १४७ | ६७३१ |
| माध्यमिक तह (कक्षा १-१०) | ३६४८ | ३०२५ | ५१ | ६७२४ |
| माध्यमिक तह (कक्षा १-१२) | ३६८६ | ११३२ | २८ | ४८४६ |
| माध्यमिक तह (कक्षा ११-१२) | ३२ | ७० | १ | १०३ |
| जम्मा | २७३४३ | ७३७३ | १३१६ | ३६०३२ |

स्रोतः शिक्षा तथा मानव स्रोत विकास केन्द्र, २०७९

**विद्यार्थीहरुको संख्या र वितरण**

शैक्षिक सत्र २०७९ मा नेपालमा ७२ लाख ६९ हजार ५५१ विद्यार्थीहरु अध्ययन गरेका थिए। कूल विद्यार्थीहरुमध्ये आधारभूत तह (१-८) मा ७४.२ प्रतिशत र माध्यमिक तह (९-१२) मा २५.८ प्रतिशत विद्यार्थीहरु रहेका छन् ।

**तहगत विद्यार्थी संख्या विवरण**

| तह/प्रकार | सामुदायिक | संस्थागत | परम्परागत/धार्मिक |
|---|---|---|---|
| **पूर्व प्राथमिक** | ६४४९३७ | ५४२८८१ | २०६०७ |
| **आधारभूत ( १-५)** | २४१०६५९ | १०८१४८४ | ११८४६० |
| **आधारभूत ( ६-८)** | १३२३७४४ | ४९३६९४ | ९९९५ |
| **माध्यमिक (९-१०)** | ८२९०७२ | २५१२९२ | २४१६ |
| **माध्यमिक (११-१२)** | ५३७५५० | १६३३७५ | ६६५६ |

श्रोत शिक्षा तथा मानव श्रोत विकास केन्द्र, २०७९

**जलवायु परिवर्तनको असर**

जलवायु परिवर्तनले गर्दा विश्वभर विद्यालय शिक्षामा प्रतिकूल असर पर्दै गएको छ। युनिसेफका अनुसार जलवायु परिवर्तनले गर्दा हरेक वर्ष ४ करोडभन्दा बढी बालबालिकाहरु विद्यालय छोड्न बाध्य भैरहेका हुन्छन्। जलवायु परिवर्तनका असर बहुआयामिक हुन्छन् । सतही रुपबाट हेर्दा जलवायु परिवर्तनले विद्यालय शिक्षामा असर पारेजस्तो देखिदैन, तर यसबाट उत्पन्न हुने हरेक विपदले विद्यालय शिक्षामा असर पुगिरहेको हुन्छ। बेमौसमी वर्षा, खडेरी, अत्यधिक वर्षा, शितलहर, अत्यधिक गर्मी जस्ता जलवायु परिवर्तनजन्य घटनाहरुले उत्पन्न गर्ने विपदहरुले गरिबी वृद्धि, रोग र किराको प्रकोप, सरसफाईमा समस्या, विद्यालय र विद्यार्थी सम्बन्धित भौतिक संरचनामा क्षति जस्ता समस्याहरु जन्माउँछन्, जसले गर्दा बालबालिकाहरुको विद्यालयमा उपस्थित हुने र पढ्ने कार्यमा अवरोध सिर्जना हुन्छ र समग्रमा विद्यालय शिक्षा कमजोर हुँदै जान्छ।

**चित्र : जलवायु परिवर्तनको दुष्चक्र**



**१. गरिबी वृद्धिले विद्यालय छोड्ने दरमा वृद्धि**

प्रायजसो गरिबहरु जलवायु परिवर्तनको जोखिमयुक्त स्थानमा बसोबास गर्ने गर्छन् । बाढी, पहिरोजस्ता विपदबाट यिनै गरिबहरु बढी समस्यामा पर्ने गर्छन् यसैपनि गरिब परिवारका बालबालिकाहरु विद्यालयबाट बाहिर रहेका हुन्छन् र विद्यालयमा पुगेका बालबालिकाहरु पनि साधन श्रोत जुटाउन नसक्दा विद्यालय छोड्न बाध्य हुने गर्छन् । फ्ल्यास रिपोर्ट २०७९/८० का अनुसार आधारभूत तहका विद्यार्थीहरुको विद्यालय छोड्ने दर २.९ प्रतिशत छ । यसैगरी माध्यमिक तह (९-१०) का विद्यार्थीको विद्यालय छोड्ने दर ०.७ प्रतिशत रहेको छ । तल्लो तहमा विद्यालय छोड्नेहरु प्रायजसो गरिब परिवारका बालबालिकाहरु नै हुन्छन् । जलवायुजन्य विपदले गर्दा गरिब परिवारहरु अझ गरिब हुदै जान्छन भने सामान्य परिवार गरिब बन्न पुग्छन् । गरिबी बढ्दै जाँदा आफ्ना सन्तानलाई विद्यालयमा पठाउन र उनीहरुको लागि शैक्षिक र अन्य साधन श्रोत जुटाउन असमर्थ हुन्छन् । विपद सिर्जित गरिबीले गर्दा बालबालिकाहरु बालबालिकाहरु विद्यालय छोडेर हातमुख जोर्नको लागि कमाउन तर्फ लाग्छन, जसले गर्दा विद्यालय छोड्ने दर बढ्दै जान्छ ।

**२. भौतिक संरचनामा क्षति**

नेपालका अधिकांश विद्यालयहरु परम्परागत शैली र स्थानीय सामाग्रीहरु प्रयोग गरेर बनाइएका छन् । यस्ता विद्यालय भवनहरुले तीव्र गतिमा आउने प्राकृतिक विपदलाई धान्न सक्ने क्षमता राख्दैनन् । अधिकांश ठाउँमा मानव बसोबास र खेतीपातीको लागि उपयुक्त नहुने स्थानमा समुदायले विद्यालय बनाउने गरेका छन् । नदि किनारा, पहाडको टाकुरा र भिरालो जमिनमा बनाईएका विद्यालयहरु विपदको दृष्टिले निकै जोखिमपूर्ण हुन्छन् र यस्ता विद्यालयलाई विपदबाट जोगाउनको लागि यथेष्ट साबधानी पनि अपनाईएको हुँदैन । शिक्षा मन्त्रालयका अनुसार नेपालका ६० प्रतिशत विद्यालय भवनहरु विपद जोखिममा रहेका छन् । यही कारणले गर्दा जलवायु परिवर्तनजन्य विपदबाट विद्यालयहरुमा छिटो र बढी क्षति हुने गर्छ । विद्यालय भत्कने, बगाउने, कक्षा संचालनको लागि अनुपयुक्त हुने जस्ता अवस्थामा विद्यालयहरु तत्कालै र नियमित संचालन हुन् सक्दैनन्, जसको प्रत्यक्ष असर बालबालिकाको शिक्षामा पर्छ ।

**३. विद्यालयमा अस्थायी शिविर राखिँदा पढाइमा असर**

बाढी, पहिरो जस्ता जलवायु परिवर्तनजन्य विपद आएपछि प्रभावित नागरिकले आश्रय लिने सबैभन्दा सुरक्षित थलो विद्यालयलाई मानिएको हुन्छ । विद्यालयमा विस्थापितहरुलाई राख्दा उद्दार र पुनर्स्थापनामा सजिलो हुने, सामुहिकताको भावना विकास हुने र एक अर्कालाई हेरेर पिडा भुलाउन सक्ने भएकोले सरकार र सामाजिक संस्थाहरुले पनि सुरक्षित स्थानमा रहेका विद्यालयहरुलाई नै अस्थायी बसोबासको स्थानको रुपमा छनौट गरेका हुन्छन् । विपदबाट प्रभावित परिवारहरु विपदका घटनाको लामो समयसम्म पनि आफ्नै थलोमा घर बनाएर बसोबास गर्न शुरु गरिहाल्न सक्दैनन् । पीडितहरु पुनर्स्थापित नहुँदासम्म विद्यालयमा बसिरहँदा विद्यालयहरु संचालन हुन सक्दैनन् र पढाइमा प्रत्यक्ष असर पुग्छ ।

**४. प्रतिकूल मौसम परिवर्तनको असर**

भौतिक संरचनाहरु तत्कालीन वातावरणीय अवस्था (वर्षा, तापक्रम) लाई हेरेर बनाइएको हुन्छ । मौसम तथा जलवायु चक्रमा अनपेक्षित परिवर्तन आउँदा त्यो परिवर्तनलाई विद्यालय भवनले समायोजन गर्न सक्दैनन् । ग्रामीण क्षेत्रका अधिकांश विद्यालय भवनहरु जस्तापाताले छाएका छन् । पहाडी क्षेत्रमा चिसोलाई ख्याल गरेर कम झ्याल र मोटो भित्ता राखेर बनाएको देखिन्छ । जलवायु परिवर्तनले गर्दा अत्यधिक ताता र चिसा दुवै किसिमका दिनहरुको संख्या बढिरहेका छन् । अत्यधिक गर्मी र चिसो हुँदा विगतमा बनाइएका भवनमा बसेर विद्यार्थीहरुले पढ्न सक्दैनन् । ठूलो वर्षा, लू र शितलहर चल्दा विद्यालयमा पठनपाठन गराउन सकिदैन । यही कारण २ दशक अघिको तुलनामा अचेल

मौसमी कारणले विद्यालयहरु बन्द रहने दिनहरुको संख्या बढ्दै गएको देखिन्छ।

**५. विद्यार्थीमा शारीरिक र मानसिक असर**

कलिलो मस्तिष्कका बालबालिकामा विपदले गहिरो असर पार्ने गर्छ। विपदमा परिवारका सदस्यहरु गुमाएका बालबालिकाहरुमा मानसिक आघात पर्ने गर्छ र यिनीहरु पूर्ववत अवस्थामा फर्किन धेरै समय लाग्छ। आफैले विपद भोगेका, घाईते र अंगभंग भएका बालबालिकाहरु लामो समयसम्म पनि सामान्य वर्षा हुँदा, आकाश गड्यांगगुडुंग गर्दा, हुरी चल्दा, अँध्यारो हुँदा तर्सने, आत्तिने ,चिच्याउने गर्छन् । उनीहरु विद्यालय जान डराउँछन् र घरमा पनि एकाग्रताका साथ बस्न, अध्ययन गर्न सक्दैनन् । विपदले मानसिक असर पुगेका बालबालिकाहरुलाई उचित परामर्श र सहयोग नभएमा उनीहरु मानसिक रोगि हुने, विद्यालय छोड्ने र आत्महत्या समेत गर्न सक्छन्। मौसमजन्य विपदका घटनाहरु बाढी, पहिरोले बालबालिकाहरु घाईते समेत भएका हुन्छन, यस्ता विद्यार्थीहरु लामो यात्रा गरेर टाढाका विद्यालयहरुमा पुग्न सक्दैनन्, जसले गर्दा उनीहरु पढाई पुरा नगरी विद्यालय छोड्न बाध्य हुन्छन्।

**६. आवागमनमा वाधा**

ठूला शहरी क्षेत्रबाहेक अन्य क्षेत्रका विद्यार्थीहरुले लामो दुरी हिडेर विद्यालय पुग्नुपर्ने बाध्यता छ। बाटोघाटोको राम्रो व्यवस्था नभएको, खोला नदीमा पुल नभएको जस्ता कारणले विद्यार्थीहरुको आवागमन कष्टकर हुने गरेको देखिन्छ। भिरमा चिप्लेटी खेल्दै, तुईनमा झुन्डिएर, कपडा खोलेर नदि तरेर विद्यालय जानुपर्ने बाध्यता अझैपनि धेरै ठाउँमा छ। विपदका संख्यामा वृद्धि हुदा बाढी र पहिरो जस्ता कारण बाटो अवरुद्ध हुने, खोलामा पानीको बहाव बढेर खोला तर्न नसकिने, बाटो आंशिक वा पूर्ण क्षतिग्रस्त हुने जस्ता समस्याहरु समेत बढ्ने गर्छन्। यस्ता घटनाले विद्यालयमा अनुपस्थिति दर वृद्धि हुनुको साथै विद्यार्थीहरुलाई लामो दुरी पार गरेर विद्यालय जानुपर्ने र विद्यालय छोड्नुपर्ने बाध्यता समेत सिर्जना हुन्छ।

**७. खानेपानी/कृषिमा बढी समय खर्च गर्नुपर्दा विद्यालय छोड्ने दरमा वृद्धि**

जलवायु परिवर्तनले गर्दा देखिएका तापक्रम वृद्धि, जलचक्रमा अनियमितता, खडेरी, शितलहर, किरा फट्यांग्राको वृद्धि जस्ता कारणले गर्दा कृषि उत्पादनमा नकारात्मक असर परिरहेको छ। ग्रामीण क्षेत्रको अर्थतन्त्र कृषिमा आधारित छ। कृषि उत्पादन घट्ने बित्तिकै आम्दानीको श्रोत घट्ने भएकोले त्यसको प्रत्यक्ष असर बालबालिकामा पर्ने गरेको छ। गाउँघरमा वयस्क जनशक्ति घटिरहेको अवस्थामा कृषि कार्यलाई नियमित गर्न र बढी उत्पादन लिनको लागि बालबालिकाहरुले नै बढी श्रम गर्नुपर्ने अवस्था सिर्जना हुन्छ। कृषि र पशुपालन जति कठिन हुदै जान्छ उति नै ग्रामीण क्षेत्रका बालबालिकाहरु विद्यालयमा भन्दा खेतबारी र वनजंगलमा देखिन थाल्छन्, जसले गर्दा विद्यालयमा विद्यार्थीहरु अनियमित हुने र विद्यालय छोड्ने दर वृद्धि हुन्छ ।

जलवायु परिवर्तनको कारण जमिन सुख्खा हुने, पानीका मुहानहरु सुक्ने क्रम विगतमा भन्दा अहिले बढेको छ। सरकारी तथ्यांकले देशका ९४.९३ प्रतिशत परिवार आधारभूत खानेपानीको पहुँचमा रहेका देखाउछन् (आर्थिक सर्भेक्षण २०७०/८०)। तर मध्यम स्तरको खानेपानी सुविधा प्राप्त गर्ने परिवार २५.८१ प्रतिशत मात्र छन्। खानेपानीका अधिकांश श्रोतहरु मौसमी र भूमिगत किसिमका छन्। सुख्खा र खडेरी वृद्धि हुँदा पहाडी क्षेत्रमा पानीका मुलहरु सुक्दै जान्छन्, तराई र भावर क्षेत्रमा भूमिगत जल सतह तल झर्दै जान्छ। घरमै पानीको जोहो गर्नको लागि बालबालिकाहरु बढी खटिनुपर्ने हुन्छ। विद्यालयमा पानीको उपलब्धता कम हुदा विद्यार्थीहरुको पढाइ प्रभावित हुन्छ। महिनावारी भएका छात्रा र शौचालय प्रयोग गर्नुपर्ने विद्यार्थीहरु पानीको कमीले गर्दा विद्यालयमा अनुपस्थित रहन र कक्षा छोड्न बाध्य हुन्छन् । पानीको कमीले गर्दा विद्यार्थीहरुको व्यक्तिगत सरसफाईमा समेत नकारात्मक असर गर्दा जसले गर्दा विद्यार्थीहरु विद्यालयदेखि टाढिदै जान थाल्छन् ।

**७. बसाईसराई वृद्धिमा जलवायु परिवर्तन**

नेपालमा बसाईसराईको दर निकै उच्च छ। खासगरी पहाडी र ग्रामीण क्षेत्रबाट तराई र शहरी क्षेत्रमा मानिसहरु सर्दै गएका छन् । नेपालको पहाडी क्षेत्रबाट र ठूला नदि तटीय क्षेत्रबाट बसाई सरेर अन्य पालिका वा जिल्लामा बसाई सर्ने दर अन्य क्षेत्रको भन्दा बढी देखिन्छ । राष्ट्रिय जनगणना २०७८ अनुसार नेपालमा बसाई सराइ गर्नेहरुमध्ये ०.७ प्रतिशत अर्थात बसाईसराई प्राकृतिक प्रकोपको कारणले हुने गरेको देखिन्छ। जलवायु परिवर्तनको प्रभाव बढ्दै जादा विपदको संख्या पनि बढ्दै जान्छ । विपदले धनजनको क्षति, कृषि भूमिको विनास, विद्यालयमा क्षति, घरमा क्षति जस्ता असरहरु बढ्दै जाने र गरिबी पनि बढ्ने हुन्छ। साधन श्रोतको विनाश र गरिबी वृद्धिले गर्दा मानिसहरु बसाई सरेर अन्यत्र जान बाध्य हुन्छन् र उनीहरुसँगै बालबालिकाहरु पनि बसाई सर्न बाध्य हुन्छन् । खडेरी, पानीको अभाव, किरा फट्यांग्रा तथा रोग वृद्धि जस्ता प्रभावहरु जलवायु परिवर्तनले गर्दा बढ्दै जान्छन्, जसले बसाईसराईलाई वृद्धि गर्न मद्दत पुग्छ। जलवायु परिवर्तनजन्य असरले बसाई सर्दा परिवारसंगै बालबालिकाहरु पनि बसाई सर्छन् । बसाईसराईले बालबालिकाको पढाइ खलबलिने मात्र हुँदैन, विद्यालयमा विद्यार्थीहरु नभएर विद्यालय नै बन्द गर्नुपर्ने अवस्था समेत सिर्जना हुन्छ।

**हिड्नुपर्ने बाटो**

जलवायु परिवर्तन विश्वव्यापी समस्या हो र यसबाट नेपालजस्ता विकासोन्मुख राष्ट्रहरु बढी र छिटो प्रभावित भैरहेका छन्। कमजोर भौगोलिक संरचना, मौसमी र जलश्रोतमा आधारित कृषि, कृषिमा आश्रित जीविकोपार्जन र कमजोर भौतिक संरचनाहरुको कारण नेपालमा जलवायु परिवर्तनजन्य विपदको संख्या वर्षेनी बढ्दै छन् र यसको चपेटामा नेपालको विद्यालय शिक्षासमेत परिरहेको छ । विद्यार्थीहरुले भोग्नु परिरहेको गरिबी, कृषि उत्पादनमा ह्रास, खानेपानी अभाव, प्राकृतिक विपदमा वृद्धि जस्ता समस्याहरु राष्ट्रिय मुद्धा हुन् र यिनीहरुलाई छुट्टै न्यूनीकरण गर्नुपर्छ । विद्यालयहरु वातावरणमैत्री नहुनु, विद्यालय भवनले जलवायु परिवर्तनको असरलाई थेग्न नसक्नु, विद्यालय टाढा हुँदा विपदको समयमा जान नसक्नु, खानेपानीको अभावको कारण बालबालिकाहरु स्कूल जान नखोज्नु जस्ता समस्याहरु विद्यालय शिक्षासँग सोभ्फो सम्बन्ध राख्ने मुद्धाहरु हुन्। पुराना भवनहरुको पुनर्संरचना गरेर र नयाँ बन्ने भवनलाई जलवायु परिवर्तन अनुकूल हुनेगरी बनाउन सकेमा र विद्यालयमा खानेपानीको दिगो व्यवस्था गर्न सकेमा  विद्यालयमा विद्यार्थीहरुलाई सहज र सुरक्षित महसुस हुन्छ। विद्यालय क्षेत्रमा हरियाली प्रवर्द्धन, विद्यालयमा बाढी पहिरोको असर कम गर्न सुरक्षात्मक उपायहरुको अवलम्बन र पुर्व तयारी, विद्यालय पहुँचमार्गको स्तरीकरण र पुल पुलेसा निर्माणजस्ता कामहरु स्थानीय, प्रदेश र संघीय समयमै गर्न सकेमा सम्पूर्ण विद्यालयहरु जलवायु अनुकूलित विद्यालय बन्न सक्छन्। जलवायु परिवर्तनको कारण न्यूनीकरण गर्न र जलवायु परिवर्तन अनुकूलित जीवन ज्युन सिकाउन सकेमा विद्यालय र विद्यार्थीलाई विपदबाट सुरक्षित राख्न सकिन्छ।

**सन्दर्भ सामग्री**

राष्ट्रिय जलवायु परिवर्तन नीति, २०७६

जलवायु परिवर्तन न्यूनीकरण तथा अनुकूलन राष्ट्रिय कार्यान्वयन योजना , २०८०

जलवायु परिवर्तन सम्बन्धि लैंगिक तथा सामाजिक समावेशीकरण रणनीति तथा कार्ययोजना (२०७७-२०८७)

आर्थिक सर्भेक्षण २०७९/८०

राष्ट्रिय जनगणना २०७८ का रिपोर्टहरु

युनिसेफ र युएनडीपीका शिक्षा सम्बन्धि विभिन्न प्रकाशनहरु

लेखकले विभिन्न मन्चमा प्रस्तुत गरेका कार्यपत्रहरु र लेखहरु

International Organization for Migration (IOM) study report on climate change and migration.

Flash Report (2079/80)

Nepal: Education Sector Analysis 2021 (2078 BS)

# कोभिड पछिको शिक्षा, चुनौतीहरू र सुधारका केही उपायहरू



● **विमल आत्रेय, इन्चार्ज**, (शिक्षा, मानविकी तथा कानुन समूह)

सन् २०१९ को अन्त्यतिर चीनको वुहानमा देखिएको कोरोना भाइरस संक्रमण (कोभिड १९) सन् २०२० मा विश्वभरी नै महामारीको रुपमा फैलियो । एक व्यक्तिबाट अर्कोमा चाँडै सर्ने यो रोगको औषधोपचार पत्ता लागि नसकेको अवस्थामा संक्रमणबाट बच्न विभिन्न प्रयासहरु भए । मानिसलाई समय समयमा हात धुन, मास्कको प्रयोग गर्न, व्यक्तिगत सरसफाइमा ध्यान दिन जोड दिइयो । त्यसबाहेक संक्रमणलाई कमजोर पार्न मानिसको भिड र हिडडुल नियन्त्रण गर्न नेपाल सहित विश्वका धेरै देशले बन्दाबन्दी (लकडाउन) को विधि अपनाएका थिए। बन्दाबन्दी गर्ने क्रममा मानिसको भिडभाड हुने सबै क्षेत्र बन्द गर्ने क्रममा शिक्षण संस्था, उद्योग कलकारखाना, धार्मिक क्षेत्रहरुमा, आर्थिक सामाजिक, साँस्कृतिक गतिविधि गर्न रोक लगाइयो । यसै क्रममा शैक्षिक क्षेत्र पनि नराम्ररी प्रभावित भयो । COVID को समयमा सिकाइका विभिन्न वैकल्पिक विधिहरु अपनाइए । COVID सुरु भएपछि करीब ३ महिना कुनै पनि सिकाइको योजना सञ्चालनमा रहेनन् । ततपश्चात केही निजि प्रयासमा अनलाइन कक्षा सञ्चालन गरेर सिकाइ प्रणालीलाई निरन्तरता दिने प्रयास भयो । नेपाल सरकारले २०७७ जेठको अन्त्यतिर वैकल्पिक विधिबाट पढाउने गरी सिकाइ सहजीकरण निर्देशिका ल्याएर विद्यालयको पठनपाठन सञ्चालन गर्न सुरुवात गऱ्यो । त्यसपछि पनि विभिन्न निर्देशिका जारी गरेर वैकल्पिक विधिबाट पठनपाठन गर्नका लागि निर्देशित गरियो । असार १ देखि अनलाइन, रेडियो, टेलिभिजन, प्रिन्ट र खुला शिक्षा माध्यमबाट सरकारी विद्यालयमा पठनपाठन सुरु गर्न निर्देशन दिइयो । पढाइलाई निरन्तरता दिन संघ, प्रदेश र स्थानीय तहलाई सहजीकरण गर्न शिक्षा मन्त्रालयबाट आव्हवान गरिएको थियो । असोज महिनामा सिकाई सहजीकरण निर्देशिका जारी गरिएको थियो । त्यसपछि विद्यालय शिक्षा सम्बन्धि आकस्मिक कार्ययोजना जारी गरिएको थियो । कार्तिक महिनामा विद्यालय सञ्चालन सम्बन्धि कार्यढाँचा सार्वजनिक गरी स्थानीय सरकारलाई जोखिम मूल्याङ्कन गरी विद्यालय खोल्न सक्ने अधिकार दिइयो । त्यसपछि क्रमशः आलोपालो विद्यालय खुल्ने बन्द हुने हुन थाल्यो । संक्रमण बढेका क्षेत्रमा पुन : बन्द हुने क्रम रह्यो र केही समयपछि सबै क्षेत्रमा विद्यालय खुलेका थिए ।

COVID महामारी संक्रमण कम भए पश्चात् नेपालको शैक्षिक क्षेत्र विस्तारै लयमा आएको हो । COVID पछि विद्यार्थीको सिकाईको स्तरलाई मूल्याङ्कन गरी हेर्ने हो भने COVID पूर्वको तुलनामा धेरै परिवर्तन भएको पाइन्छ । लामो समय लकडाउनमा बसेका विद्यार्थीमा त्यो समयको त्रासको असर, अनलाइन प्रविधि प्रयोग गरेर अध्ययन गरेका विद्यार्थीहरु मोबाइल, कम्प्युटर बढी चलाउने र त्यसलाई गलत प्रयोग गर्ने समेत कार्य आदतको रुपमा रहेको पाइएको छ । महामारिले गर्दा शैक्षिक पहुँचमा परेको असर, सिकाईमा भएको असमानता, विपन्न र सिमान्तकृत वर्गले लामो समयसम्म शैक्षिक अवसरबाट बञ्चित हुनुका असरहरु क्रमश देखिएका छन् । कक्षामा कतिपय विद्यार्थीहरुमा face mask लगाउने बानीले गर्दा मास्क खोलेर बोल्न हिड्न लजाउने, कतिपय विद्यार्थी एकोहोरिने, विषयवस्तुमा ध्यान केन्द्रित गर्न नसक्ने, बेलाबेलामा झर्किने, लामो समय अभ्यासलाई निरन्तरता दिन नसक्ने समस्या देखिएको पाइन्छ । विद्यालय तहको पाठ्यक्रममा भएको परिवर्तन र विद्यार्थीले करिब २ वर्ष औपचारिक रुपमा विद्यालयमा नियमित पठनपाठनबाट बञ्चित भएको कारण विषयवस्तुको सिकाइमा धेरै नबउ हुनगै

विषयवस्तुको आधारभूत अवधारणा कमजोर भएको कारण सिकाई स्तर कमजोर हुँदै गएको देखिन्छ।

घर परिवारको वातावरणको प्रत्यक्ष प्रभाव विद्यार्थीको सिकाईमा परेको हुन्छ। अहिलेको सूचना प्रविधिले गर्दा विद्यार्थीका बुबा आमाले र परिवारका अन्य सदस्य पनि घरमा लामो समय मोबाइलमा बिताएको पाइन्छ। समय अनुसार सूचना प्रविधिमा जानकार हुनु अति आवश्यक छ तर विद्यार्थीहरुका अघि बसेर लामो समयसम्म फेसबुक हेर्ने, youtube का मनोरञ्जनात्मक भिडियो हरु हेर्ने अन्य रमाइला बउउक हरु हेर्नाले त्यसको प्रभाव बालबालिकामा परेको छ। COVID को समयमा अभिभावक पनि फुर्सदिलो भएको र उहाँहरुमा पनि मोबाइल लामो समय सम्म हेर्ने लत बसिसकेको हुनाले त्यसलाई समयानुसार उचित व्यवस्थापन गर्नमा केही कमजोरी भएको पाइन्छ। बालबालिकाहरुमा मनोवैज्ञानिक रुपमा महामारीको डर अझ पनि भएको र समय समयमा सामान्य रुघाखोकीमा पनि कोभिडको त्रास हुने गरेको पाइन्छ। वर्तमान निरन्तर मूल्याङ्कन प्रणाली प्रभावकारी व्यवस्थापन नभै रहेको सन्दर्भमा पास हुनका लागि धेरै मिहिनेत गर्नु नपर्ने छाप विद्यार्थीहरुमा बढ्दै गएको छ। SEE तह पछिको अवस्थालाई हेर्दा Non Grading को व्यवस्था भएपनि पढाइमा रोकिनु नपर्ने र स्तरवृद्धि पनि हुने प्रभावले विद्यार्थीहरु झन् अभ्यासमा कमजोर हुँदै गएको देखिन्छ। राज्यको अस्थिर र प्रत्येक वर्षको परिवर्तनशिल शैक्षिक नीति तथा कार्यक्रम र मूल्याङ्कन प्रणालीले शैक्षिक क्षेत्रमा झन् अन्योल बनाएको देखिन्छ।

विद्यार्थीहरुलाई मनोवैज्ञानिक रुपमा संक्रमको प्रभावबाट मुक्त गराउनु, उनीहरुमा देखिएका COVID का प्रभाव र त्यसबाट सृजित विविध आदतहरुमा परिवर्तन गराउनु, सिकाइको अभयासमा देखिएको क्रमभङ्गताको अन्त्य गराउनु, सूचना प्रविधिका साधन र त्यसका application चलाउने समय र पहुँचलाई व्यवस्थापन गर्नु, वर्तमान मूल्याङ्कन प्रणालीलाई व्यवस्थित गराई सिकारुलाई त्यसमा अभ्यस्त गराउनु, घर परिवारमा सिकाईको राम्रो वातावरण सृजना गर्न अभिभावकहरुलाई समेत प्रशिक्षित गर्नु, शिक्षकहरुमा पनि सिकाउने COVID पूर्वको सैलीलाई परिवर्तन गर्नु, वर्तमान मूल्याङ्कन प्रणालीमा शिक्षकलाई अभ्यस्त बनाउनु लगायतका सम्पूर्ण समस्या समाधान गर्न सक्ने शैक्षिक नीति कार्यक्रम निर्माण गरी प्रभावकारी कार्यान्वयन गर्नु नै वर्तमान परिप्रेक्ष्यमा शिक्षा क्षेत्रमा मुख्य चुनौतीहरु रहेको देखिन्छ।

शैक्षिक क्षेत्रमा देखिएका चुनौतीहरुलाई सामना गर्न र समस्या समाधानका लागि बालबालिकाको शारिरीक, मानसिक, सामाजिक, संवेगात्मक पक्ष, वैयक्तिक भिन्नता, विकासात्मक विशेषताहरु र व्यक्तित्वको अध्ययन गरी सोका आधारमा व्यवहार गर्नुपर्दछ। बालबालिकालाई आवश्यकता अनुसार मनोवैज्ञानिक परामर्श प्रदान गर्नु पर्दछ। विद्यार्थीमा भएको डर, त्रास, भय रिस आदि संवेगको निराकरण गर्नुपर्दछ। उनीहरुको सहभागितामा शिक्षण गर्ने र कक्षाकोठामा घरकै जस्तो पारिवारिक वातावरण सृजना गर्नु पर्दछ। अभ्यासका लागि प्रेरणा जगाउने, कक्षाका क्रियाकलापलाई बालकेन्द्रित र मनोरञ्जनात्मक बनाउने, सुचना प्रविधिको प्रयोगलाई सयम तालिका अनुसार प्रयोग गर्ने गरी उचित व्यवस्थापन गर्ने, सबैको समान पहुँच र विभेदरहित वातावरणमा बहुसाँस्कृतिक भिन्ननालाई ख्याल गर्दै समावेशी शिक्षाको मान्यता अनुरुप सिकाई गराउनुपर्छ। उनीहरुको क्षमता, रुची एवम् चाहनालाई विशेष ख्याल गरी जिम्मेवारी दिने, पृष्ठपोषण प्रदान गर्ने गर्नुपर्छ। निरन्तर मूल्याङ्कन प्रणालीलाई व्यवस्थित गर्न शिक्षकको क्षमता विकास, विद्यार्थीका लागि सहभागितात्मक शिक्षण सिकाई, अनुगमन, पृष्ठपोषण र प्राविधिक सहयोगको व्यवस्था गर्नपर्दछ।

शिक्षक अभिभावक सम्पर्क विस्तार गरी विविध अन्तर्क्रिया र अभिभावक शिक्षाको व्यवस्था गर्नुपर्दछ। शिक्षकमा भएका सिकाइका पूर्व शैलीलाई आधुनिक प्रविधिसँग जोड्दै थप क्षमता विस्तार गर्न प्रभावकारी तालिम र त्यो तालिमबाट हासिल गरेको उपलब्धिको कक्षामा गरिएको प्रयोगको थप अनुगमन मूल्याङ्कन र पृष्ठपोषणको व्यवस्था सम्बन्धि निकायबाट गर्नुपर्दछ। सबै पक्षमा सुधार गर्दै अपेक्षित उपलब्धि हासिल गर्न सम्बन्धित निकायबाट शैक्षिक नीति कार्यक्रममा आमुल सुधार गरी त्यसको प्रभावकारी कार्यान्वयन हुन सकेमा मात्र अवको शिक्षा सुधारको गति अघि बढ्न सक्छ। यसका लागि सरोकारवाला सबैले आफ्नो कर्तव्य र जिम्मेवारी बोध गर्नुपर्दछ। हरेकले कर्तव्यबोध साथ अघि बढौं यही नै आजको अवस्थामा शैक्षिक सुधारको महत्वपूर्ण उपाय हो।

# कक्षा ८ का असल अभ्यासहरू



● **खेमनारायण तिवारी**, इन्चार्ज कक्षा ८

*शैक्षिक सत्र २०७९ का लागि यस विद्यालयको कक्षा आठको ईन्चार्जका रुपमा खटिँदै गर्दा प्रधानाध्यापकबाट तोकिएका दैनिकरुपमा सम्पन्न गर्नुपर्ने प्रशासनिक तथा शैक्षिक क्रियाकलापमा सहकर्मी शिक्षकहरुको साथ र सहयोगमा आपसी सहकार्य कायम राख्दै गरिएका उल्लेखनीय अभ्यासहरु निम्नानुसार छन् :-*

१. तल्लो कक्षाबाट कक्षोन्नोति भएका र नयाँ भर्ना भएका विद्यार्थीहरुलाई सम्बन्धित अभिभावकहरुबाट जानकारी प्राप्त गरी उनीहरुको आवश्यकता र रुचिका आधारमा नौ ओटा वर्ग (सेक्सन) मा समुहीकरण गरिएको ।

२. केही विद्यार्थीहरुमा घरमा देखिएका असामान्य व्यवहारका बारेमा अभिभावकबाट प्राप्त गुनासाहरु र तिनै विद्यार्थीहरुमा कक्षामा देखिएका विषयगत समस्याहरु सम्बन्धित विद्यार्थी, अभिभावक, विषय शिक्षक, कक्षा शिक्षक र ईन्चार्ज समेतको उपस्थितिमा देखिएका समस्याहरुमा छलफल गरी उक्त समस्याहरु हल गर्ने गरिएको ।

३. विद्यालयले प्रयोगमा ल्याएको 'Kalika Manavgyan Secondary School App' को पहुँचमा सम्बन्धित शिक्षक, विद्यार्थी, र अभिभावकलाई समेट्दै यस अघि गरिँदै आएको 'Messenger' को प्रयोगलाई पूर्णरुपमा विस्थापित गरिएको ।

४. विद्यार्थी-विद्यार्थी बिच उत्पन्न हुने असमझदारी, झगडा आदिका सन्दर्भमा गहिराईमा अनुसन्धान गरी असमझदारीको जड पत्ता लगाए पछि मात्र आवश्यकताअनुसार समस्या समाधानका उपयुक्त उपायहरु प्रयोग गरिएको ।

५. विद्यार्थीहरुका वास्तविक पारिवारिक पृष्ठभूमि पत्ता लगाई सबैभन्दा बढी कमजोर आर्थिक अवस्थाका विद्यार्थी पहिचान गरी छात्रवृति व्यवस्था गर्न प्रधानाध्यापक समक्ष सिफारिस गरिएको ।

६. प्रथम त्रैमासिक परीक्षा, अर्ध वार्षिक परीक्षाको नतिजा प्रकाशन गर्ने दिन, सम्बन्धित अभिभावकहरुलाई विद्यालयमा निमन्त्रणा गरी उपलब्धिको समीक्षा गरिएको ।

७. मिति २०७९ श्रावण १३ गते शुक्रबारका दिन तत्कालीन वि.व्य.स. अध्यक्ष श्री होम बहादुर गलामी, तत्कालीन शि.अ.सं. अध्यक्ष श्री इन्द्रमणि अर्याल, प्रधानाध्यापक श्री दिनेश थापाको उपस्थितिमा कक्षा ८ का विद्यार्थीका अभिभावकहरुको भेला गरिएको र उक्त भेलामा सरोकारवाला व्यक्तित्वहरुबिच गरिएको अन्तरक्रियाबाट प्राप्त महत्वपूर्ण सुझावहरुलाई मार्गनिर्देशनका रुपमा लिई सोही अनुसार अभ्यास गरिएको ।

८. प्रत्येक विषय कक्षामा नै स्पष्ट हुनेगरी सिकाउने अधिकतम प्रयाश गरिएको, प्रशस्त अभ्यास गराइएको, नियमित सिक्न उत्प्रेरित गराइएको, कक्षामा कम ध्यान दिने र ट्यूसनका लागि अभिभावकमाथि भार थपाउने प्रवृतिलाई निरुत्साहित गरिएको ।

९. कक्षा ८ मा अध्यापन गर्ने शिक्षकहरु विदामा रहेको अवस्थामा सम्बन्धित शिक्षकका कक्षा व्यवस्थापन गर्न विशिष्ट खालको समझदारी स्थापना गरिएको ।

१०. मिति २०७९ माघ २१ गते शनिबारका दिन कक्षा ८ का विद्यार्थीहरुलाई बाउन्नकोटी सामुदायिक वन परिसरको उद्यानमा शैक्षिक अवलोकन भ्रमण तथा वनभोजका लागि लगिएको थियो । उक्त कार्यक्रमको व्यवस्थापनका लागि शिक्षक श्री झलक पौडेलको संयोजकत्व रहने गरी कक्षा आठका सम्पूर्ण कक्षा शिक्षकहरु सदस्य रहेको समिति मार्फत गरिएको थियो । उक्त अवलोकन भ्रमण तथा वनभोज कार्यक्रममा कक्षा आठका ३२५ जना विद्यार्थीहरु, १२जना शिक्षकहरु र ३ जना अतिथिहरुको सहभागिता रहेको थियो। अगुवा विद्यार्थीहरुको समेत उपस्थितिमा सम्पूर्ण आम्दानी खर्च सदर गरिएको थियो ।

११. मिति २०७९ माघ २३ गते सोमबारका दिन कक्षा ८ का विद्यार्थी जोन मिजारको मुटु रोगका कारण उपचारका क्रममा दुःखद निधन भएकोमा दोश्रो दिन वि.व्य.स. अध्यक्ष श्री नित्यानन्द ज्ञवाली, प्रधानाध्यापक श्री दिनेश थापा र कक्षा आठका ईन्चार्ज निज विद्यार्थीको घरमा परिवारलाई भेटी समवेदना व्यक्त गरियो । उक्त दुःखद घटनाको पाँचौ दिन केही शिक्षकहरु र कक्षा आठका प्रत्येक सेक्सनका विद्यार्थीको प्रतिनिधि समूहले निज विद्यार्थी जोन मिजारको घरमा परिवारलाई भेटी समवेदना व्यक्त गरियो ।

१२. स्वाध्ययन नगर्ने, अध्ययनका लागि समय व्यवस्थापन नगर्ने, राति छिटो सुत्ने, बिहान ढिलो उठ्ने, अभिभावकले भनेको नमान्ने, सामाजिक सन्जालको प्रयोगमा भुल्ने, धेरै समय मोबाईलमा भुल्ने , समयको सदुपयोग नगर्ने, अस्वाभाविक व्यवहार देखाउने, गलत व्यक्तिको सङ्गतमा परेका आदि विद्यार्थीहरुलाई विशेष लक्षित गरी अन्य विद्यार्थीहरुलाई समेत भविष्यमा उपरोक्त विषयमा सचेत गराउन 'Abalone Nepal-Rupandehi' संस्था मार्फत उक्त संस्थाबाट खटिनुभएका माला प्रधान र रन्जु शर्माको सक्रियतामा 'Mental Health and Well Bieng + Drug Awareness' शीर्षकमा सचेतना कार्यक्रम आयोजना गरिएको ।

---

## आमा बुवाको माया



**सागरा पाठक**
कक्षा : ९ 'इ'

नौ महिना आमाको कोखमा
हुर्किए म आमा बुवाको साथमा ।
आमाले मलाई बोल्न सिकाइन र
बुवाले मलाई हिड्न सिकाए ॥

कोहो पराई कोहो आफ्नो भनि चिन्न सिकाए
पछि कामले गर्दा आफै पराइ जस्तै घर कम आउन थाले,
बुवाको चाहना मलाई बोर्डिङमा पढाउने,
आमाको चाहना मलाई कालिकामा पढाउने

दाई दिदीले आमालाई सम्झाउन थाले
सरकारीमा होइन बोर्डिङमा नै हो नानीलाई पढाउने
पछिमा कालिकामा नाम निकाली कालिकामा नै पढन थाले
साथी दाई सबैले मलाई जिस्काउन थाले

आमाले आफुले नखाई हामीलाई खुवाइन
बुवाले आफ्नो स्वास्थ्य नहेरी हामीलाई
डाक्टसकाहा लय,
आज थाहा पाय आमा बुवाको माया

# बालबालिका संलग्न मुद्दाको व्यवस्थापन



● **शेरचन्द्र गिरी**, अधिवक्ता तथा ईन्चार्ज व्यवस्थापन समूह

बाल न्याय प्रणालीको अवधारणाको विकाससँगै बालबालिका संलग्न मुद्दाहरूको कारवाही र व्यवस्थापन पनि छुट्टै ढङ्गबाट गरिनुपर्ने मान्यताको विकास भएको छ। खास गरेर बालबालिकाको उमेरजन्य स्वभाव, तिनीहरूको अपरिपक्वताको अवस्था र बयस्कसरह दोषी मानसिकताको विकास भइनसकेको हुने स्थितिले गर्दा बालबालिका संलग्न मुद्दाहरूको व्यवस्थापन भिन्न रूपमा गर्नुपर्ने दृष्टिकोण बनेको पाइन्छ। बालअधिकारसम्बन्धी महासन्धि, १९८९, बालबालिकासम्बन्धी ऐन, २०७५ र बाल न्याय (कार्यविधि) नियमावली, २०७६ ले गरेका व्यवस्थाहरूको सन्दर्भमा बालबालिका संलग्न मुद्दाहरूको व्यवस्थापनमा अन्य मुद्दाहरूको तुलनामा केही थप विषयहरूमा ध्यान दिनुपर्ने देखिन्छ। बालबालिका संलग्न मुद्दाहरूको व्यवस्थापनमा ध्यान दिनुपर्ने कुराहरू देहाय अनुसार छन्

**अभियोगपत्र दर्ता**

अभियोगपत्र दर्ताका सम्बन्धमा बालबालिका प्रतिवादी भएका मुद्दाका हकमा मात्र लागू हुने छुट्टै विशेष व्यवस्था भएको पाइँदैन। अन्य मुद्दासरह बालबालिका प्रतिवादी भएका मुद्दामा पनि अभियोगपत्र प्राप्त हुँदा प्रतिवादी बालबालिका पक्राउ परेको अवस्था हो भने अभियोगपत्रका साथमा पक्राउ परेका बालबालिका साथै ल्याउनु पर्ने हुन्छ र प्रतिवादी बालबालिका पक्राउ नपरेको अवस्था हो भने प्रतिवादी बालबालिकालाई अदालतबाटै म्याद जारी गरी हाजिर हुन म्याद पठाउन माग गरिएको हुन्छ। प्रतिवादी बालबालिकालाई अभियोगपत्रका साथ उपस्थिति गराइएको रहेछ भने सर्वप्रथम देहायका कुरामा ध्यान दिनुपर्ने हुन्छः

क) प्रतिवादी बालबालिकालाई बालमैत्री कोठामा राख्ने,

ख) नेल हतकडी लगाइएको छ छैन, भए बालबालिकालाई नेल हतकडी लगाउन नपाइने हुँदा खोल्न आदेश दिने

ग) अनुसन्धानका लागि थपिएको म्यादभित्र ल्याइएको छ छैन,

घ) कुनै शारीरिक परीक्षण गर्नु पर्ने छ छैन,

ङ) प्रतिवादी बालबालिकाका तर्फबाट कानून व्यवसायीको उपस्थिति छ छैन,

च) परिचयात्मक विवरण गोप्य राखेको छ छैन,

छ) बिज्याइँकर्ता बालकको मात्र होइन, पीडित पनि बालक नै रहेछ भने त्यस्तो पीडितको पनि परिचयात्मक विवरण गोप्य राखे नराखेको के छ,

ज) परिचयात्मक विवरण गोप्य नराखेको अवस्था भए परिचयात्मक विवरण गोप्य राख्ने प्रक्रिया सम्पन्न गर्ने,

झ) तहकिकातका क्रममा अभिभावकको जिम्मामा राखिएको वा बाल सुधार गृहमा राखिएको भए उपस्थित गराइएको छ छैन,

ञ) बाल सुधार गृहमा राखिएका बालबालिकाका हकमा त्यस्तो सुधार गृहमा राखिएको देखिने प्रमाण संलग्न छ छैन र अभियोगपत्रसाथ उपस्थिति गराउन नसकिएको कारण खुलाईएको छ छैन,

ट) अभियोगपत्रका साथ सामाजिक अध्ययन प्रतिवेदन संलग्न छ छैन, (ठ) अभियोगपत्र हदम्यादभित्र छ छैन।

**अभियोगपत्र दर्ता भएपछिको कारवाही**

बाल इजलास सञ्चालनका लागि समाजसेवी र बालविशेषज्ञलाई जानकारी गराउने बाल इजलास बालबालिका संलग्न मुद्दाको सुरु कारवाही र किनारा गर्न जिल्ला अदालतमा गठित इजलास हो। बालबालिका वादी वा प्रतिवादी भएको मुद्दाको सुरु कारवाही र किनारा गर्ने अधिकार बालबालिकासम्बन्धी ऐन,२०७५को दफा ३०(१) मा व्यवस्था भए अनुसार बाल अदालतलाई रहेको छ। सोही ऐनको दफा ३०(१) मा उल्लेख भए अनुसार बाल अदालतको गठन नेपाल सरकारले गर्न सक्ने व्यवस्था रहेको छ तर हालसम्म बाल अदालतको गठन भइनसकेको हुँदा सोही ऐनको दफा ३०(२) मा व्यवस्था भए अनुसार बालबालिका संलग्न मुद्दाको कारवाही र किनारा गर्ने अधिकार बाल अदालत गठन नभएसम्मका लागि सम्बन्धित जिल्ला अदालतलाई हुने व्यवस्था छ। सम्बन्धित जिल्ला अदालतमा पनि बालबालिकाको मुद्दा हेर्ने प्रयोजनका लागि दफा ३०(३) मा उल्लेख भए अनुसार एउटा बाल इजलास रहने व्यवस्था छ। बाल इजलासमा रहने समाजसेवी, बाल विशेषज्ञ वा बालमनोवैज्ञानिक सर्वोच्च अदालतको परामर्शमा नेपाल सरकारले तोक्दछ। एकभन्दा बढी जिल्ला न्यायाधीश भएको जिल्ला अदालतमा बाल इजलासमा रहने जिल्ला न्यायाधीश प्रधान न्यायाधीशले तोक्दछ। बालबालिका प्रतिवादी भएका मुद्दा जिल्ला अदालतमा दर्ता हुन आउनासाथ निजको बयान लिनेलगायत थुनछेकको आदेशसमेत तुरुन्त गर्नुपर्ने हुँदा सम्बन्धित समाजसेवी वा बालविशेषज्ञलाई इजलास सञ्चालनका लागि यथाशिघ्र जानकारी गराउनुपर्दछ।

**ख. बाल इजलासले तत्कालै गर्नुपर्ने कार्यहरू**

अभियोगपत्र दर्ता भएपछि बाल इजलासले देहायका कार्यहरू गर्नु पर्ने हुन्छ :

अभियोगपत्र र तत्सम्बन्धी लिखत प्रमाणको एक प्रति बालकको बाबु वा आमालाई तुरुन्त दिने,बाबु आमा नभएका बालबालिका भए अभियोगपत्र र तत्सम्बन्धी लिखत प्रमाणको एक प्रति निज बालकको संरक्षकलाई तुरुन्त दिने,बाबु आमा वा संरक्षक नभएमा वा नभेटिएमा वा नबुझेमा बालकको कानून व्यवसायीलाई बुझाउनु पर्ने,बालकको कानून व्यवसायी नभएमा निजको तर्फबाट प्रतिनिधित्वको लागि वैतनिक कानून व्यवसायी नियुक्त गरिदिने र त्यस्तो सूचना पनि निज कानून व्यवसायीलाई बुझाउने।कुनै बालकको तर्फबाट वैतनिक कानून व्यवसायी नियुक्त गरिदिएकोमा सोको जानकारी सम्बन्धित बालक र निजको बाबु आमा वा संरक्षकलाई लिखित रूपमा गराउने।बालकको बाबु आमा वा संरक्षक आफैं अदालतमा उपस्थित भई त्यस्तो सूचना बुझ्न चाहेमा बुझाइदिने।

**बालबालिकासम्बन्धी मुद्दामा थुनछेकको आदेश**

थुनछेकको आदेश भन्नाले सरकारवादी फौजदारी मुद्दामा प्रतिवादीको बयान लिने कार्य सम्पन्न भएपछि थुनामा राखी पुर्पक्ष गर्ने, धरौट वा जमानत लिई पुर्पक्ष गर्ने र साधारण तारिखमा राखी पुर्पक्ष गर्ने गरि तीन किसिमको आदेश गर्न सकिने व्यवस्था छ। तर बालबालिका प्रतिवादी भएको मुद्दामा थुनछेकको आदेश गर्दा वयस्कहरू संलग्न रहेका अन्य सामान्य मुद्दालाई मात्र आधार बनाई थुनछेकको आदेश गर्न मिल्दैन। बालबालिका संलग्न मुद्दाकोसन्दर्भमा देहायका कुराहरू विचार गरी थुनछेकको आदेश गर्नुपर्ने हुन्छ :

क) कति सजाय हुने कसुरको अभियोग लागेको छ ?
ख) बालकको शारीरिक अवस्था र उमेर कस्तो छ ?
ग) कसुर गर्दाको परिस्थितिलाई हेर्दा थुनामा राख्न उपयुक्त हुन्छ हुँदैन ?
घ) थुनामा राख्ने ठाउँको अवस्था आदि।

कानूनबमोजिम मुद्दाको पुर्पक्षको लागि थुनामा नै राख्नुपर्ने बालबालिका रहेछन् भने पनि प्रतिवादी बालबालिकालाई कानूनबमोजिमको आदेश गरी मुद्दाको पुर्पक्षको लागि कारागारमा नपठाई बाल सुधार गृहमा पठाउने आदेश गर्नुपर्ने हुन्छ।

**प्रमाण बुझ्ने प्रक्रिया**

थुनछेकको आदेश गर्ने काम सम्पन्न भएपछि प्रमाण बुझ्ने आदेश गरी प्रमाण बुझ्ने प्रक्रिया सम्पन्न गर्नुपर्ने हुन्छ। बाल इजलासले हेर्ने मुद्दा दायर भएको एकसय बीस दिनभित्र फैसला गरिसक्नु पर्ने गरी व्यवस्था भएको हुँदा यस्ता मुद्दामा यथाशक्य छिटो प्रमाण बुझ्ने प्रक्रिया सम्पन्न गर्नुपर्ने देखिन्छ। त्यसैले सबै प्रतिवादी बालबालिकाहरू अभियोगपत्र

साथ उपस्थिति गराइएको रहेछ भने थुनछेक आदेश गर्दाकै दिन मुद्दामा बुझ्नु पर्ने देखिएका सबै प्रमाणहरू बुझ्ने आदेश गर्न पनि सकिन्छ।

**साक्षी परीक्षण**

मुद्दामा प्रतिवादी बालबालिकाको बयान कार्य सम्पन्न भएपछि वादी र प्रतिवादी दुबै पक्षको साक्षीहरू बुझ्ने आदेश गर्नुपर्ने हुन्छ। यसरी साक्षी बुझ्ने आदेश गर्दा एकभन्दा धेरै प्रतिवादी भएको मुद्दा रहेछ भने पनि सबै प्रतिवादीहरूको बयान भइनसकी साक्षी बुझ्ने आदेश गर्नु हुँदैन। तर प्रतिवादी उपस्थित हुने म्याद समाप्त भइसकेको अवस्था छ भने उपस्थित नभएको पक्षलाई पर्खेर बस्नु पर्ने कुरा आउँदैन। वारेण्ट जारी हुने मुद्दा र चोरीको महलबमोजिम मुलतबी रहने मुद्दाबाहेक अन्य मुद्दामा उपस्थित रहेका प्रतिवादीहरूको साक्षी बुझ्ने आदेश गर्न सकिन्छ र मुद्दाको कारवाहीलाई अगाडि बढाउन सकिन्छ। कुनै मुद्दामा साक्षी राखिएको व्यक्ति बालबालिका रहेछ भने सर्वप्रथम त्यस्तो व्यक्ति साक्षी हुन सक्ने वा नसक्ने के हो सो कुराको यकिन गर्नुपर्दछ। बालबालिकाको उमेर कम भएकै कारणले मात्र त्यस्ता बालबालिकाहरू साक्षी हुन अयोग्य हुँदैनन्। सोधिएको प्रश्न बुझ्न सक्ने छ र त्यसको युक्तियुक्त जवाफ दिन सक्नेछ भने जतिसुकै उमेरको भए पनि साक्षी हुन सक्छन् (प्रमाण ऐन, २०३१ को दफा ३८)। प्रतिवादी बालबालिकाको आमा, बाबुलाई गवाही दिन कर नलाग्ने कुनै प्रतिवादी बालबालिकाको आमा वा बाबुलाई निज बालबालिकाको विरुद्धमा गवाही दिन कर लाग्दैन (प्रमाण ऐन, २०३१ को दफा ४०)

**बालबालिका संलग्न मुद्दामा इजलास व्यवस्थापन**

बालबालिका संलग्न मुद्दामा इजलास व्यवस्थापन भन्नाले बाल इजलासको व्यवस्थापन भन्ने सम्झनुपर्ने हुन्छ। बाल इजलास भन्नाले जिल्ला न्यायाधीशको अतिरिक्त तोकिएका समाजसेवी, बाल विशेषज्ञ वा बाल मनोवैज्ञानिकलाई बुझ्नुपर्ने हुन्छ। बाल इजलासको व्यवस्थापन गर्दा इजलासमा बस्ने पदाधिकारीहरूको उपस्थितिको सुनिश्चितता, पीडित तथा प्रतिवादी बालबालिकाको सुरक्षाको प्रत्याभूति, समयमा कारवाहीको सञ्चालन जस्ता विषयहरूमा ध्यान दिनु पर्ने हुन्छ। तसर्थ बालबालिका संलग्न मुद्दामा इजलास व्यवस्थापन गर्दा खास गरेर देहायका कुराहरूमा ध्यान पुऱ्याउनु पर्ने हुन्छ ः

**क. बाल इजलासका पदाधिकारीहरूको उपस्थितिको सुनिश्चितता**

बाल इजलास भन्नाले जिल्ला न्यायाधीशका अतिरिक्त समाजसेवी, बाल विशेषज्ञ वा बाल मनोवैज्ञानिकसहितको इजलास भए पनि व्यवहारमा बाल इजलासमा समाजसेवी र बाल विशेषज्ञको उपस्थिति कमै हुने गरेको पाइएको छ। यसो हुनाको मुख्य कारणमा निजहरूको उपस्थितिको सुनिश्चितताका लागि आवश्यक व्यवस्थापन हुन नसकेको भन्ने देखिन्छ। तसर्थ बाल इजलासको व्यवस्थापन गर्नुपर्दा सर्वप्रथमतः इजलासमा रहने पदाधिकारीहरूको उपस्थितिको व्यवस्थापन नै महत्वपूर्ण रहने देखिएको छ।

**ख. सम्बन्धित पक्ष र कानून व्यवसायीको उपस्थितिको सुनिश्चितता**

आफ्नो मुद्दाको सुनुवाई हुँदा आफू उपस्थित हुन पाउनु हरेक व्यक्तिको आधारभूत मानव अधिकारको विषय हो र स्वच्छ सुनुवाइको आधारभूत सिद्धान्त पनि हो। यो अधिकार वयस्क व्यक्ति संलग्न मुद्दाको सुनुवाइमा मात्र होइन, बालबालिका संलग्न मुद्दाको सुनुवाइमा पनि उत्तिकै सान्दर्भिक हुन्छ।यसैले बाल इजलासको व्यवस्थापनमा सम्बन्धित पक्ष र निजको प्रतिनिधित्व गर्ने कानून व्यवसायीको उपस्थितिको सुनिश्चितता महत्वपूर्ण मानिन्छ।

**गोपनीयता र सुरक्षाको व्यवस्था**

सामान्यतया मुद्दाको सुनुवाई खुला इजलासमा गर्नु पर्ने न्याय प्रणालीको एउटा आधारभूत मान्यता हो। तर बालबालिका संलग्न मुद्दामा बालबालिकाको सर्वोत्तम हितलाई ध्यानमा राखी सुनुवाई खुला गर्न नहुने मान्यता विकास भएको छ। अमुक आरोप लागेको विषय मात्र होइन, अदालती प्रक्रियामा संलग्नताको विषय पनि गोप्य राखिनु पर्ने मान्यताहरू विकास भएको छ। यस्ता बालबालिकाको गोपनीयताको संरक्षणका लागि दुई किसिमका उपायहरू अवलम्बन गर्न सकिन्छ - (१) बालबालिकाको परिचयात्मक विवरणको गोपनीयता कायम राखेर र (२) सुनुवाइ हुँदा इजलासमा हुने

व्यक्तिहरूको उपस्थितिलाई नियन्त्रण गरेर । यस अतिरिक्त कतिपय अवस्थामा प्रतिवादी बालबालिकाको जीउ ज्यान नै पनि जोखिममा परेको हुनसक्छ। बाल इजलासको व्यवस्थापन गर्दा यी कुराहरूमा समेत ध्यान दिई उपयुक्त व्यवस्था गर्नुपर्ने हुन्छ। यसका लागि

मुद्दाको सुनुवाइका लागि इजलास कायम गर्दा बन्द इजलास कायम गर्ने, मुद्दासँग सम्बन्धित घटनाको विवरण पत्रपत्रिकामा प्रकाशन नहुने स्थिति कायम गर्ने, मुद्दाको सुनुवाइको सिलसिलामा बालबालिका प्रतिवादीको नाम बोलाउनु पर्दा परिवर्तित नामबाट बोलाउने, प्रतिवादी बालबालिकाउपर पीडित पक्षका सदस्यहरूबाट कुनै सुरक्षा जोखिम छ छैन बुझी आवश्यक उपाय अवलम्बन गर्ने जस्ता कार्यहरु गर्नुपर्छ ।

**बालबालिकासम्बन्धी मुद्दामा बहस व्यवस्थापन**

बहस व्यवस्थापनको विषय बालबालिकासम्बन्धी मुद्दामा मात्र सम्बन्धित हुने नभई सबै प्रकारका मुद्दाहरूमा लागू हुने कुरा हो। मुद्दाको सुनुवाइ छिटो वा ढिलो हुने कुरा केही हदसम्म बहस व्यवस्थापनमा पनि निर्भर गर्दछ । बालबालिकासम्बन्धी मुद्दाको सुनुवाइ प्राथमिकतापूर्वक गर्नु पर्ने कानूनी व्यवस्था रहेको परिप्रेक्ष्यमा यस्ता मुद्दाहरूमा बहस व्यवस्थापन हुनु अझ महत्वपूर्ण मानिन्छ । बालबालिकासम्बन्धी मुद्दाहरूमा बहस व्यवस्थापनका लागि देहायअनुसार गर्न सकिन्छ :

क) पक्ष बालबालिकाका तर्फबाट बहस गर्न कानून व्यवसायीको उपस्थितिको सुनिश्चितता गर्ने, तथा सो नभएमा निजको तर्फबाट बहस गर्न वैतनिक कानून व्यवसायीको व्यवस्था गर्ने,

ख) दैनिक पेसी सूचीमा चढेको मुद्दा कुनै कारणले पनि सूचीबाट नहटाउने, मुद्दा स्थगित नहुने,

ग) मुद्दाको सुनुवाइ प्रारम्भ हुनुभन्दा अगावै काबु बाहिरको परिस्थिति परी अदालतमा उपस्थित हुन नसकेको कारण देखाएमा बढिमा दुईपटकसम्म मुद्दाको सुनुवाइ स्थगित हुन सक्ने तर देहायका मुद्दाको सुनुवाइ स्थगित नगर्ने - इजलासबाट प्राथमिकता दिई हेर्ने आदेश भएका मुद्दा, एकै पक्षको एकभन्दा बढी कानून व्यवसायी रहेको मुद्दा, हेर्दा हेर्दैको मुद्दा, दुई पटक पेसी स्थगित भइसकेको मुद्दा, प्रचलित कानूनबमोजिम मुद्दा फैसला गर्नुपर्ने समयावधि नाघेका मुद्दा, मुद्दाको प्रकृति र विषयवस्तु हेरी बहसको लागि समय तोक्ने ।

घ) बहस गर्दा अनावश्यक विषयमा प्रवेश गर्नबाट रोक्ने, निर्णय गर्नु पर्ने प्रश्नमा मात्र सीमित रही बहस गर्न निर्देशन दिने,

**फैसला**

मुद्दाको कारवाहीमा फैसला अन्तिम चरणको कारवाही हो। प्रतिवादी बालबालिकालाई कुनै हालतमा पनि निजउपर लगाइएको अभियोग प्रमाणित भएमा हुन सक्ने अधिकतम कैदको सजायको अवधिभन्दा बढी अवधिसम्म बाल सुधार गृहमा राखिनुहुँदैन ।पुर्पक्षको निमित्त थुनामा रहेको बालबालिकालाई मुद्दा फैसला हुँदा लाग्ने ठहरिएको जरिवाना वा कैदको सजायको अङ्कमा निज थुनिएको दिन मिनाहा दिई बाँकीमात्र असुल गर्ने गरी फैसला गर्नुपर्दछ।बालबालिकालाइ थुनाको लागि बाल सुधार गृहमा राखिने हुनाले सोही अवधिलाइ नै थुनामा रहेको अवधि भनी बुझ्नुपर्ने हुन्छ।प्रतिवादी बाल बालिकालाई कैदको सजाय लाग्ने गरी फैसला भएबमोजिम थुनामा राख्दा वा बाल सुधार गृहमा राख्दा कुन कानूनको कुन दफाबमोजिमको अभियोगमा कसुरदार ठहर भएको हो र कति अवधि कैद वा बाल सुधार गृहमा बस्नु पर्ने हो भन्ने कुराको कारण खोली पुर्जी दिनुपर्दछ । कुनै प्रतिवादी बालबालिकासँग मुद्दाको कारवाहीको सिलसिलामा धरौट वा जमानत लिइएको रहेछ भने सो मुद्दाको फैसला भएपछि फिर्ता वा फुकुवा गरी दिनुपर्छ

**सन्दर्भसुची**

नेपालको संविधान, २०७२
बालअधिकार सम्बन्धी महासन्धि, १९८९,
बालबालिका सम्बन्धी ऐन, २०७५
बाल न्याय (कार्यविधि) नियमावली, २०७६
जल्ला अदालत नियमावली, २०५२
प्रमाण ऐन, २०३१
मुलुकी फौजदारी कार्यविधि संहिता, २०७४
मुद्दा व्यवस्थापन दिग्दर्शन

# बालबालिकाको भविष्य निर्माणमा अभिभावकको भूमिका



● **ज्ञानेश्वर आचार्य**, शिक्षक

शिक्षा मानव जीवनको ज्योति हो । जीवनलाई सार्थकता दिनलाई शिक्षा अपरिहार्य तत्व हो । अहिलेको युग विज्ञान प्रविधि र विश्वव्यापीकरणको युग भएकाले शिक्षाको अभावमा मानव जीवनले सार्थकता पाउन सक्दैन । बालबालिकाको व्यक्तित्व विकासमा सामाजिक परिवेश, घरायसी वातावरण, साथीसङ्गीको सङ्गत, विद्यालयको परिवेशसँग सम्बन्धित रहेपनि मुख्य रूपमा अभिभावकको भूमिका महत्वपूर्ण रहेको हुन्छ । बालकको पहिलो पाठशाला भनेको घर हो । घरमा हुने हरेक क्रियाकलापको प्रभाव बच्चाहरूमा पर्दछ । जसले उसको भविष्यको आधार खडा गर्दछ । मानिस सामाजिक प्राणी भएकाले एक अर्काको सरसहयोगबिना अगाडि बढन असम्भव हुन्छ । घरपरिवार, समाज र सामाजिक परिवेशबाट टाढा रहन सक्दैन यसैले यसको प्रभाव बच्चाहरूमा स्वतः पर्दछ । किशोरावस्था बच्चाहरूका लागि महत्वपूर्ण समय मानिन्छ । यो अवस्थामा अभिभावकबाट उचित मार्गनिर्देशन हुनसकेन भने उनीहरूको जीवनले सार्थकताको बाटो लिन सक्दैन त्यसैले यो उमेरमा अभिभावक सचेत हुनु आवश्यक हुन्छ । यस उमेरमा बालबालिकामा प्रशस्त उर्जा, जोस, जाँगर र उत्साह हुन्छ । यो अवस्थामा अभिभावकहरूले सचेतपूर्ण भूमिका निर्वाह गर्न सकेनन् भने उनीहरू होहल्ला, मुडभेड र दुर्व्यसनको शिकार बन्न सक्छन् । यस्तो अवस्थामा अभिभावकको भूमिका महत्वपूर्ण रहन्छ ।

अहिले मानिसमा मानसिक तनाव डरलाग्दो समस्याको रूपमा देखा परेको पाइन्छ । यसको प्रभाव बच्चाहरूमा पनि पर्न थालेको पाइन्छ । यस समस्याबाट बालक, युवा, बुढा, धनी, गरिब, श्रमिक, पुरूष, महिला हरेक वर्ग यसबाट मुक्त हुन सकेका छैनन् । प्रसिद्ध मनोवैज्ञानिक जेम्स कलमेनका अनुसार ***"सत्रौं शताब्दी पुनजागरणको अठारौं शताब्दी बौद्धिककाल, उन्नाइसौं शताब्दी प्रगतिकाल, बिसौं शताब्दी चिन्ताद्वारा ग्रसित काल हो"*** त्यसैले बच्चाहरू जन्मदै तनाब बोकेर जन्मिएका होलान् । किशोरावस्थालाई बालबालिकाको सङ्कटकालीन अवस्था पनि भनिन्छ, यो अवस्थामा बच्चाहरूको मनमा अनेक भ्रम, द्वन्द र कल्पना प्रचुर मात्रामा हुन्छ । उनीहरू आफ्नै वास्तविक संसारमा भन्दा काल्पनिक संसारमा बढी रमाउने गर्दछन् । यस किसिमका भ्रम हटाउन प्रायः आफ्नै उमेरका सहपाठीहरूसँग सल्लाह लिने गर्दछन् । यस्तो अवस्थामा अभिभावकले उनीहरूसँग आवेगपूर्ण व्यवहार नगरी मनोविज्ञान बुझेर सचेतपूर्ण किसिमको व्यवहार गर्नुपर्दछ । उनीहरूलाई भेदभाव सिर्जना गर्ने व्यवहार नभइ सदा समान, मित्रवत् व्यवहार र माया गर्न सक्नुपर्छ ।

प्रायजसो अभिभावकहरू बच्चाको क्षमतालाई पहिचान नगरी कडा अनुशासनमा राख्दै उनीहरूबाट क्षमताभन्दा बढी अपेक्षा राखेको पाइन्छ, उनीहरूले आफूले सोचेअनुसारको सपना पूरा गरिदिऊन् भन्ने आशा राख्दछन् । यो व्यवहारिक देखिदैन किनभने सबै बालबालिकामा एउटै क्षमता र प्रतिभा हुदैन र उनीहरूका रूचिका क्षेत्र फरक फरक हुन सक्छन् । अभिभावकले बच्चाको क्षमता र चाहनालाई बुझ्न आवश्यक हुन्छ । अरूको बच्चाले गरेको सफलता देखेर आफ्नो बच्चाले पनि त्यस्तै सफलता प्राप्त गरोस् र त्यस्तै होस्, भन्ने चाहना

सबैको हुन्छ र हुनु स्वभाविक हो। यस्ता कुरामा अभिभावकले विचार गर्नुपर्ने कुरा अरूले के गऱ्यो भन्दापनि आफ्नो बच्चाको रूची र क्षमतालाई चिनेर उनीहरूको व्यक्तित्व विकासमा सहयोग पुग्ने मार्ग निर्देशन गर्नुपर्छ । उनीहरूमा आफ्ना अनावश्यक बोझ थप्नु हुदैन । रूचीलाई नचिनेर गरिने अपेक्षापूर्ण व्यवहारले बच्चाको मानसिक अवस्थामा प्रतिकूल प्रभाव पर्दछ। बच्चाहरूलाई राम्रो शिक्षा र संस्कार दिनु अभिभावकको प्रमुख दायित्व हो। कतिपय अभिभावकहरू बच्चाहरूलाई राम्रो विद्यालयमा पढाएर शुल्क बुझाएपछि आफ्नो दायित्व पूरा भएको सम्झनछन्। यो मात्र अभिभावकको कर्तव्य होइन बच्चाहरूको चौतर्फी विकासमा ध्यान पुऱ्याउनु अभिभावकका प्रमुख दायित्व हो । यसमा बाबुआमाको आ-आफ्नै भूमिका रहेको हुन्छ।

सामाजिक परिवेश र वातावरण, साथिसङ्गीको सङ्तले पनि बच्चाहरूको व्यक्तित्व विकासमा प्रभाव पार्दछ। बच्चाहरूले के गर्दैछन्, कस्ता कस्ता साथीहरूको सङ्गत छ, साथीहरू को को हुन् ? जस्ता गतिविधिको बारेमा आभिभावक जानकार हुनुपर्दछ। किशोरावस्थामा प्रवेश गरेपछि उनीहरूलाई पूर्ण विश्वास गर्नु हुदैन। उनीहरूको बारेमा राम्ररी बुझेर सङ्गत राम्रो छैन र गलत बाटो अपनाउन लागेका भए तुरून्तै सचेत गराउनुपर्छ । यदि वेवास्ता गरियो भने बच्चाको लागि हानिकारक र अभिभावकको लागि पीडादायक अवस्था बन्दछ। बच्चाहरू आफ्नो नियन्त्रण बाहिर गए भने पश्चाताप गर्नु बाहेक अरू उपाय हुदैन। यस्तो अवस्था आएमा कठोर बाटो अपनाउँदा प्रतिकूल प्रभाव पनि पर्न सक्ने हुँदा कठोरभन्दा पनि संमयमित भएर प्रेमपूर्ण व्यवहार र मनोविज्ञान बुझेर समाधानको बाटो अपनाउनु पर्दछ । बच्चाहरू घरपरिवारभन्दा टाढा अध्ययनको सिलसिलामा बसेका छन् भने अभिभावक अझ बढी सचेत रहनुपर्दछ। घरभन्दा बाहिरको परिवेश रहदा किशोरावस्थाको समयमा बच्चाहरूमा धेरै समस्या देखिएको पाइन्छ। साथीहरूको सङ्गत तथा बढ्दो सामाजिक सञ्जालको प्रयोगले गर्दा बच्चाहरू लागुपदार्थ दुर्व्यसनको तथा मानसिक रोगको शिकार बन्नुको साथै लक्ष्यबाट विचलित हुन पुगेको पाइन्छ। बच्चाहरूलाई सुविधा दिएर राम्रो नतिजा आउन सक्दैन उनीहरूलाई समय र संस्कार दिनु पर्दछ। प्राय जसो बालबालिकाहरू आफ्ना अभिभावकसँग सबै कुराहरू सजिलै सम्प्रेषण गर्न सक्दैनन् जस्को कारण उनीहरू व्यर्थै झमेला झेली रहेका हुन्छन्। यसले उनीहरूको पढाइ र स्वास्थ्यमा प्रतिकूल असर पर्दछ। अभिभावकले बच्चाहरूको भावना र मनोविज्ञान बुझेर पढाइ र परीक्षाको परिणाम मात्र नहेरी यसको साथमा बच्चाको व्यक्तित्व विकासको लागि चरित्र निर्माणतिर पनि ध्यान दिनुपर्दछ।

वर्तमानले नै बालबालिकाको भविष्य निर्धारण गर्ने हुँदा सिर्जनात्मकता तथा ऊर्जाशील क्षमतालाई सकारात्मक सोचाइका साथ सत्मार्गमा लाग्ने प्रेरणा जाग्ने वातावरण बनाइ दिनुपर्दछ। आजको युग विज्ञान प्रविधिको युग हो यसबाट विश्व नै अलग रहन सक्दैन। मोबाइल इन्टरनेट बालबालिकाका साथी जस्तै भएका छन्। यसको सद्उपयोग गरे वरदान साबित हुन्छ भने दुरउपयोग गरे अभिशाप बन्न पनि सक्छ। त्यसैले बालबालिकाले यसको उपयोग गरेका छन् वा दुरउपयोग गरेका छन् भन्ने कुरामा अभिभावकले ख्याल गर्नुपर्छ। बच्चालाई आफ्ना धर्म संस्कार रीति रिवाजको बारेमा जानकारी दिनु उपयुक्त हुन्छ। जति पढेपनि संस्कारी बन्न सकेनन् भने पढाईको कुनै अर्थ रहदैन त्यसैले अभिभावकले आफ्नो बच्चालाई विवेकशील, संस्कारी, सभ्य, शिष्ट र मर्यादित बन्न सहि दिशा निर्देशन गर्नुपर्छ। उनीहरूलाई समय समयमा रचनात्मक क्रियाकलापमा अगाडि बढ्न प्रोत्साहित गर्नुपर्दछ। उनीहरूको रूची क्षमता हेरेर खेलकुद, कला, साहित्य आदि रूचिअनुसारको क्षेत्रमा सहभागी हुन हौसला प्रदान गर्नुपर्दछ। जसले गर्दा उनी करले नभई आफ्नो रूचीअनुसारको नयाँ नयाँ कार्य गर्नमा अगाडि बढून्।

बाल्यकाल र किशोरावस्था ज्यादै संवेदनशील समय हो। यस समयलाई काँचो माटो र कोरा कागजसँग तुलना गरेको पाइन्छ। जसरी काँचो माटोलाई जुनसुकै आकार दिन

र कोरा कागजमा जस्तो पनि चित्र कोर्न सकिन्छ त्यसरी नै यो अवस्थाका बच्चालाई जस्तो संस्कार दिईन्छ, त्यो नै उनीहरूको व्यक्तित्व विकासको आधार बन्छ। बच्चाहरूको यो समय ज्यादै संवेदनशील समय हो । यस समयमा अभिभावकले उनीहरूको संवेदनशीलतालाई बुझेर काम गर्नुपर्दछ । कडा अनुशासन कठोरता अपनाउनुभन्दा पनि साथीको व्यवहार गरेर जीवन जिउने कलाको बोध गराउनुपर्छ। उनीहरू आफ्नो भविष्यलाई सही दिशामा अगाडि बढन् जीवनलाई सार्थकताको बाटोमा अगाडि बढ्न प्रेरित होऊन् । यसो भएमा अभिभावकलाई सन्तुष्टि मिल्नुको साथै बालकको असल व्यक्तित्वको विकासले गर्दा अभिभावकको भूमिकाले सार्थकता प्राप्त गर्दछ।

---

# प्रदेशिएको छोरो



**विजय पाण्डे**
कक्षा : १२ जी

म रुँदा रुँदै तिमिलाई हराउँन खोजेको हुँ
आमाको च्यापिएको चोली सिलाउन खोजेको हुँ ॥
मेरो घरको अवस्था र परिस्थिति देखेर
म घरको एक्लो छोरो पनि प्रदेशीन खोजेको हुँ ॥॥

हिजो आज आज भोलि म हिड्नै पर्छ
समय सँग सँगै म चल्नै पर्छ ॥
आमाको माया र बुबाको परिश्रम देखेंर
म प्रदेशिएको छोरो एक दिन घर फर्किनै पर्छ ॥

आमा म प्रदेशिएको छोरोलाई तिम्रो यादले सताउने गर्छ
हाम्रो गरिबी देखेर हेप्नेलाई एकदिन सफलताले देखाउन पर्छ ॥
माफी छ आमा तिम्रो छोरोलाई नि थाहा छैन
म आफू आफै फर्किने होकि मलाई बाकसमा फर्काउनु पर्छ ॥

# केही मुक्तकहरू



**सुनिल खनाल**
कक्षा : १२ (विज्ञान डी)

बिहानी हो यो भरे भोलि फल पाइन्छ
कर्ममा अगाडि सरे भोलि फल पाइन्छ।

भविष्यको आधार हो विद्यार्थी जीवन
आज मेहनत गरे भोलि फल पाइन्छ।

भगवान् बिना मन्दिरको इज्जत हुँदैन
विना ज्ञानको ठाडो शिरको इज्जत हुँदैन।

त्यो के विद्यार्थी ? जसमा अनुशासन छैन
जसरी कपडा बिना शरीरको इज्जत हुँदैन।

कि हाँसो कि रोदनलाई जीवन भनिन्छ
संघर्षबीचको उल्झनलाई जीवन भनिन्छ।

मिलाउन जान्नुपर्छ जिन्दगीको समीकरण
सुख दुःखको संयोजनलाई जीवन भनिन्छ।

भाषा पढ्ने भिसा लिने सोच मेरो छैन
पैसामा जिन्दगी खर्चिने सोच मेरो छैन।

हजारमै पनि सन्तुष्ट छु देशमै बसेर
लाखको लागि विदेशीने सोच मेरो छैन।

# बैठक सञ्चालन र माइन्युट लेखन कसरी गर्ने ?



● अधिवक्ता दामोदर घिमिरे, शिक्षक

बैठक सम्बन्धमा प्राय हामी जानकार नै छौं। बैठक हाम्रा लागि अपरिचित विषय होइन। सामान्यतया बैठक कुनै निर्णय लिन बसिन्छ। बैठकका निर्णय पुस्तिकामा उतार गरिन्छ भने बैठकबाट गरिने निर्णय कार्यान्वयनका लागि बाध्यात्मक नै हुन्छ। सुन्दा सरल, सहज अनि सजिलो ठानिने बैठक सञ्चालन र माइन्युट लेखन जव आफूलाई आईपर्छ परी पुऱ्याउन सकस नै हुन्छ। यिनै सरल र सहज ठानिने तर हाम्रो जीवनकालमा निरन्तर अभ्यास गर्न परिरहने यी विषयमा सामान्य सैद्धान्तिक र व्यवहारिक हिसावले सहजता होस भन्ने हेतुले यो लेख पस्कने जमर्को गरिएको हो।

**बैठक (Meeting)**

दुई वा दुई भन्दा बढी व्यक्ति र पदाधिकारी वा समूहबिच निश्चित विषय वा उद्देश्यमा केन्द्रित रहेर पूर्वनिर्धारित समय र स्थानमा वा आकस्मिक रुपमा गरिने औपचारिक भेटघाट तथा छलफल मिटिङ्ग वा बैठक हो। वैठक लिखित वा अलिखित हुन्छ। छलफलको सार लेखन माइन्युट हो। अथवा दुई वा दुईभन्दा बढी व्यक्ति एकसाथ बसेर कुनै व्यवसाय वा विषयसँग सम्बन्धित भएर छलफल गरी अन्तमा निर्णय लिनुलाई नै बैठक भनिन्छ।

बैठक व्यवसाय र अन्य संघ संगठनहरूका लागि एक साझा प्रक्रिया हो। बैठक विचार र सुझावहरू प्राप्त गर्न र जिम्मेवारीको प्रबन्ध गर्नको लागि महत्वपूर्ण माध्यमको रूपमा लिने गरिन्छ। यदि बैठकहरू समयमै र प्रभावकारी रूपमा व्यवस्थित भएनन र लिइएका निर्णयहरू प्रभावकारीताका साथ कार्यान्वयन भएन भने यसले समस्या पैदा गर्छ। तसर्थ, बैठकमा भाग लिनेहरुले बैठकका प्रक्रियाहरू राम्ररी बुझ्नु अत्यन्त आवश्यक छ।

हामी बैठकलाई एक विशेष एजेन्डामा केन्द्रित छलफल भनेर पनि परिभाषित गर्न सक्छौं। यो परिभाषाले यो स्पष्ट पार्छ कि बैठक एक लक्ष्यविहीन कुराकानी होइन तर यसको लागि सवल योजना चाहिन्छ। बैठक संस्थाको सजिलो र सहज सञ्चालनमा सहयोगी हुन्छ। यसले संस्थाका सदस्यहरूलाई आमनेसामने वार्ता र विचारहरूको प्रत्यक्ष आदानप्रदानको अवसर समेत प्रदान गर्दछ।

**बैठकका उद्देश्यहरू (Objectives of Meeting)**

बैठकहरू निम्न उद्देश्यका लागि आयोजना गर्नुपर्छ :

- फोन वा पत्रबाट मात्र समस्याको गहनतामा पुगी उद्देश्य पूरा हुँदैन,
- धेरै पदाधिकारी वा संस्था एकै स्थानमा बसेर छलफल गर्नुपर्दा,
- सदस्यहरूलाई पहिले नै तयार योजना वा सम्पन्न कार्य बारे निर्देशन दिन,
- छलफल गरी विशेष कार्यको व्यवस्था मिलाउन,
- कुनै विशेष क्षेत्रमा भएको प्रगति समीक्षा गर्न,
- संस्थासँग सम्बन्धित विषयहरूमा जानकारीको आदानप्रदान गर्न,
- कुनै पनि प्रकारको कारबाही वा प्रमुख निर्णयहरू लिन,

- विचार प्राप्त गर्न र नयाँ विचार प्रदान गर्न,
- विवाद, असमझदारी र असहमतिहरू समाधान गर्न,
- व्यापक रुपमा स्वीकार्य हुने निर्णय लिन,
- विद्यमान नीति र कार्यविधि परिवर्तन गर्न,
- कर्मचारीहरूमा उत्साह र सकारात्मक मनोवृत्तिलाई प्रोत्साहित गर्न,
- लिखित निर्णय आवश्यकता परेर,
- एकआपसमा परिचय गर्न र आत्मियता बढाउन,
- कुनै लेनदेन गर्ने सम्बन्धमा निर्णय गर्न,
- कानुन बमोजिम नियमित बैठकहरु गर्नुपर्ने भएर,
- जटिल विषयमा निर्णय निर्माण गर्न आदि ।

**बैठकका प्रकार (Types of Meeting)**

बैठकका प्रकार बिभिन्न छन् । समय, परस्थिति, आवश्यकता, औचित्य, अवस्था, कानुनी प्रावधान आदिका आधारमा बैठकका विधि तय हुन्छन् । जुन प्रकारको बैठक भएपनि त्यसले कानुनी बैधता प्राप्त गनुपर्छ । बैठकले कानुनी हैसियत प्राप्त गर्न नसकेमा बैठकको औचित्य रहदैन । अहिलेको विश्वमा मुख्यतया प्रचलित रहेका केही मुख्य मुख्य बैठकका प्रकारलाई निम्नानुसार वर्गीकरण गर्न सकिन्छ ।

**नियमित वा आकस्मिक वा विशेष (Regular and Special Meeting)**

नियमित बैठक भन्नाले संस्था वा संगठनको विधान बमोजिम तोकिएको विषयमा छलफल गरी निर्णय लिन बसिने बैठकलाई नियमित र नियमित बाहेक अपर्झट बसिने बैठकलाई आकस्मिक बैठक भनिन्छ ।

**औपचारिक वा अनौपचारिक (Formal and Informal Meeting)**

औपचारिक बैठक भन्नाले नियमित बैठकको साथसाथै बैठकको पूर्व सूचना दिई छलफलका विषय, स्थान, समय तोकि अध्यक्षता संचालन सहित बसेको बैठक हो । औपचारिकता पूरा नगरी बसिएको बैठक अनौपचारिक बैठक हो । यी दुबै खालका बैठक प्रचलनमा रहेको पाइन्छन् ।

**सार्वजनिक बैठक (Public Meeting)**

बैठकका प्रकारहरुमध्ये सार्वजनिक बैठकको पनि छुट्टै महत्व छ । यस अन्तंगत त्यस्ता बैठकहरु पर्दछन् जसमा सामान्यतया आम नागरिक उपस्थित हुन्छन् । जसको उद्देश्य नवीनतम बिषयमा जानकारी दिन वा केही उन्नत सिद्धान्त वा सार्वजनिक चासोका विषयहरूको जानकारी दिनु रहन्छ । यी बैठकहरू आम मानिसहरूका लागि खुला हुन्छन् र सार्वजनिक स्थानहरू जस्तै पार्क, खुलाचौर, रङ्गशाला वा सभाहलहरू आदिमा आयोजित हुन्छन् । यसको सामान्य जानकारी सामाजिक सञ्जाल, पत्रपत्रिका, रेडियो, माइकिङ वा पोस्टर आदि मार्फत दिइन्छ । सामान्यतया राजनीतिक सभा, नागरिक अभिनन्दन, चुनावी सभा, धर्म सभा आदि यस प्रकारका सभा अर्न्तगत राख्न सकिन्छ ।

**व्यावसायिक बैठक (Business Meeting)**

ती बैठकहरू हुन् जुन निजी निकाय वा संस्थाका व्यक्तिहरूद्धारा आयोजित हुन्छन् र जसमा निजी निकायहरूको व्यापार गतिविधिहरू सम्बन्धमा छलफल गरिन्छ । यस प्रकारको बैठकमा समितिका सदस्य वा सो संस्थाका आमन्त्रित व्यक्तिहरूले मात्र भाग लिन पाउछन् । व्यवसायिक बैठकहरू निम्न रूपमा वर्गीकृत गर्न सकिन्छ ।

(क) सामान्य वा साधारण सभा,
(ख) समिति वा उपसमितिको बैठक ।

**साधारण सभा (General Meeting)**

यस्ता बैठक सम्बन्धित निकाय वा संस्थाका सबै सदस्यहरूका लागि खुला हुन्छन् । त्यस्ता बैठकहरूमा संस्थाको सामान्य व्यावसायिक गतिविधिहरूका बारेमा छलफल गरिन्छ । यी बैठकहरू सामान्य (वार्षिक साधारण सभा) बैठकहरू वा असाधारण वा आपतकालीन वा विशेष (आकस्मिक वा आकस्मिक अवस्थामा) बैठकहरू हुन सक्छन् । सबै व्यावसायिक संघ, संस्था, संगठनहरूले वार्षिक साधारणसभा राख्नु अनिवार्य हुन्छ जसमा वार्षिक लेखा

प्रतिवेदन प्रस्तुत र पारित गरिन्छ, । विगतका गतिविधिहरूको समीक्षा गरिन्छ र भावी योजनाहरू अनुमोदन गरिन्छ। यस्ता सभामा सञ्चालक वा समितिका कार्यकारी सदस्यहरू (अध्यक्ष, उपाध्यक्ष, सचिव, लेखा संयोजक आदि) पनि निर्वाचित हुन्छन् । अत्यावश्यक प्रकृतिको विशेष अवस्था आवश्यक पर्दा विशेष बैठक बोलाइन्छ र बिशेष प्रकृतिका निर्णय लिने गरिन्छ।

**समिति वा उपसमितिको बैठक (Committee or Sub-Committee Meeting)**

यस्ता बैठकहरू हुन् जसमा सम्बन्धित सदस्यहरूलाई मात्र आमन्त्रित गरि बस्ने गरिन्छ। यसका उदाहरणहरूमा कार्यकारी बैठक, समितिको बैठक, सञ्चालक समितिको बैठक, उपसमिति वा विशेष समितिहरूको बैठकहरू लिन सकिन्छ।

**स्ट्यान्ड अप बैठक (Stand Up Meeting)**

स्ट्यान्ड अप बैठक भनेको परियोजनामा हुने दैनिक समूह बैठक हो। यस प्रकारको बैठकमा सहभागीहरू एकीकृत भई खडा हुन्छन्। यस्तो खालको बैठक संक्षिप्त हुने गर्दछ। यस बैठकको खास उद्देश्य चलिरहेको परियोजनाहरूको प्रगतिमा द्रुत अपडेट प्रदान गर्न, कुनै पनि अवरोधहरू पहिचान गर्न र तिन मुख्य प्रश्नहरूको साथ अर्को चरणहरू समन्वय गर्नु हो।

- हिजो के गर्नुभयो ?
- आज के गर्ने योजना छ ?
- तपाईको काममा कुनै बाधा छ ?

यस्ता प्रश्नहरूले समूहलाई जटिल समस्या समाधान गर्नुको सट्टा एकताबद्ध र जवाफदेही राख्नमा ध्यान केन्द्रित गर्न मद्दत गर्दछ। त्यसकारण स्ट्यान्ड अप बैठकको अवधि सामान्यतया ५ देखि १५ मिनेट मात्र रहन्छ र बैठकका लागि कोठा आवश्यक पर्दैन।

**बैठक व्यवस्थापन (Meeting Management)**

बैठकको योजना तय, बैठकको तयारी, बैठक सञ्चालनदेखि बैठकको माइन्यूट लेखन तथा निर्णय कार्यान्वयनसम्मको समग्र प्रक्रियाको व्यवस्थापन बैठक व्यवस्थापन भित्र पर्दछ अर्थात बैठकको तयारीदेखि अन्त्यसम्म गर्नु पर्ने सम्पूर्ण कुराहरुको उचित व्यवस्थापन नै बैठक व्यवस्थापन हो।

बैठक मर्यादित र योजनाबद्ध हुनुपदर्छ । बैठक सञ्चालन गर्ने निश्चित विधिहरु हुन्छन् । बैठकका सहभागीहरुले आफ्ना कुराहरु पालैपालो राख्ने, सिलसिलाबद्ध, स्पष्ट र विषय केन्द्रित भएर छलफलमा भाग लिने जस्ता कुरा बैठक व्यवस्थापन शैली भित्र पर्दछन्।

**बैठकको तयारी गर्दा ध्यान राख्नु पर्ने विषय (Agendas to Keep in Mind While Preparing for the Meeting)**

***(क) छलफलका विषय निर्धारण (Determining Agenda for Discussion)***

- बैठकमा छलफल गर्ने विषयबस्तु र सहभागी हुनुपर्ने व्यक्तिको सम्बन्धमा संस्थाका अध्यक्ष र सचिवले सल्लाह गरी निर्धारण गर्ने।
- बैठकका विषयवस्तु तयार गर्दा विषयको गहनता र गाम्भिर्यताका आधारमा प्राथमिकिकरण गर्ने ।
- निर्धारित विषयवस्तु/प्रस्ताव किन राखिएको हो ? सो को उद्देश्य र औचित्य प्रष्ट पार्ने गरी बैठकको अध्यक्षता गर्ने व्यक्तिले पूर्व तयारी गर्ने ।
- आवश्यकता अनुसार कसैसंग परामर्श लिनुपर्ने भए बैठकपूर्व नै परामर्श लिने।
- एजेण्डा स्लाइडमा प्रस्तुत गर्ने भएमा स्लाइड तयारी गर्ने।
- छलफलमा उठेका विषयका नोट तयार गर्ने र निर्णय लेख्ने व्यक्तिको छनौट गर्ने।

***(ख) बैठकको मिति, समय र स्थान छनौट (Choose the Date, Time and Place of the Meeting)***

- परामर्शका आधारमा मिति निर्धारण गर्ने, सम्भव भए सम्म बैठकमा सहभागी हुने धेरैलाई अनुकूल पर्ने गरी समय र स्थान छनोट गर्ने ।
- स्थान छनोट गर्दा सम्भव भएसम्म वातानुकुलित, सबै सहभागी बस्न मिल्ने, अट्ने गरी कुर्ची, टेबल, पानी, शौचालय, आन्तरिक सजावट लगायतका विषयमा समेत ध्यान दिने ।
- सार्वजनिक बैठक भए सहभागिको पूर्व अनुमान गरी सोहि अनुसार बन्दोवस्ती गर्ने ।

***(ग) सहभागी (Participant)***

- बैठकका विषयवस्तु र संरचनात्मक प्रणाली भित्र रहेर बैठकका सहभागी निश्चित गर्ने र उनीहरुलाई प्रस्ताव, बैठक तालिका सहित पत्र, इमेल, म्यासेज, फोन आदिका माध्यमबाट सूचना सम्प्रेषण गर्ने ।
- विषयवस्तुका आधारमा विषय विज्ञलाई आमन्त्रण गर्नुपर्ने भएमा तयारीसहित उपस्थित हुन समयमै जानकारी गराउने ।

***(घ) सामग्री व्यवस्थापन (Material management)***

बैठकका लागि चाहिने व्यानर, साउण्ड सिस्टम, विद्युतिय सामग्री, माइन्युट, कलम, पेपर, बैठकको विषयसंग जोडिएका कागजपत्र लगायत आवश्यक सामग्री तथा औजारहरुको व्यवस्थापन गर्ने ।

***(ङ) बैठक तालिका (Meeting Schedule)***

- बैठकमा आवश्यकता अनुसार प्रमुख अतिथि, विषय अनुसारको वक्ता, बैठकमा सहभागीहरुको भूमिका सम्बन्धमा निश्चित गर्ने ।
- बैठकको प्रारम्भदेखि समापनसम्मको समग्र कामको सूचि तयार गर्ने ।
- बैठकलाई सकेसम्म पूर्व निर्धारित तालिका अनुसार सुभारम्भ र सम्पन्न गर्ने ।

***(च) बैठकको अनुशासन र विधि (Discipline and method of meeting)***

- बैठकमा सहभागीहरुले बैठक अवधिभर पालना गर्नुपर्ने अनुशासनका नियमहरु तयार गरी सहभागीलाई जानकारी गराउने ।
- गोपनियता आदि लगायतका विषयमा सहभागीलाई सूचित गराउने ।

**बैठकमा सहभागि हुँदा ध्यान दिनुपर्ने कुराहरु (Things to Consider While Participating in the Meeting)**

- निर्धारित समयमा बैठक स्थल पुग्ने ।
- बैठकको विषयवस्तुमा स्पष्टभई छोटो समयमा आफ्ना कुरा शिष्ट सरल ढंगले निर्धक्क राख्ने ।
- अघिल्लो बैठकको निर्णयको कार्यान्वयन अवस्थाबारे जानकारी लिने ।
- समस्या समाधानका लागि बोल्ने ।
- समस्या थुपार्न वा सृजना गर्न वा बोल्नका लागि नबोल्ने ।
- कम्प्यूटर मोबाइल लगाएतका साधन नचलाउने, ननिदाउने, अरुका कुरा सुन्ने, बैठकमा ध्यान दिएर सहभागी हुने ।
- बैठकका विषयको पूर्व तयारी गरेर आउने र उठेका विषयमा पक्षगत वा व्यक्तिको पहिचान वा हैसियतलाई सोचेर नबोल्ने ।
- बैठकमा पूरा समय बस्ने विचमै नहिड्ने ।
- बैठकमा निर्णय के भयो भन्ने जानकारी लिएर मात्र उठ्ने ।

**बैठक सञ्चालन (Conducting Meetings)**

- सम्बन्धित संस्थाको तोकिएको व्यक्तिले उक्त संस्थाको अध्यक्षलाई अध्यक्षता गर्न अनुरोध गर्ने ।
- आवश्यकता अनुसार (विशेष गरेर औपचारीक बैठकमा) प्रमुख अतिथि, अतिथि आसन ग्रहण गराउने ।

- आसन ग्रहण सकेसम्म छोटो छरीतो गराउने ।
- उपस्थितमा स्वागत र बैठकको उद्देश्य माथि छोटकरीमा प्रकाश पार्ने ।
- राष्ट्रिय गान र शहिदप्रति सम्मान प्रकट गर्ने ।
- बैठकको उद्घाटन गर्नु पर्ने भए प्रमुख अतिथिबाट गराउने ।
- अध्यक्षबाट प्रस्तावहरु बैठक समक्ष प्रस्तुत गर्ने र प्रस्ताव पारित गर्ने ।
- अघिलो बैठकले गरेका निर्णयको कार्यान्वयन अवस्थाका बारेमा संक्षिप्त प्रतिवेदन बैठक समक्ष प्रस्तुत गर्ने ।
- पारित भएका बैठकका प्रस्तावमा अध्यक्षबाट क्रमश छलफल चलाउने ।
- छलफलमा भाग लिने सहभागिहरुको समय तय गर्ने ।
- छलफलबाट आएको निर्ष्कषलाई टिपोट गरी माइन्युटमा अभिलेखन गर्ने ।

**बैठक समापन (Closing the Meeting)**

- बैठकको अन्त्यमा तोकिएका वक्ताहरुलाई समय प्रदान गर्ने ।
- बैठकका निर्णयहरु पढेर सुनाउने र कार्यान्वयनका लागि परिभाषित जिम्मेवारी प्रदान गर्ने ।
- उपस्थित सबैलाई धन्यवाद ज्ञापन गर्दै अध्यक्षबाट बैठक समापन गर्ने ।
- माइन्यूटमा तयार भएको निर्णय प्रमाणिकरण गर्ने ।
- आवश्यकता अनुसार निर्णय सार्वजनिकिकरण गर्ने ।

**निर्णय निर्माणमा बैठकको भूमिका (The Role of Meetings in Decision Making)**

- जटिल समस्याको समाधानमा उचित निर्णय लिन,
- उत्पादनमुखी र परिष्कृत निर्णय निर्माणका लागि,
- निर्णयमा व्यक्तिगत स्वार्थ हावी हुन नदिन,
- निर्णयकै कारण भविष्यमा निर्णयकर्तालाई हुनसक्ने हानी कम गर्न,
- कुशल निर्णय गरी स्वाभाविक खालका नीति नियम निर्माण गर्न र प्रभावकारी सेवा प्रवाह गर्न ।

**माइन्युट लेखन (Minute Writing)**

कुनै पनि विषयमा बैठक सञ्चालन भइसके पश्चात त्यसको प्रस्ताव, बैठकका छलफका निष्कर्ष, उपस्थित पदाधिकारीहरुको हस्ताक्षर विवरण सहितको लिखितम बैठकमा उपस्थित सम्पूर्ण व्यक्तिले प्रमाणित गरी पस्तिकामा अभिलेखाङ्कन गरिने लिखित अभिव्यक्ति नै माइन्यूट हो । माइन्युट अङ्ग्रेजी शब्द हो । यसलाई नेपालीमा निर्णय पुस्तिका भनिन्छ ।

कुनै पनि बैठकमा भएका छलफल पश्चात निश्केका निष्कर्षरुलाई निर्णय पुस्तिकामा लेख्नुपर्दछ । निर्णय गर्नुभन्दा पहिला खेस्रा तयार गरेर सबैलाई सुनाउनु पर्दछ र सबैको सहमतिमा मात्र माइन्यूटमा लेख्नु पर्दछ । यसो गर्दा माइन्यूट सफा र व्यवस्थित हुन्छ । निर्णय पुस्तिका लेखन विशेष गरी बैठक बसी गरिएका निर्णयहरुलाई कार्यान्वयन गर्न तथा निर्णय अभिलेखीकरण गर्ने उद्देश्यले लेख्ने गरिन्छ । प्राय कार्यालय वा संघ संस्थाका सचिवले निर्णय लेख्ने गर्छन् । निर्णय पुस्तिकामा उपस्थित सबै सदस्यहरुको दस्तखत हुनेहुँदा यसले प्रमाणको रुपमा पनि काम गरेको हुन्छ । बैठकमा भएको निर्णयमा कसैको चित्त नबुझेमा (असहमति) पनि लेख्न पाउँछ ।

**निर्णय किन ? (Why the Decision?)**

- वर्तमान र भविश्यका उद्देश्य तथा लक्ष्य हासिल गर्न ।
- साझा बुझाई कायम गर्न ।
- निर्णयमा स्वामित्व प्रदान गर्न ।
- कार्यान्वयनमा देखिन सक्ने जटिलता कम गर्न ।
- वैधानिकता प्राप्त गर्न ।

- भएका कामको अभिलेखिकरण/दस्तावेजीकरण गर्न गराउन।
- प्रणाली भित्र देखिएका द्वन्द्व व्यवस्थापन गर्न।

**निर्णय के हो ? (What is the decision?)**

- अधिकार प्राप्त अधिकारी वा पदाधिकारी वा समूह वा कमिटिका सदस्यहरुले प्राप्त अधिकारको प्रयोग गरी कुनै विषयवस्तु, प्रस्ताव, समस्या वा सवालका सम्बन्धमा लिखित रुपमा लिइएको निष्कर्ष नै निर्णय हो। अर्को शब्दमा भन्नु पर्दा कुनै काम गर्न वा नगर्नका लागि निकालिएको निष्कर्ष नै निर्णय हो।
- विशिष्ट परिस्थितिमा मौखिक रुपमा निर्णय लिइएको भएपनि त्यसको वैधानिकताका लागि पछि अनुमोदन गर्नुपर्ने हुन्छ।
- कुनै पनि समस्याको समाधानका लागि वा गर्नुपर्ने काम निश्चित गर्न विभिन्न विकल्पहरु मध्ये सबैभन्दा उपयुक्त, प्रभावकारी र कार्यान्वयन योग्य विकल्प छनोट गर्न निष्कर्षमा पुग्ने पद्वति निर्णय प्रक्रिया हो। अर्को शब्दमा भन्नुपर्दा समग्रमा गर्नुपर्ने कामको लागि सबैभन्दा उपयुक्त विकल्पको छनोट गर्ने विधि नै निर्णय प्रक्रिया हो।
- वर्तमान वा भविष्यका योजना सफल बनाउन, कार्यप्रक्रिया, कार्य वातावरण र कार्यशैलीमा एकरुपता ल्याउनका लागि अधिकार प्राप्त कमिटी, समिति, सञ्चालक वा व्यक्तिबाट निर्णय लिने गरिन्छ।

**निर्णय चरण (Decision Stage)**

१. विषयवस्तुको छनोट वा पहिचान,
२. सम्भावित विकल्पमाथी छलफल र अवस्थाको विश्लेषण,
३. कार्यान्वयन गर्न सकिने वैधानिक विकल्पको छनोट,
४. निर्णय कार्यान्वयन,
५. मूल्याङ्कन
६. पृष्ठपोषण।

**निर्णय लेख्दा ख्याल राख्नुपर्ने कुराहरु (Things to Keep in Mind While Writing a Decision)**

- बैठक संख्या, मिति, समय र स्थान, अध्यक्षता, उपस्थित सदस्य पदाधिकारीको नाम र हस्ताक्षर, अनुपस्थित सदस्य पदाधिकारीको नाम, प्रस्ताव तथा निर्णय उल्लेख गर्ने।
- प्रस्ताव, छलफल र निर्णयलाई क्रमबद्ध रुपमा उल्लेख गर्ने।
- निर्णय पुस्तिकामा औपचारिक भाषाको प्रयोग गर्ने।
- राज्यको कानुन र संस्थाको वैधानिक व्यवस्था अनुसार निर्णय गर्ने।
- तोकिएको प्रक्रिया पूरा गरेर गर्ने।
- कानुन आफूले गरेका पूर्व निर्णयसंग नबाभिने गरी गर्ने।
- छनोट गर्न खोजिएको विकल्प मध्ये तत्कालका लागि सबैभन्दा उत्तम विकल्प रोज्ने।
- लिन खोजिएको निर्णयले भविश्यमा गलत नजिर स्थापित नगरोस भन्ने विषयमा ध्यान दिने।
- कार्यान्वयन योग्य हो होइन र कार्यान्वयनको सामर्थ्य छ छैन भन्ने विषयमा ध्यान दिने।
- लाभ लागतको विश्लेषण गरेर मात्र निर्णय गर्ने।
- संस्थाकोको उद्देश्य, नीति, विधि र कार्यक्रमसंग मेल खाने गरी निर्णय लिने।
- निर्णय लेख्दा विचविचमा खाली ठाँउ नछोड्ने।
- निर्णय लेख्दा अनावश्यक केरमेट गर्न हुदैन, यदि केरमेट गर्नुपरेमा एकपटक मात्र तेर्सो धर्कोले काटेर त्यसको दायाँ बायाँ अध्यक्षले हस्ताक्षर गर्ने।
- निर्णय पुस्तिकामा टिपेक्स लगाएर मेट्ने वा गल्ती सच्याउने काम नगर्ने।
- निर्णय लेख्दा कालो मसि प्रयोग गर्ने।

**माइन्युट लेखन नमुना (Sample of Minute Writing)**

**नमुना-१**

## कालिका मानवज्ञान माध्यमिक विद्यालय

बुटवल उपमहानगरपालिका वडा नं. १०, रुपन्देही

लुम्बिनी प्रदेश

स्कुल व्यवस्थापन समितिको पूर्ण बैठक

बैठक संख्याः १५

मितिः

समयः

स्थानः

अध्यक्षताः

**उपस्थितिः**

| क्रम संख्या | नाम | पद | सम्पर्क नम्बर | हस्ताक्षर | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |
| ३. | | | | | |
| ४. | | | | | |
| ५. | | | | | |

**अतिथि**

| क्रम संख्या | नाम | पद | सम्पर्क नम्बर | हस्ताक्षर | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |

**आमन्त्रित**

| क्रम संख्या | नाम | पद | सम्पर्क नम्बर | हस्ताक्षर | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |
| ३. | | | | | |

**छलफलका प्रस्तावहरु**

१. ............. सम्बन्धमा।

२. ............. सम्बन्धमा।

३. ............. सम्बन्धमा।

**निर्णयहरु**

१. ................. गर्ने निर्णय गरियो।

२. ................. गर्ने निर्णय गरियो।

३. ................. गर्ने निर्णय गरियो।

**मनइन्युट प्रमाणित**

**नमुना-२**

आज मिति २०८० साल श्रावण महिनाको २१ गते आइतबार बिहानको ठिक ७:०० बजे कालिका मानवज्ञान मा. बि. बुटवलका अध्यक्ष श्री नित्यानन्द ज्ञवालीको अध्यक्षतामा कालिका मानवज्ञान मा.वि.को आ.व.०८०/८१ को लागि पारित बजेट कार्यान्वयन सम्बन्धमा छलफल गर्न व्यवस्थान समितिको सभा कक्षमा आयोजित बैठक निम्न सहभागीहरुको उपस्थितिमा निम्न बमोजिमको प्रस्तावहरुमा छलफल गरी निम्नानुसारका निर्णयहरु गरियो।

**उपस्थिति**

| क्रम संख्या | नाम | पद | सम्पर्क नम्बर | हस्ताक्षर | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |
| ३. | | | | | |
| ४. | | | | | |
| ५. | | | | | |

**छलफलका प्रस्तावहरु**

१. ............. सम्बन्धमा।

२. ............. सम्बन्धमा।

३. ............. सम्बन्धमा।

**निर्णयहरु**

१. ................. गर्ने निर्णय गरियो।

२. ................. गर्ने निर्णय गरियो।

३. ................. गर्ने निर्णय गरियो।

**मनइन्युट प्रमाणित**

# प्रारम्भिक शिक्षा र एकिकृत पाठ्यक्रमको अभ्यास, चुनौती र समाधान



● **गुणाखर भट्टराई**, इन्चार्ज, (कक्षा १-५)

नेपालको विद्यालय शिक्षा आधारभूत र माध्यमिक गरी दुई तहको रहेको छ। एक वर्ष अवधिको प्रारम्भिक बालबिकास र त्यसपछि कक्षा १ देखि कक्षा ८ सम्म ८ वर्षको आधारभूत शिक्षा कायम गरिएको छ भने कक्षा ९ देखि कक्षा १२ सम्मको ४ वर्ष माध्यमिक शिक्षा कायम गरिएको छ। माध्यमिक शिक्षा अन्तर्गत साधारण, परम्परागत र प्राविधिक तथा व्यवसायिक गरी तीन प्रकारको हुने प्रावधान गरिएको छ। माध्यमिक शिक्षाको प्रविधिक तथा व्यवसायिक धारतर्फ थप १ वर्ष अवधिको व्यवहारिक अभ्यास समेटिएको छ। बालमनोविज्ञान, सिकारुको उमेर तथा सिकाइ क्षमताको आधारमा विद्यालय शिक्षाको तहगत र कक्षागत संरचना निम्न बमोजिम हुने व्यवस्था गरिएको छ।

| विद्यालयको तह | कक्षा | उमेर समूह | सिकाइ क्षमतास्तर |
|---|---|---|---|
| प्रारम्भिक बालविकास तथा शिक्षा | प्रारम्भिक बालविकास तथा शिक्षा | ४ वर्ष | |
| आधारभूत | कक्षा १- ३ | ५ देखि ७ वर्षसम्म | तह १ |
| | कक्षा ४ - ५ | ८ देखि ९ वर्षसम्म | तह २ |
| | कक्षा ६ - ८ | १० देखि १२ वर्षसम्म | तह ३ |
| माध्यमिक | कक्षा ९ - १० | १३ देखि १४ वर्षसम्म | तह ४ |
| | कक्षा ११ - १२ | १५ देखि १६ वर्षसम्म | तह ५ |

**१. पुर्व प्राथमिक शिक्षा**

नेपालको मौजुदा शिक्षा ऐन २०२८ अनुसार पुर्व प्राथमिक शिक्षा अन्तर्गत ४ वर्ष उमेर पुगेका बालबालिकालाई १ वर्षको शिक्षा दिने विद्यालय पुर्व प्राथमिक शिक्षा अन्तर्गत पर्दछन। यसलाई प्रारम्भिक बालविकासको रुपममा पनि बुझिन्छ। राष्ट्रिय पाठ्यक्रम प्रारूप २०७६ अनुसार बालबालिकालाई सर्वाङ्गीण विकासका क्रियाकलापमा संलग्न गराउने, पोषणयुक्त खाना र स्वस्थकर बानी विकास गर्ने, वैयक्तिक सुरक्षाका उपायहरु अवलम्बन गर्न सिकाउने, सरसफाई र सामाजिक बानी व्यवहारको अवलम्बन गर्ने, सिर्जनात्मक सोचको विकास गर्ने, भाषिक तथा संचार सिपको बिकास गर्ने जस्ता सक्षमताहरु तोकेको छ। त्यसै गरी सिप विकासका दुई क्षेत्र आधारभूत सिप सिकाइका क्षेत्रका ६ वटा र बिषयगत सिप सिकाइका ४ वटा क्षेत्र गरी दुई क्षेत्रमा अलग-अलग सिपहरुलाई बार्षिक ५७६ कार्य घण्टा सहित मनोरञ्जन क्रियाकलाप , वाह्य खेल र आराम गर्ने समय कम्तिमा दैनिक १ घण्टाका दरले वर्षभरिमा २५६ घण्टासम्म बार्षिक कार्यघण्टामा थप हुने व्यवस्था गरेको छ। सिकाइ सहजीकरण प्रक्रिया संचालन गर्दा विद्यार्थी केन्द्रित र बालमैत्री शिक्षण विधि अपनाइ पढाइ लेखाइमा भन्दा पनि बालबालिकाहरुको समग्र विकास , स्याहार तथा सुरक्षामा जोड दिने गरी निरन्तर सिकाइलाइ प्राथमिकतामा राखिएको छ। प्रारम्भिक बालविकास र शिक्षाको पाठ्यक्रम बालबालिकाको उमेरगत बिकासात्मक पक्षलाई ध्यान दिई एकीकृत सिद्वान्त अनुसार विकास गरिएको छ। विद्यार्थी मूल्यांकनमा निर्णयात्मक पद्दतिभन्दा निर्माणात्मक मूल्यांकन पद्दतिका आधारमा

विद्यार्थीको सिकाइलाई प्रेरित गरी सिकाइका लागि आधारशिला खडा गर्नु यस शिक्षाको मूल उद्देश्य मानिएको छ।

**२. आधारभूत शिक्षा (कक्षा १-३)**

आधारभूत शिक्षा (कक्षा १-३) मा एकीकृत स्वरुपको पाठ्यक्रम कार्यान्वयनमा छ। सिकाइका क्षेत्रहरु (Themes) पहिचान गरी बिषय र सिकाइका क्षेत्रका आधारमा बहुविषयात्मक (Multidisciplinary) तथा अन्तरविषयक (Interdisciplinary) ढाँचामा पाठ्यक्रम आधारित रहेको छ। आधारभूत तह (कक्षा १-३) मा विद्यार्थीहरुलाई भाषा, गणित, विज्ञान, स्वास्थ्य र शारीरिक शिक्षा, सामाजिक अध्ययन, सिर्जनात्मक कला, मातृभाषा तथा स्थानीय विषयका सिकाइ क्षेत्रहरु तोकिएका छन्। पाठ्यक्रमको समग्र ढाँचामा सामाजिक अध्ययन , विज्ञान तथा वातावरण, स्वास्थ्य तथा शारीरिक शिक्षा र सिर्जनात्मक कला विषयलाई अन्तर विषयक (Interdisciplinary) ढाँचाको पाठ्यक्रमका रुपमा हाम्रो सेरोफेरो विषय क्षेत्रमा समावेश गरिएको छ भने हाम्रो सेरोफेरो, गणित , नेपाली भाषा, अंग्रेजी भाषा विषय क्षेत्रलाई समावेश गरी बहुबिषयक (Multidisciplinary) ढाँचा अन्तर्गत एकीकृत (Integrated) गरी तयार गरिएको छ। पठनपाठनको लागि खर्च भएको ३२ घण्टाको समय अवधिलाई १ पाठ्यघण्टा (1 Credit Hour) मानी वर्षभरिमा २६ पाठ्यघण्टा अर्थात ८३२ कार्यघण्टा (832 Working Hours) पठनपाठन गर्नुपर्ने व्यवस्था मिलाईएको छ। पाठ्यक्रमले एकीकृत सिद्दान्त अनुसार ७ वटा विषयगत सक्षमताका साथै जीवनोपयोगी व्यवहारकुशल सिपहरु (Soft skills) लाई समेत एकीकृत गरेको छ। व्यवहारकुशल सिप अन्तर्गत सोचाइ सिप, व्यैयक्तिक सिप, अन्तरवैयक्तिक सिप, सुचना प्रविधि तथा बहुसाक्षरता सिप र नागरिक सिपलाई सबै विषयसँग अन्तरसम्बन्धित गरी एकीकृत गरिएको छ। यस पाठ्यक्रमले घण्टीमा आधारित शिक्षण सिकाइ क्रियाकलापलाई कक्षागत (ग्रेड) शिक्षणमा रुपान्तरण गरिदिएको छ। एउटा शिक्षकले हरेक दिन ४ घण्टा २० मिनेट समय एउटा कक्षामा बिताउनु पर्नेछ।

**सकारात्मक पक्ष**

- पाठ्यक्रमलाई कक्षाकोठामा वास्तविक रुपमा कार्यान्वयन गर्दा विद्यार्थी सिकाइ उपलब्धि स्तरमा प्रभावकारिता देखिएको,
- कक्षा शिक्षण मार्फत शिक्षण गर्दा विद्यार्थीको रुचि, क्षमताको पहिचान गरी शिक्षण गर्न सहजता भएको र विविधताको सम्मान भएको,
- कमजोर स्तर र क्षमता भएका विद्यार्थीलाई प्रत्यक्ष लाभ भएको,
- निरन्तर मूल्याङ्कन माफर्त विद्यार्थीको स्तर निर्धारण गरिने हुँदा आवधिक परिक्षाको झन्झट नभएको,
- विद्यार्थी र शिक्षक वीच सुमधुर सम्बन्ध कायम भएको,
- अभिभावक र शिक्षक वीचको दुरी नजिकिएको,

**चुनौती**

हाल कार्यान्वयनमा रहेको प्रारम्भिक बालविकास शिक्षा र कक्षा १ देखि कक्षा ३ सम्मको एकिकृत पाठ्यक्रम प्रभावकारी कार्यान्वयन हुन सकेको छैन। केही औलामा गन्न सकिने विद्यालय बाहेक देशभरका सामुदायिक विद्यालयमा यसको कार्यान्वयन फितलो बनेको छ। शिक्षाको जग मानिने आधारभूत कक्षामा अगाडि सारिएको पाठ्यक्रम प्रभावकारी कार्यान्वयन नहुँदा यसको प्रत्यक्ष प्रभाव माथिल्लो कक्षामा देखिने निश्चत प्राय छ। मूलतः पाठ्यक्रम कार्यान्वयनमा देखिएका चुनौतीलाई निम्नानुसार औल्याउन सकिन्छः

**पाठ्यक्रम प्रवोधिकरण प्रभावकारी नहुनु**

पाठ्यक्रमले निर्दिष्ट गरेका शिक्षण सिकाइ कार्यकलाप विधि र मूल्याङ्कनलाई कक्षाकोठामा कार्यान्वयन गर्ने मुख्य जिम्मेवारी शिक्षकको हो। राष्ट्रिय पाठ्यक्रम २०७६ कार्यान्वयन गर्न कक्षाकोठामा खटिएका शिक्षकलाई समयमा पाठ्यक्रमको सान्दर्भिकताका बारेमा प्रवोधिकरण हुन सकेन। शिक्षा कार्यालयका कर्मचारी, विद्यालयका प्र.अ. एवम् माथिल्ला कक्षामा पठनपाठन गर्ने शिक्षकलाई सहभागी गराई पाठ्यक्रम प्रवोधिकरण गरियो। उनीहरुबाट तल्ला कक्षामा सिकाइ

सहजीकरण गर्ने शिक्षकलाई प्रभावकारी तालिमको व्यवस्था हुन सकेन। तालिम प्रदायक संस्थाबाट ढिलो गरी सिमित शिक्षकलाई तालिम सञ्चालन गरिएको भएतापनि त्यसको प्रभाकारिता कक्षाकोठासम्म पुग्न सकेन।

**फितलो शिक्षक व्यवस्थापन**

प्रारम्भिक बाल शिक्षामा सिकाइ सहजीकरण गर्ने शिक्षक देशभर करिव तीस हजारको संख्यामा रहेका छन्। यो शिक्षालाई विद्यालय संरचना भित्र समेटिएको छैन। सहयोगी कार्यकर्ता मार्फत कक्षामा सिकाइ सहजीकरण भएको छ। उनीहरुको तलव तथा सेवा सुविधा अत्यन्तै न्यून छ। अधिकाम्श सामुदायिक विद्यालयमा विद्यार्थी संख्याको आधारमा शिक्षक दरबन्दी छैन। यी कक्षाहरुमा कक्षा शिक्षणको माध्यमबाट शिक्षण गर्नु पर्नेमा परम्परागत शैलीमा विषय शिक्षण गरिएको छ। दरवन्दी विहिन शिक्षकामा पेसागत सुरक्षाको चिन्ता छ। यसको प्रत्यक्ष मनोवैज्ञानिक प्रभाव सिकाइ सहजीकरणमा परेको छ।

**बोझिलो पाठ्यक्रम र पाठ्यसामाग्री**

प्रारम्भिक बालशिक्षामा आवश्यक पाठ्यक्रम र पाठ्यसामग्रीको अभाव रहेको छ। स्थानीयस्तरमा पनि यसको निर्माणमा खासै चासो छैन। एकिकृत पाठ्यक्रमले निर्दिष्ट गरेका सक्षमता सरल भएता पनि यसको कार्यान्वयनमा अगाडि सारिएको स्रोत पुस्तिका, विधि र मूल्याङ्कन प्रणाली, लामो र झन्झटिलो भएको हुँदा सिकाइ सहजिकरणमा शिक्षकहरु उदासिन देखिएको अवस्था छ।

**विद्यार्थी संख्या र कक्षाकोठा व्यवस्थापन**

अधिकाम्श विद्यालयमा प्रारम्भिक बालकक्षामा प्रयाप्त विद्यार्थी संख्याको अभाव छ भने कक्षा १ देखि कक्षा ३ सम्म कतै न्यून विद्यार्थी संख्या त कतै विद्यार्थीको चाप अत्यधिक रहेको छ। विद्यार्थीको रुची र क्षमता पहिचान गरी बालमैत्री कक्षा शिक्षण गर्न एक जना शिक्षक बराबर प्रारम्भिक कक्षामा २० देखि २५ जना विद्यार्थी र कक्षा १ देखि तीन सम्म २५ देखि ३० जना विद्यार्थी उपयुक्त हुन्छ। यसको साथै रमणिय वातावरणसहितको आकर्षक कक्षाकोठा र सोही अनुसार बसाइ व्यवस्थापन गर्न मिल्ने भौतिक पूर्वाधारको व्यवस्थापनमा अभाव देखिन्छ।

**समस्याको समाधान**

आधारभूत शिक्षा अर्न्तगतका प्रारम्भिक बालशिक्षा र कक्षा १ देखि कक्षा ३ सम्म कार्यान्वयनमा रहेको एकिकृत पाठ्यक्रम कार्यढाँचा कार्यान्वयनमा देखिएका चुनौतीको समाधान गर्न निम्न उपाय अवलम्वन गर्न सकिन्छ :

- कक्षा शिक्षणमा सहभागी प्रत्येक शिक्षकलाई पाठ्यक्रम, पाठ्यकामाग्री, विधि र मूल्याङ्कन प्रणालीबारे स्पष्ट हुने गरी प्रभावकारी तालिमको आवश्यक छ।
- प्रारम्भिक वालशिक्षालाई विद्यालयको संरचनामा समेटी कार्यरत शिक्षकलाई दरबन्दीको व्यवस्था सहित पेसागत सुरक्षाको प्रत्याभूति दिलाइनु पर्छ।
- उनीहरुको तलव तथा सेवा सुविधालाई प्राथमिक शिक्षकसरह बनाइनुपर्छ।
- प्रतिकक्षा २० देखि २५ विद्यार्थी सख्याको आधारमा शिक्षक दरबन्दीको व्यवस्था मिलाइनु पर्छ।
- बालमैत्री कक्षाकोठाको मापदण्डका आधारमा कक्षाको भौतिक पूर्वाधार व्यवस्थापनमा जोड दिनु पर्छ।
- प्रारम्भिक बालशिक्षाको सहजीकरणका लागि स्थानीय पाठ्यक्रमको निर्माण गर्नुपर्छ।

  स्थानिय आवश्यकतालाई मध्यनजर गरी एकिकृत पाठ्यक्रमलाई समयानुकुल परिमार्जन गर्न जरुरी छ। यस अन्तर्गत पाठ्यपुस्तकमा समेटिएका अनावश्यक पाठसंख्या घटाइ आकर्षक र छरितो बनाइनुपर्छ। पाठ्यपुस्तक केन्द्रित शिक्षणलाई निरुत्साहन गर्न शिक्षकलाई आवश्यक पर्ने सन्दर्भ सामग्रीको व्यवस्था मिलाइनु पर्छ।
- पाठ्यक्रम कार्यान्वयनमा विद्यालय, समाज र अभिभावकले एकिकृत योजना निर्माण गर्नुपर्छ।

- प्रारम्भिक कक्षामा सिकाइ सहजीकरण गर्ने कार्य चुनौती पूर्ण रहेको छ। शिक्षाको औपचारिक सुरुवात हुने कक्षामा अध्याापन गर्ने शिक्षकलाई आवश्यकिय सहयोगका लागि सम्बन्धित निकायबाट पृष्ठपोषणसहितको निरन्तर अनुगमन जरुरी छ।

**कालिका मानावाज्ञान मा. वि. मा एकीकृत पाठ्यक्रमको अभ्यास**

देशभरका अधिकाम्श विद्यालयमा एकीकृत पाठ्यक्रमको व्यावहारिक कार्यान्वयनमा झन्झटिलो भन्ने गुनासो सुनिएको भएता पनि कालिका मनावज्ञान मा.वि. बुटवलले यसको प्रभावकारी कार्यान्वयन गर्दै आएको छ। माथि उल्लेखित चुनौतीको समाधानसहित बालविकास शिक्षादेखि कक्षा ३ सम्म संचालनमा रहेका २० वटा कक्षामा करिव ७६० बिद्यार्थीलाई कक्षा शिक्षणको माध्यमबाट सिकाइ सहजीकरण गरिएको छ। शैक्षिक बर्षको शुरुवाती चरणमा कक्षा ३ सम्म सिकाइ सहजिकरण गर्ने सम्पूर्ण शिक्षकलाई ३ दिने एकीकृत पाठ्यक्रम कार्यान्वयन कार्यढाँचा सम्बन्धी कार्यशाला संचालन गरी शिक्षकहरुलाई आवश्यक पर्ने शिक्षक निर्देशिका, कार्यपुस्तक , विद्यार्थी सिकाइ उपलब्धी मुल्यांकन अभिलेख पुस्तिका, विद्यार्थी संचित अभिलेखको लागि आवश्यक फाइल लगायत कक्षा सजावटको लागि आवश्यक पर्ने सामाग्री उपलब्ध गराई प्रविधियुक्त रमणीय कक्षा कोठामा विद्यार्थी सिकाइ सहजीकरण गर्ने वातावरण मिलाइएको हुँदा पाठ्यक्रमले अपेक्षा गरे बमोजिम शिक्षकहरु खुशीका साथ आफ्नो जिम्मेवारीमा निरन्तर खटिनु भएको छ । कक्षा शिक्षण गर्ने शिक्षकलाई विद्यालयले खाजा सहित थप प्रोत्साहनको व्यवस्था मिलाएको छ। विद्यालय प्रशासन र सम्बन्धित तहमा तोकिएका इन्चार्जबाट निरन्तर रुपमा शिक्षकहरुलाई सिकाइ वातावरणमा आइपर्ने समस्यामा सहयोगी भूमिका खेल्ने वातावरण मिलाइएको छ। निरन्तर पृष्ठपोषणको जगमा यहाँका कक्षाहरु प्रभावकारी रुपमा संचालन भएका छन्। यसले विद्यार्थीहरुमा पठन तथा लेखन सिपमा उल्लेख्य सुधार आएको छ। शिक्षक विद्यार्थी सम्बन्ध सुमधुर बनेको छ। यहाँ शिक्षकबाट विद्यार्थीलाई आदरार्थी शब्दको प्रयोग हुन्छ। विद्यार्थी-विद्यार्थी वीचमा पनि आदरार्थी शब्दको प्रयोग र सम्बोधन हुने गर्छ । विद्यालय व्यवस्थापन समितिका अध्यक्ष, शिक्षक अभिभावक संघका अध्यक्ष, विद्यालयका प्र.अ. र शिक्षकरुको उपस्थितिमा वृहत अभिभावक भेला तथा अन्तरक्रिया गरी सुझाव संकलन गर्ने कार्य सम्पन्न भएको छ । यहाँ गरिएका क्रियाकलाप र शिक्षकका व्यवहारबाट अभिभावक सन्तुष्ट हुनुहुन्छ। विद्यार्थीहरुमा उमेर अनुसार आवश्यक व्यवहारकुशल सिपहरु हासिल हुँदै गएका छन् । विद्यार्थीको रुची र क्षमता अनुसार उनीहरु भित्रका विविधता पहिचान गरी सिकाइ गर्दा विद्यार्थी सिकाइ उपलब्धी स्तरमा थप सफलता हासिल भएको छ ।

अन्त्यमा शिक्षाको जगलाई बलियो बनाउन प्रारम्भिक बालविकासमाफर्त बालनोविज्ञानमा शिक्षाको सकारात्मक बिउ रोपी बालबालिकाको रुची, क्षमता र विविधताको पहिचान सहित बालमैत्री कक्षाकोठाको व्यवस्थापन र सिकाइ सहजीकरणमा आवश्यक सामग्रीसहित जनशक्ति परिचालनको लागि विना हिचकिचाहट प्रयाप्त लगानी गर्न सकेमा प्रारम्भिक कक्षाहरुको लागि अगाडि सारिएको एकिकृत पाठ्यक्रमको वास्तविक कार्यान्वयन हुने र यसको प्रभावकारीता भविष्यमा यसको जगमा उभिएको शैक्षिक जनशक्ति मार्फत देखिने छ। अन्यथा परम्पराको निरन्तरता बाहेक अरु हात लाग्ने छैन। बरु उल्टो शिक्षामा लगानी वालुवामा पानी सरह हुने निश्चित छ जसका लक्षणहरु देखा पर्न थालेका छन्।

**सन्दर्भ सूची**

आधारभूत तह (कक्षा १-३) को पाठ्यक्रम-२०७६

आचार्य, पदमराज (२०७८) प्राथमिक शिक्षक दिग्दर्शन , काठमाडौं : पैरवी प्रकाशन अधिकारी, विष्णुप्रसाद (२०७८) प्राथमिक तह शिक्षक स्रोत सामग्री , आशिष बुक्स हाउस प्रा.लि., बागबजार, काठमाडौं ।

# नेपालमा लेटर ग्रेडिङ पद्धति



● **नरेन्द्र पौडेल**, परीक्षा संयोजक (१-१०)

कुनै पनि विद्यालयमा कुनै शिक्षकले आफ्नो कक्षामा अध्यापन गराइसकेपछि उनीहरुले पाठ्यक्रमले तोकेका उदेश्यको बारेमा के कति बुझे ? शिक्षकले के कति बुझाउन सफल भइयो ? अब विद्यार्थीले कति बुझ्न बाँकी छ जस्ता पक्षहरु पत्ता लगाउन मूल्याङ्कन गर्नुपर्दछ। शिक्षण सिकाई क्रियाकलापमा विद्यार्थीले कुनै हदसम्म शैक्षिक उद्देश्य हासिल गरे भन्ने कुराको निर्धारण गर्ने लेखाजोखा गर्ने प्रक्रियालाई मूल्याङ्कन भनिन्छ। मूल्याङ्कनबाट नै विद्यालय, विद्यार्थीको स्तर नाप्न वा पत्ता लगाउन सकिन्छ। मूल्याङ्कनबाट शिक्षण सिकाई क्रियाकलापको प्रभावकारीता पत्ता लगाउन सकिन्छ। साथै विद्यार्थीले कुन विषयवस्तुलाई राम्रोसँग बुझे र कुन बुझ्न बाँकी छ सोको स्थितिको बारेमा मूल्याङ्कनबाट पत्ता लगाउन सकिन्छ। मूल्याङ्कनले विद्यार्थीको स्तरमात्र पत्ता नलगाई शिक्षक, विद्यालय साथै समग्र शिक्षा नीतिको मापन गर्दछ। जसबाट शैक्षिक योजना, संगठन तथा कार्यान्वयन पक्षलाई सहयोग पुऱ्याउछ। विद्यार्थी मूल्याङ्कनले विद्यार्थी उपलब्धि सम्बन्धी तथ्याङ्क संकलन गर्ने, व्याख्या गर्ने, अभिलेखीकरण गर्ने, विश्लेषण गर्ने र प्राप्त सूचनाका आधारमा सिकाइमा आवश्यक पृष्ठपोषण प्राप्त गरी सिकाइको पुनर्योजना गर्ने कार्यमा सहयोग गर्दछ। त्यसै गरी विद्यार्थी उपलब्धि सम्बन्ध नतिजाका आधारमा विद्यार्थीको सिकाइस्तर प्रमाणित गर्ने कार्य पनि मूल्याङ्कन प्रणालीलाई परीक्षामा सीमित नगरी यसलाई शिक्षण सिकाइ सहजीकरण प्रक्रियाको रुपमा परिमार्जन गर्दै लानु पर्ने देखिन्छ। गृहकार्य, कक्षा कार्य, प्रयोगात्मक कार्य, परियोजना कार्य, प्रस्तुतीकरण, अतिरिक्त क्रियाकलाप, सामूहिक क्रियाकलाप आदिलाई मूल्याङ्कनमा समावेश गरी विद्यालयको मूल्याङ्कनलाई अझ बढि प्रभावकारी बनाउन सकिन्छ। मूल्याङ्कलाई निर्माणात्मक र निर्णयात्मक गरी २ भागमा बाँड्न सकिन्छ।

प्रत्येक पाठ वा एकाइको अध्ययन पश्चात् विद्यार्थीहरुको निरन्तर रुपमा लेखाजोखा उपलब्ध गरी पठन पाठनमा सुधार गर्न र निरन्तर प्रगतिको लेखाजोखा गर्न, पृष्ठपोषण उपलब्ध गराउन शैक्षिक सत्रको बीचमा गरिने मूल्याङ्कन निर्माणात्मक वा सुधारात्मक मूल्याङ्कन हो। जसबाट विद्यार्थीले कस्तो प्रगति गर्दैछ, विद्यार्थीको शैक्षिक स्तर कस्तो छ ? र कसरी अझै प्रभावकारी शिक्षण सिकाई गर्न सकिन्छ भन्ने पत्ता लगाई योजना बनाउन सकिन्छ।

शैक्षिक सत्रको वा कार्यक्रमको अन्त्यमा विद्यार्थीहरुले प्राप्त गरेको उपलब्धिको आधारमा कक्षा वृद्धि गर्ने आवश्यक योग्यता पूरा गऱ्यो कि गरेन भनेर लेखाजोखा गरिने मूल्याङ्कनलाई निर्णायात्मक मूल्याङ्कन भनिन्छ।

राष्ट्रिय शिक्षा नीति २०७६ ले विद्यालय शिक्षामा निर्माणात्मक तथा निर्णयात्मक मूल्याङ्कन प्रणालीको पुनरावलोकन गरी सुधार गर्ने कुरा उल्लेख गरेको छ। विद्यालय शिक्षाको राष्ट्रिय पाठ्यक्रम प्रारुप २०७६ ले विद्यार्थी मूल्याङ्कन, प्रमाणीकरण, समकक्षता तथा राष्ट्रिय योग्यता प्रारुपसम्बन्धी कार्यलाई व्यवस्थित र प्रभावकारी बनाउनु पर्ने आवश्यकतालाई दृष्टिगत गरी विद्यार्थी मूल्याङ्कन प्रक्रियामा परिमार्जनको प्रस्ताव गरेको छ।

नेपालमा विद्यालय तहमा विद्यार्थी उपलब्धिको मापन तथा मूल्याङ्कनका लागि अक्षराङ्कन पद्दति (Letter Grading System) बारे अवधारणागत एकरुपता,

कार्यान्वयनमा सहजता र स्पष्टता प्रदान गर्न विद्यमान अङ्क प्रणालीका सट्टामा वि.स.२०७१ मा S.L.C. परीक्षामा प्राविधिक तथा व्यावसायिक धारतर्फ परीक्षण रुपमा र २०७२ देखि साधारण, प्राविधिक तथा व्यवसायिक र संस्कृत धारको एस.एल.सी.परीक्षामा समेत अक्षराङकन पद्दति लागु भयो। यसमा परीक्षार्थीले प्राप्त गरेको अङ्कलाई ९ वर्गान्तरमा श्रेणीकरण गरी विषयगत अक्षराङ्कन A+, A, B+, B, C+, C, D+, D र E सहित स्तरीकृत अङ्क तथा औसत स्तरीकृत अङ्क (GPA) उल्लेख भएको प्रमाण गर्न जारी गर्न सुरु गरियो। यसै अनुसार २०७४ मा कक्षा ११ र २०७५ मा कक्षा १२ मा ९ वर्गान्तर युक्त अक्षराङ्कन पद्धति लागु गरिएको थियो।

लेटर ग्रेडिङ पद्धति, २०७८ ले विद्यालय तहका पाठ्यक्रममा स्तरीकृत अङ्क र अक्षरमा उपलब्धि स्तर निर्धारण गर्ने निम्नानुसारका तरिका उल्लेख गरेको छ :

| क्र.सं. | उपलब्धि प्रतिशत | स्तरीकृत अङ्क | अक्षरमा उपलब्धिस्तर | उपलब्धि स्तरको व्याख्या |
|---|---|---|---|---|
| १ | ९० र सोभन्दा माथि | ४.० | A˙ | सर्वोत्तम (Outstanding) |
| २ | ८० र सोभन्दा माथि ९० भन्दा कम | ३.६ | A | अत्युत्तम (Excellent) |
| ३ | ७० र सोभन्दा माथि ८० भन्दा कम | ३.२ | B+ | उत्कृष्ट (Very Good) |
| ४ | ६० र सोभन्दा माथि ७० भन्दा कम | २.८ | B | उत्तम (Good) |
| ५ | ५० र सोभन्दा माथि ६० भन्दा कम | २.४ | C+ | सन्तोषजनक (Satisfactory) |
| ६ | ४० र सोभन्दा माथि ५० भन्दा कम | २.० | C | ग्राह्य (Acceptable) |
| ७ | ३५ र सोभन्दा माथि ४० भन्दा कम | १.६ | D | आधारभूत (Basic) |
| ८ | ३५ भन्दा कम | - | NG | अवर्गीकृत (Not Graded) |

कक्षा १ देखि ३ सम्मको विद्यार्थी मूल्याङ्कन सिकाइका लागि र सिकाई उपलब्धिमा आधारित भएकाले सबै विद्यार्थीको उपलब्धिस्तर शिक्षकले कक्षा शिक्षणकै क्रममा सुनिश्चित गर्नुपर्ने व्यवस्था रहेको छ। कालिका मानवज्ञान मा.वि. ले विश्लेषण यसै अनुसारकै मूल्याङ्कन गर्दै आएको छ। आधारभूत तह (कक्षा ४-८) को पाठ्यक्रम अनुसार मूल्याङ्कन गर्दा त्रैमासिक र बार्षिक परीक्षा गर्ने व्यवस्था गरेको छ। आन्तरिक मूल्याङ्कन ५०५ अन्तर्गत सहभागिताबापत ४, प्रयोगात्मक तथा परियोजना कार्यवापत ३६ र २ वटा त्रैमासिक परीक्षाबाट प्राप्त १० अंकभार कायम गर्नुपर्ने व्यवस्था रहेको छ। साथै बाह्य मूल्याङ्कनका लागि विशिष्टीकरण तालिका अनुसार ५० पूर्णाङ्कको परीक्षामा विद्यार्थीले पाएको अंकलाई समावेश गरी मूल्याङ्कन गर्नु पर्ने व्यवस्था गरेको छ।

यस्तै कक्षा ९ र १० तर्फ आन्तरिक मूल्याङ्कन २५ अन्तर्गत सहभागीतावापत ३, प्रयोगात्मक तथा परियोजना कार्यवापत १६ र दुई वटा त्रैमासिक परीक्षाबाट प्राप्त छ अंकभारमा विद्यार्थीले प्राप्त गरेको अंकभारलाई समावेश गर्नुपर्ने व्यवस्था गरिएको छ। यसै गरी आवधिक मूल्याङ्कनका लागि विशिष्टीकरण तालिका अनुसार ७५ पूर्णाङ्कको परीक्षामा विद्यार्थीले पाएको अंक समावेश गरी मूल्याङ्कन गर्ने व्यवस्था गरिएको छ। प्रत्येक विषयको credit hour र विद्यार्थीले प्राप्त गरेको Grade point अनुसार final grade point निकाल्नु पर्ने व्यवस्था गरेको छ।

स्रोतः लेटर ग्रेडिङ निर्देशिका २०७८
www.google.com
www.mov.gov.com
www.cdc.gov.com

# बैकिङ कसूर समस्या र समाधान



● ज्ञानु के सी

अहिले अदालतमा चलिरहेका मुद्दाहरूमध्ये बैकिङ कसूर मुद्दा जटिल मुद्दाको रूपमा रहेको छ। देखा परेको छ। समाजमा यसले ठूलो आतंक सृष्टि गरेको छ। भयावहको अवस्था सृजित गरेको छ । अराजकताको स्थितिलाई जन्म दिएको छ। मानिसहरूमा अमेन चैन र निन्द्रा अपरहरण गरेको छ। कतिपय परिवारको बिचल्ली भएको छ। उठिबास भएको छ। कतिपय परिवार घरबार विहिन भएका छन्। कानूनी ज्ञानको अभावले गर्दा पनि यस्तो समस्या देखा परेको हो। सृजित भएको हो। कति मान्छेले बैंकमा पैसा नहुँदा नहुँदै पनि गर्जो टान दाहिने बायें कन्नै नसोंचीं खालि चेकमा सहीछाप गरिदिदा पनि साहुहरूले असामीबाट लिनु पर्ने पैसाभन्दा बढी रकम भरेर चेक वाउन्स गराउँदा बैंकिङ कसूर सम्बन्धी मुद्दा चलेका कारण ऋणीहरू प्रहरी हिरासत र कारगारमा नारकीय जीवन बिताउन वाध्य हुन्छन्। वाध्य भएका छन्। वाध्य बनाइएका छन्। कोविड पछि समाजमा अझ खराब प्रचलन आएको देखियो। चलेको पाइयो। पैसा व्याजमा लगाउने कतिपय व्यक्तिहरूले एउटै रकमका लागि प्रमाणको रूपमा ऋणीहरूबाट तमसुक गराउने र चेक पनि लिन थाले। यसले गर्दा उनीहरू एउटै रकममा दुई बटा मुद्दा दर्ता गराई ऋणीहरूलाई हैरान परिशान पार्न सफल भइरहेको अवस्था देखा परेको छ। उनीहरू एउटै रकमको तमसुकमा एउटा मुद्दा चलाउने र उही रकमको चेकमा अर्को मुद्दा चलाउन सफल बन्न सके। ऋणीले पनि आफूलाई पैसाको अत्यन्त आवश्यक परेको कारणले पनि उसले एउटै रकमको तमसुक पनि गरिदिने र चेक पनि दिने गरेको हुनाले अन्ततः उसले एउटै रकमको लागि दुई दुईबटा मुद्दा खेप्न परेको हो। यस अवस्थामा तमसुकको कारणले लेनदेन मुद्दा र चेकको कारणले बैंकिङ कसूरमा जाहेरी दिंदा ऋणीहरू थुनामा रही मुद्दाको पुर्पक्ष गर्नु परेको अवस्था छ। जवकि चेकबाट प्रहरीमा जाहेरी दर्ता नगरी सिधै अदालतमा चेक अनादरमा मुद्दा दर्ता गर्न पनि सकिन्छ। तर त्यसो नगरी कति खराब नियत भएका साहुहरू प्रहरीमा जाहेरी पारी पक्राउ पुर्जी जारी गराई पक्राउ गर्न लगाई अपराधीको रूपमा सजाय दिलाउनमा कम्मर कसेर लागेका हुन्छन्। लागेका छन्। ऋणीलाई हैरान परिशान पार्ने र उनीहरूमाथि खानदानी रिस इबी साध्ने दुषित भावनाले ग्रसित भएका व्यक्तिले ऋणीले ऋण तिर्न खोज्दा खोज्दै पनि बैंकिङ कसूरमा जाहेरी दिएर पकडाउने थुनाउने कार्यमा तीव्रता लिएको पाइएको छ। यस्ता व्यक्तिको लागि बैकिङ कसूर ठूलो हतियार भएको छ। यसको ठूलो दुरपयोग हुन पुगेको छ। यसबाट कति दुष्ट तत्वहरूले नाजायज फाइदा उठाइरहेका छन्।

फेरि कतिपय अवस्थामा कुनै व्यक्तिले बैकंको मौजुदा खातामा प्रयाप्त रकम नहुँदा नहुँदै पनि ठूलो रकमको चेक काटी दिंदा र चेक प्राप्त गरेको व्यक्ति बैकमा चेक भजाउन जाँदा बैंकमा प्रयाप्त पैसा नभएकोले सो रकम भुक्तानी नपाउँदा उसले तीन पटकसम्म चेक बाउन्स गराई प्रहरीमा वा अदालतमा मुद्दा दर्ता गर्ने प्रचलन पनि तीव्र रूपमा बढिरहेको देखिन्छ। कानून भन्दछ एउटै कसूरमा दुईबटा मुद्दा चलाउन र सजाय दिलाउन सकिन्न। तर व्यवहारमा यो कुरा लागू भइरहेको अवस्था छैन। यसले गर्दा व्यापार व्यवसायमा पनि प्रतिकूल असर परेको छ। समाजमा यसले नकारात्मक सदेश प्रवाह गरेको छ। यसले गर्दा कतिपय व्यक्तिहरूले आत्महत्या समेत गरेका उदाहरणहरू पाइन्छन्। कतिपय व्यक्ति डिप्रेशनका शिकार भएका छन्। कति व्यक्तिका घर जग्गा लिलाम भएका छन्। उनीहरू रातारात सुकुम्बासी हुन पुगेका छन्। महलबाट सडकमा पुगेका छन्। टाट पल्टेका छन्। बैकिङ कसुरको

कारण कति व्यक्ति चिन्ताले ग्रस्त भई बिहोश भएर ६ महिनादेखि कमामा रहेको अवस्था पनि छ। कतिपय पैसा लगानी गर्ने व्यक्तिहरू पनि ऋण लिनेले लिएको रकम चुक्ता नगर्दा उनीहरूको पनि बिचल्ली भएको अवस्था पनि रहेको छ। यसरी बैकिङ कसूरका मुद्दा मामिलामा साहु पनि पीडित बनेको र ऋणी पनि पीडित बनेको अवस्था सृजित भएको पाइन्छ। कति व्यक्ति आफू जमानी बसेर अरुलाई ऋण उपलब्ध गराई उपकार गर्छु भन्दा आफूले सहयोग गरेको व्यक्तिले भनेको बेलामा ऋण चुक्ता नगरिरिदिनाले निजकै उठिवास हुन पुगेको अवस्था पनि समाजमा व्यापक रूपमा बृद्धि भएको पाइन्छ। जे होस्, बैकिङ कसूरले समाजमा अनेकौ समस्या जन्माएको छ र बिकृति पैदा गरेको छ। यसैले सर्व साधरण जनता बैकिङ कसूर सम्बन्धमा जानकार हुन आवश्यक देखिन्छ।

बैकिङ कसूर सम्बन्धमा कानूनी व्यवस्था के कस्तो छ त्यस सम्बन्धमा सर्व साधरणका जानकारीको लागि निम्न कुरा उल्लेख गर्नु सान्दिर्भिक देखिन्छ।

बैकिङ कसूर तथा सजाय ऐन ,२०६४ को परिच्छेद २ को ३-अनधिकृत रूपमा खाता खोल्न वा रकम भुक्तानी माग गर्न नहुने।

४. अनधिकृत रूपमा चेक , चेक बुक वा बैंक बितरण प्राप्त गर्न वा दिन नहुने।
५. अनधिकृत रूपमा रकम निकाल्न वा भुक्तानी दिन नहुने।
६. विद्युतीय माध्यमको दुरुपयोग वा अनधिकृत प्रयोग गरी भुक्तानी लिन वा दिन नहुने।
७. अनधिकृत रूपमा कर्जा लिन वा दिन नहुने।
८. कर्जाको दुरुपयोग गर्न नहुने।
९. बैंकिङ स्रोत साधन र सम्पतिको दुरुपयोग गर्न नहुने।
१०. भाका नाघेको ऋणीले सम्पति प्राप्त गर्न व खाता खोल्न नहुने।
११. ऋणीको चालु परियोजनालाई नोक्सान हुने गरी ऋण बा सुविधा रोक्न नहुने।
१२. कागजात वा खाता बही सच्चाई क्रिते वा जालसाभी गरी हानि नोक्सानी पुर्‍याउन नहुने।
१३. बढी कम वा गलत मूल्यांकन गर्न नहुने।
१४. अनियमित आर्थिक तथा बित्तीय कारोबार गर्न गराउन नहुने।

**परिच्छेद ३ दण्ड सजाय सम्बन्धी व्यवस्था**

१५. दण्ड सजाय
क. दश लाखसम्म बिगो भए १ बर्षसम्म कैद।
ख. दश लाख रुपियाँभन्दा बढी पचास लाख रुपियाँसम्म बिगो भए १ बर्षदेखि २ बर्षसम्म कैद ।
ग. पचास लाख रुपियाँभन्दा बढी एक करोडसम्म बिगो भए २ बर्षदेखि ३ बर्षसम्म कैद।
घ. एक करोड रुपियाँभन्दा बढी जतिसुकै बिगो भए पनि ३ बर्षदेखि ५ बर्षसम्म कैद।

१६. बाँधा बिरोध गर्नेलाई सजाय
अनुसन्धान तथा तहकिकात गर्ने अधिकारीको आधारमा मुद्दा हेर्ने अधिकारीले ६ महिनासम्म कैद वा पाँच हजार रुपियाँसम्म जरिवाना वा दुबै सजाय गर्न सक्ने छ।

१७. जाहेरी दिने अवधि वा हद म्याद
कसूर भएको कुरा थाहा पाएको मितिले १ बर्षभित्र जाहेरी दिन सकिने छ। त्यसरी जाहेरी परेको मितिले ६ महिनाभित्र नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकी दिएको अदालत समक्ष मुद्दा दायर गरिसक्नु पर्ने छ।

१८. सरकारवादी हुने - यस ऐन अन्तर्गत सजाय हुने मुद्दा नेपाल सरकारवादी हुने छ।

१९. थुनामा राखी कारवाही गर्न सकिने।
आशा छ माथि उल्लेखित कुराले सर्वसाधरण जनतामा केही जानकारी प्रवाह गर्ने छ। उनीहरूलाई यस सम्बन्धमा सचेत र सजग पार्ने छ। उनीहरूमा आवश्यक चेतना प्रदान गर्ने छ। उनीहरूलाई बैकिङ कसूरबाट हुन सक्ने समस्याबाट मुक्ति दिलाउने छ। कानूनको अज्ञानता क्षम्य हुँदैन भनिन्छ। यसैले पनि हरेक नागरिक मुलुकको ऐन कानून तथा नीति यियमदेखि परिचित हुन आवश्यक हुन्छ।

१-९-२०८०

# नेपालको जनसङ्ख्या : एक परिचय



● **गोपीकृष्ण रेग्मी**, शिक्षक

नेपालको जनसङ्ख्या स्थिति तथा वर्तमान अवस्थाको वारेमा अध्ययन गर्न प्रत्येक १०-१० वर्षमा गरिने जनगणनालाई लिने गरिन्छ। नेपालमा जनगणना लिने प्रचलन वि.स. १९६८ सालबाट भएको हो र पछिल्लो जनगणना वि.स. २०७८ सालमा १२ औँ पटक सम्मन्न भएको छ। वि.स. २०७८ सालको जनगणना अनुसार नेपालको कूल जनसङ्ख्या २९१६४५७८ रहेको छ। जसमा पुरुषको संख्या १४२५३५५१ (४८।८७%) छ भने महिलाको संख्या १४९११०२७ (५१।१३ %) रहेको पाइन्छ। यस हिसावले पुरुष र महिलाको लैङ्गिक अनुपात ९५.५९ रहेको छ। वर्तमान समयमा नेपालमा जनसङ्ख्याको बार्षिक वृद्धिदर ०.९२ % रहेको देखिन्छ।

नेपालमा जनसङ्ख्या वृद्धिले विभिन्न किसिमका समस्याहरु उत्पन्न गरेको छ भने अर्कोतिर जनसङ्ख्याको वितरण तथा जनघनत्वमा असमानताले अझ जटिलताको स्थिति सिर्जना हुन पुगेको छ। धरातलीय स्वरुप तथा आर्थिक क्रियाकलापको कारणले गर्दा जनसङ्ख्या वितरण र जनघनत्वमा भिन्नता रहेको देखिन्छ। नेपालमा जनसङ्ख्याको वितरण तथा जनघनत्व यस किसिमको रहेको पाइन्छ।

**भौगोलिक क्षेत्रअनुसार जनसङ्ख्याको वितरण तथा जनघनत्व :**

धरातलीय स्वरुपमा असमानता भएकोले नेपालको जनसङ्ख्याको वितरण तथा जनघनत्वमा समानता छैन्। हिमाली क्षेत्रमा जनसङ्ख्या कम छ भने तराई क्षेत्रको जनसङ्ख्या अधिक रहेको छ। नेपालमा वि.स.२०७८ सालको जनगणनाअनुसार जनसङ्ख्याको वितरण तथा जनघनत्व यस प्रकार रहेको छ।

| भौगोलिक क्षेत्र | जिल्ला (संख्या) | क्षेत्रफल (वर्ग कि.मी) | क्षेत्रफल (प्रतिशत) | जनसख्या | ज.म. | जनघनत्व (प्रतिवर्ग कि.मी) |
|---|---|---|---|---|---|---|
| हिमाल | १६ | ५१८१७ | ३५.२१ | १७७२९४८ | ६.०८ | ३४.२२ |
| पहाड | ४० | ६१३४५ | ४१.६८ | ११७५७६२४ | ४०.३१ | १९१.६६ |
| तराइ | २१ | ३४०१९ | २३.११ | १५६३४००६ | ५३.६१ | ४५९.५७ |
| नेपाल | ७७ | १४७१८१ | १०० | २९१६४५७८ | १०० | १९८.१५ |

स्रोतः केन्द्रीय तथ्याङ्क विभाग, २०८०

यस तथ्याङ्कअनुसार नेपालको कूल जनसङ्ख्याको हिसाबले ठूलो प्रदेश वागमतिमा २०७९ जनसङ्ख्या रहेको छ भने कम जनसङ्ख्या रहेको कर्णालीमा केवल ५.७९ मात्र जनसङ्ख्या रहेको छ क्षेत्रफलको हिसाबले ठूलो प्रदेश कर्णालीले १९ भू भाग ओगटेको छ भने कम क्षेत्रफल रहेको मधेश प्रदेशले ६.५ भू भाग ओगटेको छ। त्यस्तै गरी जनघनत्वको हिसाबले हेर्ने हो भने सबै भन्दा वढी जनघनत्व भएको प्रदेश मधेशमा ६३३ जना मानिसहरु प्रति वर्ग कि.मी. रहेको छ नभे कम जनघनत्व भएको कर्णाली प्रदेशमा केवल ६० जना मानिसहरु प्रति वर्ग कि.मी रहेको छ। जिल्ला

संख्याको हिसावले हेर्ने हो भने धेरै जिल्ला भएको प्रदेश कोशीमा १४ जिल्लाहरु रहेका छन भने कम जिल्ला भएको प्रदेश मधेशमा ८ जिल्ला छन् ।

**गाउँपालिका र नगरपालिका अनुसार जनसङ्ख्याको वितरण :**

गाउँपालिका र नगरपालिकाको जनसङ्ख्या वितरणको अवस्थालाई अध्ययन गर्ने हो भने यसमा असमानता रहेको पाइन्छ। वर्तमान समयमा गाउँपालिकाको संख्या ४६० छ भने नगरपालिकाको संख्या २९३ (६+११+२७६) रहेका छन्। यसरी गाउँपालिका र नगरपालिका गरी स्थानीय निकायको संख्या ७५३ रहेको छ । वि.स. २०७८ सालको जनगणनाअनुसार गाउँपालिका र नगरपालिकाको जनसङ्ख्या वितरण यस प्रकार रहेको छ।

| स्थानीय निकाय | जनसङ्ख्या | जनसङ्ख्या प्रतिशत |
|---|---|---|
| १) गाउँपालिका | ९८६७७९० | ३३.८३ |
| २) नगरपालिका | १९२९६७८८ | ६६.१७ |
| नेपाल | २९१६४५७८ | १००.०० |

स्रोत केन्द्रीय तथ्याङ्क विभाग २०८०

यस तथ्याङ्क अनुसार गाउँपालिकाको जनसङ्ख्या रहेको छ। कूल जनसङ्ख्याको हिसाबले गाउँपालिकामा मानिसहरु बसोबास गर्दछन् । यसैगरी नगरपालिकाको जनसङ्ख्या रहेको छ। जुन कूल जनसङ्ख्याको ६६.१७ हिस्सा हुन आउँछ।

**जिल्ला अनुसार जनसङ्ख्याको वितरण :**

नेपालका ७७ जिल्लाहरुमा जनसङ्ख्याको वितरणमा विभिधता रहेको पाइन्छ। वि.स. २०७८ सालको जनगणना अनुसार अधिक जनसङ्ख्या भएका जिल्ला र कम जनसङ्ख्या भएका जिल्लाको अवस्था यस प्रकार छ।

**बढी जनसङ्ख्या भएका जिल्ला**

१) काठमाडौं २०१७५३ (६.९२%)
२) मोरङ्ग १११८९७५ (३.८४%)
३) रुपन्देही ९९४०९० (३.४०%)

**कम जनसङ्ख्या भएका जिल्ला**

१) मनाङ ५६४५(०.०२%)
२) मुस्ताङ १४४५२(०.०५%)
४) डोल्पा ४२७७४ (०.१५%)

नेपालमा ७७ जिल्लाहरु मध्ये सबैभन्दा जनघनत्व भएको काठमाडौं जिल्लाको जनघनत्व ५१६९ जना मानिसहरु प्रति वर्ग कि.मी.को क्षेत्रफलमा बसोवास गर्दछन्। यसै गरी सवै भन्दा कम जनघनत्व भएको जिल्ला मनाङमा केवल घ जना मानिस प्रति वर्ग कि.मी.रहेको छ।

**नेपालमा जनसङ्ख्याको वनोट**

१. नेपालमा जातजाति संख्या १४२ बढी जनसङ्ख्या भएका १० जातिको विवरण
२. धर्म अनुसार जनसङ्ख्या वनोट वि.स.२०७८

| क्र.सं. | जातजाति | जनसङ्ख्या प्रतिशत | धर्म | जनसंख्या प्रतिशत |
|---|---|---|---|---|
| १ | क्षेत्री | १६.४५ | हिन्दु | ८१.१९ |
| २ | ब्राहमण | ११.२९ | बौद्ध | ८.२१ |
| ३ | मगर | ६.९ | इस्लाम | ५.०९ |
| ४ | थारु | ६.२ | किराँत | ३.१७ |
| ५ | तामाङ | ५.६२ | इसाइ | १.७६ |
| ६ | विश्वकर्मा | ५.०४ | प्रकृति | ०.३५ |
| ७ | मुसलवान | ४.८६ | बोन | ०.२३ |
| ८ | नेवार | ४.६ | जैन | ०.०१ |
| ९ | यादव | ४.२ | शिख | ०.०१ |
| १० | राई | २.२ | वहाइ | ०.००१ |

